# कथाको प्रारम्भमा गरिने प्रार्थना

कथा भन्ने र सुन्ने सबैले चन्दन, अक्षता, फूल लिएर हात जोर्नू र पण्डितले तलको स्तुति पढ्नू

यं ब्रह्मा वरुणेन्द्ररुद्रमरुतः स्तुन्वन्ति दिव्यैः स्तवै-
र्वेदैः साङ्गपदक्रमोपनिषदैर्गायन्ति यं सामगाः ।
ध्यानावस्थित- तद्गतेन मनसा पश्यन्ति यं योगिनो
यस्याऽन्तं न विदुः सुरासुरगणा देवाय तस्मै नमः ।।१।।
श्रीमच्चन्दनचर्चितोज्ज्वलवपुः शुक्लाम्बरा मल्लिका-
मालाऽलंकृतकुण्डला प्रविलसन्मुक्तावलीशोभिता ।
सर्वज्ञाननिदानपुस्तकधरा रुद्राक्षमालाकरा
वाग्देवी वदनाम्बुजे वसतु मे त्रैलोक्यमाता चिरम् ।।२।।
मूकं करोति वाचालं पङ्गुं लङ्घयते गिरिम् ।
यत्कृपा तमहं वन्दे परमानन्दमाधवम् ।।३।।
नमो भगवते तस्मै व्यासायाऽमिततेजसे ।
यस्य प्रसादाद् वक्ष्यामि नारायणकथामिमाम् ।।४।।
नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम् ।
देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत् ।।५।।

सबैले पुष्पाञ्जलि पुस्तकमा चढाएपछि वक्ताले कथा भन्न थाल्नू। श्रोताले एकचित भएर कथा सुन्नू।

# प्रथमोऽध्यायः प्रारम्भः

## सृष्टिक्रम-उपाख्यान

पूर्वकालमा समस्त मुनिहरूमा सबै प्रकारले ख्याति प्राप्त गरेका अगस्त्य मुनि आफ्नू आश्रममा तपमा लीन थिए । एक दिन मयूरमा चढेर स्कन्द कुमार त्यहीं पाल्नुभयो । अगस्त्य मुनिले देखेर

कुमार अगस्त्य संवाद

सम्मान-साथ आसनमा बसाली स्वागत सत्कार गरिसकेपछि नम्र वाणीले सोधे-हे कुमार ! यो संसार कसरी सृष्टि भयो ? यसको विषयमा जान्न इच्छा भयो, म-उपर कृपा गरी आज्ञा भए आफूलाई धन्य सम्झने थिएँ । अगस्त्यको प्रश्न सुनेर कुमारजी भन्नुहुन्छ- हे मुने ! तिमी एकचित्त भई सुन, म तिमीलाई सृष्टिको क्रम सुनाउँछु-यो

सृष्टि प्रारम्भ हुँदा पहिले परब्रह्म परमात्माको इच्छा स्वयं स्फुरण हुनासाथ त्यही इच्छाले प्रेरित समस्त गुणले युक्त ब्रह्मा, विष्णु र शिव प्रकट भए। तिनका शक्ति-स्वरूप त्रिगुणले युक्त माया वा प्रकृति उत्पन्न भइन्। ती त्रिगुणात्मिका मायालाई जित्न वा वश पार्न अत्यन्त कठिन छ। उनै मायाभन्दा पर प्रतिष्ठायुक्त 'निवृत्ति पद' छ। त्योभन्दा पर शान्ति पद र उभन्दा पनि पर शान्त्यतीत पद छ। त्यसपछि विद्या पद छ र विद्याभन्दा पनि पर निवृत्ति पद छ। जान्नेहरू त्यसैलाई मोक्ष पद पनि भन्दछन्। यो संक्षेपमा भयो। अलि विस्तारले सृष्टिको क्रम बुझाउन र बुझ्न पनि निकै कठिन छ। संक्षेपमा भनेको कारण पनि मुख्य यही हो। प्रलय र सृष्टिको क्रम बेग्लाबेग्लै छ। एक नियमले सृष्टि हुन्छ र अर्को नियमले प्रलय हुन्छ। जो त्रिगुणात्मिका माया छन् ती शान्त्यतीत, शान्ति, विद्या, प्रतिष्ठा र निवृत्ति आदि पदमा रहन सक्तिनन्। मायाभन्दा पनि टाढा रहने जो अव्यक्त छ, त्यो आत्मामा विद्यमान छ। जीव अज्ञानी र प्रकृति जड़ हुनाले समस्त परमाणु अचेतन छन्। कारणबिना कुनै कार्य हुन सक्तैन। यसै कारण जगत्को अधिष्ठाता

परमात्माको इच्छा-बिना कुनै कार्य पनि हुन सक्तैन। यो कुरा वेद र शास्त्रले पनि स्वीकारेका छन्, तापनि वेदान्त आदि शास्त्रमा सबैको गति नपुग्ने हुनाले सबैलाई तुरुन्त निश्चय हुन सक्तैन । त्यसैकारण जन्म-मरणरूप बन्धन नछुटेर त्यसैको सुख-दुःख केवल अनुभव गर्ने जीवद्वारा यो संसारको क्रम चलिरहेको छ । यो क्रम कल्प-कल्पको भेदले भिन्न-भिन्न झैं देखिने हुँदा अनेकौं कल्पमध्ये केवल पद्मकल्पको मात्र वर्णन गर्दछु ।

ब्रह्मा, विष्णु, शिव एक हुन् । यिनमा सानो र ठूलो भन्ने भेद छैन । हे मुने ! सृष्टि गर्ने चतुर्मुख ब्रह्मा, पालन गर्ने विष्णु, संहार गर्ने रुद्र हुन् । विष्णु र शिवका आयुको अवधि वा प्रमाण छैन । ब्रह्माको सय वर्ष परमायु कहिन्छ । उनको प्रथम पचास वर्षलाई परार्ध भन्दछन् । सय वर्ष पुगेपछि उनको पनि नाश हुन्छ, वा प्रलय हुन्छ । प्रलय भएपछि समस्त संसार र यसमा रहेका वस्तुहरू केही रहन्न । अनि ईश्वरद्वारा अर्को सृष्टिको क्रम आरम्भ हुन्छ। त्यो नयाँ सृष्टि पनि अगाडि जुन क्रमले चलेको थियो सोही प्रकारले चल्न थाल्दछ । प्रलय चाहिं अनेक प्रकारले

हुन्छ । ब्रह्माको घर-गृहस्थी सबै छ, उनले पनि खानु-सुत्नुपर्दछ। उनी बस्ने लोकको नाम सत्यलोक हो । प्रातःकाल हुँदा उनले सृष्टि गर्दछन्। उनको एक दिनमै सत्य, त्रेता, द्वापर, कलि चार युग बहत्तरपल्ट घुमिसक्छन् । रात परेपछि प्रलय गर्दछन् । यही क्रमले जब ब्रह्माको सय वर्ष पुग्दछ तब महाप्रलय हुन्छ । त्यस महाप्रलयपछि फेरि पहिले-जस्तै रजोगुणले युक्त ब्रह्मा उत्पन्न गराई अहंकार र पञ्चमहाभूत, ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, पञ्चतन्मात्रा, शब्द, रूप, रस, गन्धले युक्त यौटा अण्ड उत्पन्न हुन्छ वा बन्दछ । त्यो अण्ड ब्रह्ममय हुनाले त्यसको नाम 'ब्रह्माण्ड' रहेको हो । त्यही अण्ड फुटेर दुई भाग भएपछि एक भागको प्रकृति र अर्को भागको पुरुष बन्दछ । त्यसैबाट प्रथम सृष्टि चतुर्मुख ब्रह्मा भए, पालन गर्ने अनन्तकोटि ब्रह्माण्डका स्वामी विष्णु भए, संहार गर्ने महारुद्र भए । यिनैले यो सृष्टिको कार्य निर्बाध गतिले गर्दछन् । जसको इच्छाले त्यो अण्डको उत्पत्ति हुन्छ, त्यस परब्रह्म परमात्मालाई त्रिगुण, गुणातीत, चतुर्व्यूह, अनादि, अजन्मा, हिरण्यगर्भ, प्रजापति आदि भन्दछन् । सुमेरु पर्वत समुद्रको बीचमा, समस्त जीवहरू गर्भाशयमा बालक रहेजस्तै , रहेका छन् । सूर्य, चन्द्र, ग्रह, नक्षत्र आदि पनि त्यही सुमेरुको चारैतिर स्थित छन् । निराकार आकाश

पनि त्रिगुणात्मिका माया र पञ्चमहाभूतले बेरिएझैं भई आकारवान् अर्थात् एक रूपबाट अर्को रूप देखिइन्छ, तर त्यस आकाशलाई राम्ररी विचार गर्दा आदि, मध्य, अन्त्य नभएको अनादि, अनन्त परमेश्वरको लीला मात्र हो । यो संसार नै भ्रान्तिको रूप हो किनकि उनै ईश्वरको इच्छाले सृष्टि-स्थिति-संहार हुन्छ । धागोमा दाना उनिएझैं यो संसार परब्रह्ममा उनिएको छ । अनन्तकोटि ब्रह्माण्डको गणना गर्न सकिन्न । जति ब्रह्माण्ड छन् उति नै ब्रह्मा, विष्णु, शिव, चन्द्र, सूर्य, इन्द्र, दिक्पालहरू भिन्न-भिन्न छन् । जस्तै स्वप्नमा देखिएका अनकौं सुख-दुःखको अनुभव जागा हुनासाथ केही पनि रहन्न, त्यस्तै यो मिथ्या, अनित्य संसारको सुख-दुःख पनि स्वप्न जस्तै छ । सुख-दुःख त मनले मात्र अनुभव गर्दछ । त्यसको भागी जुन मन हो, त्यसलाई आफ्नो वशमा राख्नु नै ईश्वर प्राप्तिको मुख्य बाटो हो भन्ने कुरा पण्डितले राम्ररी बुझ्नुपर्दछ । हे मुने ! तिमी पनि एकाग्र मनले तपस्या गर, अवश्य सिद्धि मिल्नेछ । मैले यो सृष्टिको क्रम संक्षेपमा सुनाएँ । अब दोस्रो अध्यायमा पद्मकल्पको वर्णन गर्नेछु, ध्यानपूर्वक सुन !

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सृष्टिक्रमवर्णनं नाम प्रथमोऽध्यायः ।।१।।*

# अथ द्वितीयोऽध्याय:

## दिक्पाल-उपाख्यान

हे मुने ! अघि यो संसार जलमय छँदा विष्णु भगवान्‌का नाभिबाट सहस्रदल कमल उत्पन्न भयो । त्यस कमलमा बसी ब्रह्मा सृष्टि गर्ने विचार गर्दै थिए, त्यही अवसरमा विष्णु भगवान्‌को काजेगुजीबाट अत्यन्त पराक्रमी मधु र कैटभ नामका दुई वीर उत्पन्न भए । ती दैत्यले जलमय संसरमा कहाँ के छ भनी घुम्दा ब्रह्मा बसेको स्थानमा पुगी कमलको डाँठ समातेर माथि गई हेर्दा ब्रह्माजीलाई देखे र उनलाई खसाल्न तयार भए। त्यो देखेर डराएका ब्रह्माले योगमायाको आराधना गरे । योगमाया प्रकट भएपछि ब्रह्माले- 'हे इश्वरी ! विष्णुलाई जागा गराइदिनुहवस्' भने र उनले ब्रह्माको कष्ट बुझी विष्णु भगवान्‌लाई जागा गराइदिइन् । भगवान् जागा भएर हेर्दा ती मधु र कैटभलाई देखी तत्काल युद्ध गर्न अघि सरे । दिव्य पाँच हजार वर्षसम्म जलमा युद्ध भयो, तर हार-जीत हुन सकेन । अनि विष्णुले- 'हे दानव हो ! तिमीहरू पराक्रमी रहेछौ, म प्रसन्न भएँ, इच्छा भएको वर माँग' भन्दा अहंकारी

मधु र कैटभले भने- 'हे विष्णु ! यस युद्धमा हाम्रो जीत भयो ! तिमी हार्नेले के दिन सक्छौ ? बरु तिमीलाई इच्छा लागेको वर हामीसँग माँग ।' दैत्यहरूको त्यस्तो अभिमानपूर्ण कुरा सुनी विष्णुले भन्नुभयो- 'पहिले वाचा गर, अनि म वर माँग्दछु ।' अनि दानवले- 'तिमीले जे माँगे पनि अवश्य दिनेछौँ' भन्ने वाचा गरेपछि विष्णु भगवान्ले- 'अरू वर के माँगूँ, तिमी दुवैलाई म मार्दछु, मेरा हातबाट मर' भनेको सुनी मधु र कैटभले भने- 'हे विष्णु ! तिमी छली रहेछौ, कपट गरेर वर माँग्यौ, वाचा हारेको हुनाले

विष्णु भगवान्ले मधुकैटभलाई मारेको

हामी दिन्छौं ।' अब के गर्ने भनी विचार गर्दा सारा संसार जलमय देखी भने- 'हे विष्णु ! हामीलाई जल नभएको स्थानमा मार। दैत्यका

त्यस्ता कुरा सुनी विष्णुले आफ्नू काखामा राखेर सजिलैसित दुवैलाई मारे। तिनै दैत्यको बोसो शीतकालमा तुषारोले पानी जमे-झैं समुद्रको जलमा जमेर पृथ्वी भइन् । मासुले पर्वत र हाड़ले पत्थर भयो । त्यो देखेर ब्रह्माले संसार सृष्टि गर्न भनी पहिले चौध भुवन सृष्टि गरे । कुन-कुन भने- १- भूर्लोक, २- भुवर्लोक, ३- स्वर्लोक, ४- महर्लोक, ५- जनलोक, ६- तपोलोक, ७- सत्यलोक । यी माथिका र १- अतल, २- वितल, ३- सुतल, ४- तलातल, ५- महातल, ६- रसातल, ७- पाताल । यति तलका जम्मा चतुर्दश भुवन र द्वीप सृष्टि गरे । कुन-कुन भने- १- जम्बूद्वीप, २- प्लक्षद्वीप, ३- शाल्मलीद्वीप, ४- कुशद्वीप, ५- क्रौंचद्वीप, ६- शाकद्वीप, ७- पुष्करद्वीप। त्यसपछि सात समुद्र सृष्टि गरे- १- क्षारोद समुद्र, २- सुरोद समुद्र, ३- इक्षुरसोद समुद्र, ४- घृतोद समुद्र, ५- दधिमण्डोद समुद्र, ६- क्षीरोद समुद्र, ७- शुद्धोद समुद्र । जम्बूद्वीप क्षारोद समुद्रले वेष्टित छ, त्यहाँ अग्नीध्र राजा राज्य गर्दछन् । प्लक्षद्वीप इक्षुरसोद समुद्रले वेष्टित छ, त्यहाँ इध्मजिह्व राजा राज्य गर्दछन् । शाल्मलीद्वीप सुरोद समुद्रले वेष्टित छ, त्यहाँ यज्ञबाहु

राजा छन् । कुशद्वीप घृतोद समुद्रले वेष्टित छ, त्यहाँ हिरण्यरेता राजा छन् । क्रौंचद्वीप क्षीरोद समुद्रले बेरिएको छ, त्यहाँ धृतपृष्ठ राजा छन् । शाकद्वीप दधिमण्डोद समुद्रले बेरिएको छ, त्यहाँ मेधातिथि राजा राज्य गर्दछन्। पुष्करद्वीप शुद्धोद समुद्रले वेष्टित छ, त्यहाँ वीतिहोत्र राजा राज्य गर्दछन् । जम्बूद्वीपको विस्तार चार लाख कोश छ । यसको आकार कमलगट्टा जस्तै छ । यसमा नौ-नौ हजार योजनका नौ खण्ड छन् । यस प्रकार सृष्टि गरिसकी अष्ट पर्वत सृष्टि गरे । कुन-कुन भने १- सुमेरु पर्वत, २- गन्धमादन पर्वत, ३- कैलास पर्वत, ४- हिमालय पर्वत, ५- त्रिकूट पर्वत, ६- चित्रकूट पर्वत, ७- चन्द्रान्तक पर्वत, ८- चन्द्रकूट पर्वत । त्यसपछि प्राणी सृष्टि गरूँ भनेर महादेवको तपस्या गरे । दिव्य बाह्र हजार वर्ष कठोर तपस्या गरेपछि महादेव प्रकट भएर-ब्रह्मन् ! तिम्रो तपस्याले म प्रसन्न भएँ, वर माँग भन्ने आज्ञा भएको सुनी ब्रह्माले अनेक उपचारले शिवको पूजा गरी स्तुति गर्न लागे- 'हे ईश्वर ! आफैंले अनेक ब्रह्माण्डको रचना गरी आफ्नै मायामा भुलिरहेका यस्ता हजुरलाई कोटि-कोटि नमस्कार। एक मूर्तिबाट

तीन मूर्ति ब्रह्मा, विष्णु, शिव भइरहेका यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । हे ईश्वर ! हजुरको महिमा वर्णन गर्न शेष र शारदाले पनि नसकेको म कसरी समर्थ हुनेछु ? हजुरको कृपाले द्वीप, समुद्र, पर्वत सृष्टि गरें । अब प्राणी सृष्टि गर्न सकूँ, यही वर दिनुहवस्' भनी बिन्ती गरे। ब्रह्माजीको प्रार्थना र आग्रह बुझी महादेवले आज्ञा भयो- 'हे ब्रह्मन् ! तिमी प्राणी सृष्टि गर्न सके' भनी वरदान दिनुभयो। अनि ब्रह्माले महादेव-लाई दण्डवत् गरी प्राणी सृष्टि गर्न सुमेरु पर्वतमा गए । पहिले शिवलोक, विष्णुलोक, ब्रह्मलोक, उमालोक, स्कन्दलोक र अरू अनेक लोक सृष्टि गरे । तिनमा सबभन्दा माथि सत्यलोक सृष्टि गरे । अनि सुमेरु पर्वतको पूर्व दिशामा अमरावती, आग्नेय कोणमा शुद्धावती, दक्षिण दिशामा यमपुरी, नैर्ऋत्य कोणमा कृष्णावती, पश्चिम दिशामा श्रद्धावती, ईशान कोणमा यशोवती नामका पुरीहरू रचना गरे। त्यसपछि स्थावर-जंगम सृष्टि गरे । अनि प्राणी सृष्टि गर्ने इच्छा भयो र मनले चिताउनासाथ कश्यप प्रभृति एक सय ऋषि सृष्टि भए । त्यति सुनेर अगस्त्य मुनिले सोधे- 'हे कुमारजी ! हजुरको वचनरूपी अमृत मेरो कानरूपी

जिब्रोले बराबर पिउन माग्दै छ । अब देव, दानव, पशु-पक्षी, मनुष्य कसरी सृष्टि भए ? त्यो सुन्ने इच्छा छ।' मुनिको इच्छा जानेर कुमारजी आज्ञा गर्नुहुन्छ- 'हे मुने ! कश्यप ऋषिका १-अदिति, २- दिति, ३- दनु, ४- कारा, ५-घोरा, ६- सिंहिका, ७- क्रोधा, ८- प्राधा, ९- बलिष्ठा, १०- विनता, ११- कपिला, १२- कद्रू र १३- मनु यस्ता स्त्रीहरू थिए । अतः दितिका गर्भबाट हिरण्यकशिपु आदि दैत्य जन्मे । अदितिका गर्भबाट चन्द्र-सूर्य आदि तेत्तीस कोटि देवताहरू जन्मे । दनुका गर्भबाट दानवहरू जन्मे। कारा-घोराका गर्भबाट गन्धर्वहरू जन्मे । सिंहिकाको गर्भबाट राहु जन्म्यो । प्राधाका गर्भबाट उर्वशी आदि अप्सराहरू जन्मे। क्रोधाका गर्भबाट क्रोध जन्म्यो । मनुका गर्भबाट ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र यी चार थरी मनुष्य जन्मे । बलिष्ठा र विनताका गर्भबाट अरुण, गरुड़, सम्पाती, मयूर, कोकिल, चखेवा, जीवञ्जीव, मुनियाँ, धोबिनी, राजहंस आदि पक्षीहरू जन्मे। कपिलाका गर्भबाट कामधेनु, सिंह, शार्दूल, बाघ, हात्ती-घोड़ा, मृग, जरायो, गैंड़ा, खरायो आदि पशुहरू जन्मे । कद्रूका गर्भबाट शेषनाग, अनन्तनाग,

पद्मनाग, वासुकिनाग, कुलिकनाग, कर्कोटकनाग, तक्षकनाग, शङ्खनाग आदि अष्टनागहरू जन्मे । यसरी देवता, ऋषि, यक्ष, गन्धर्व, किन्नर, अप्सरा, नाग, मनुष्य, पशु-पक्षीहरू सृष्टि भएको देखी ब्रह्माले तिनीहरूलाई खाने आहारा धान, जौ, तिल आदि अनेक तरहका अन्न र फल-मूल सृष्टि गरे । हे मुने ! यो मैले अत्यन्त संक्षेपमा भनेँ। अरू पुराणहरूबाट विस्तारले बुझ्नेछौ। यो सृष्टिका कुरा सुनाएँ, अब के सुन्ने इच्छा छ ? भन भन्दा अगस्त्य मुनि भन्दछन्- हे कुमार ! कुन-कुन भुवनमा कुन-कुन देवता छन् र दिक्पाल कसरी भए? यो सुन्ने इच्छा छ। त्यति सुनी कुमारजी आज्ञा गर्नुहुन्छ-हे मुने ! कैलास भुवनमा महादेव हुनुहुन्छ । वैकुण्ठ भुवनमा विष्णु भगवान् छन् । सत्य भुवनमा ब्रह्मा छन् । उमा भुवनमा पार्वती छन्। स्कन्द भुवनमा म छु । धूम्र भुवनमा धूम्र ऋषि छन्। नैर्ऋत्य भुवनमा अन्य ऋषिहरू छन् । यति भुवनका कुरा कहेँ, अब दिक्पाल भएका कुरा भन्दछु । कश्यप ऋषिका छोरा इन्द्रले हिमालयमा गई धेरै कालसम्म कठोर तपस्या गरे । महादेव प्रसन्न भई 'हे इन्द्र ! तिम्रो तपस्याले म प्रसन्न भएँ' भनी वरदान दिई अमरावतीको

अधिपति र पूर्वदिशाको दिक्पाल बनाई पठाए। फेरि यौटाले गई उसै गरी तपस्या गर्दा महादेव प्रसन्न भएर अग्नि नाम राखी अग्निकोणको दिक्पाल बनाई शुद्धावतीको अधिपति गराई पठाए । फेरि अर्कोले गई त्यसै गरी तपस्या गरे। महादेव प्रसन्न भई 'यम' नाम राखी दक्षिण दिशाको दिक्पाल बनाई यमपुरीको अधिपति गराई पठाए। फेरि यौटाले गई त्यसै गरी तपस्या गरे। महादेव खुशी भई निर्ऋति नाम राखी नैर्ऋत्य कोणको दिक्पाल र कृष्णावतीको अधिपति गराई पठाए । फेरि अर्कोले गई त्यसै गरी तपस्या गरे । महादेव प्रसन्न भई 'वरुण' नाम राखी पश्चिम दिशाको दिक्पाल र श्रद्धावतीको अधिपति गराई पठाए । फेरि उनञ्चास वायुले गई त्यसै गरी तपस्या गरे । महादेव प्रसन्न भई वरदान माँग भन्दा ती वायुले'हामी उनञ्चासै जना एक हुन सकौं र हामीलाई कोही नदेखून् केवल शब्द मात्र सुनून् ,बलमा पनि कसैले जित्न नसकून्' भनी माँग्दा महादेवले 'तथास्तु' भनी वरदान दिएर वायु नाम राखी वायव्य कोणको अधिपति गराई पठाए । फेरि यौटाले गई त्यसै गरी तपस्या गरे । महादेव खुशी भई कुबेर नाम राखी उत्तर

दिशाको दिक्पाल र अलकापुरीको अधिपति गराई पठाए । फेरि यौटाले गई त्यसै गरी तपस्या गरे । महादेव प्रसन्न भई विश्वकर्मा नाम राखी ईशान कोणको दिक्पाल र यशोवतीको अधिपति बनाई पठाए। हे मुने ! यति दिक्पाल भएको कुरा कहेँ, अब के सुन्ने इच्छा छ ? भन । कुमारको यस्तो वचन सुनी अगस्त्य मुनि भन्नु हुन्छ-'महादेव र सतीदेवीको विवाह भएको र सतीदेवी मर्दा उत्पात भएको, फेरि सतीदेवी महादेवकी पत्नी कसरी भइन् र कस्तो कारण परेर उनको मृत्यु भयो ?' यो सबै विस्तारले आज्ञा हवस्  भन्दा मुनिको यस्तो इच्छा जानी प्रसन्न भएका कुमारजीले-यो कुरा तेस्रो अध्यायमा वर्णन गर्नेछु भन्नुभयो।

*।। इति श्री स्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां दिक्पालवर्णनं नाम द्वितीयोऽध्यायः ।।२।।*

अलका को कुबेर भवन

# अथ तृतीयोऽध्यायः

## दक्षकन्या-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ-हे अगस्त्य मुनि ! अष्ट प्रजापतिमा सबभन्दा जेठा दक्षप्रजापति थिए। तिनकी विरणी नामकी साध्वी एवं पतिव्रता स्त्री थिइन् । विरणी गर्भिणी भइन् र दशमास पूर्ण भएपछि पुत्री जन्मिइन् । कस्ती कन्या भने- हजार सूर्यको जस्तो नेत्र भएकी, बत्तीस लक्षणले युक्त, पद्मपत्र जस्ता नेत्र भएकी, अरुण उदय भए-जस्तो रक्तवर्ण भएकी, हात्तीका सूँढ जस्तो हात भएकी, कदलीस्तम्भ जस्तो तिघ्रा भएकी, चन्द्रमाको जस्तो उज्ज्वल र शान्त मुख भएकी यस्ती परम सुन्दरी कन्या जन्मेकी देखी दक्षप्रजापतिले आनन्द मान्दै आफ्ना गुरु प्रोहित वसिष्ठ आदि ज्योतिषीहरूलाई डाकी विधिपूर्वक न्वारान गराए । सबै ऋषि ज्योतिषीले गणना गरेर भने-'हे दक्षप्रजापति ! यी बालिकाको नाम 'सतीदेवी' भन्ने तीनै भुवनमा प्रख्यात हुनेछ । दक्षप्रजापतिले भोजन गराई दक्षिणा दिई बिदा गरे । सबै जना आफ्ना-आफ्ना आश्रममा गए। हे मुने ! यो कुरा धेरै लामो छ तापनि म संक्षेपमा

भन्दछु । त्यसपछि विरणीका क्रमैले तेत्तीस कोटि कन्या जन्मे । ती सबैलाई दुवै दम्पतीले यथायोग्य रूपमा पालन गरे । अनि अगस्त्य मुनिले सोधे- हे कुमार ! ती कन्याहरूको विवाह तेत्तीस कोटि देवतासँग कसरी भयो ? त्यो पनि सुन्ने इच्छा छ । त्यति सुनी कुमार आज्ञा गर्दछन्- 'हे अगस्त्य मुनि ! एक दिन स्वर्गका देवता, ऋषि, यक्ष, गन्धर्व, किन्नर, दश दिक्पाल जम्मा भई सभा गरेर भने-हाम्रा स्त्री छैनन्, दक्षप्रजापतिका तेत्तीस कोटि कन्या विवाह गरौं, तर कन्या माँग्न कसलाई पठाउने ? भनी मत मिलाई नारदजीलाई डाकी सबै कुरा बुझाएर ''दक्षप्रजापतिकहाँ कन्या माँग्न जाऊ'' भन्दा नारदजीले स्वीकार गरी दक्षप्रजापतिका घर गए । दक्षप्रजापतिले उचित शिष्टाचार गरेर 'के कामले पाल्नुभएको' भनी सोधे-आफूलाई देवताहरूले पठाएको कुरा सुनाई 'हे दक्ष ! तिम्रा तेत्तीस कोटि कन्या तेत्तीस कोटि देवताहरूलाई देऊ' भने । नारदजीका त्यस्ता कुरा सुनी दक्षप्रजापति प्रसन्न भएर भने-'हे नारद! तिमीले असल कुरा भन्यौ । म धन्य रहेछु । मेरा तेत्तीस कोटि कन्या तेत्तीस कोटि देवतालाई तिम्रो वचनले दिएँ । यौटी सतीदेवी मात्र दिनछैन,

किनकि मेरा पुत्र छैनन्, सम्पत्तिको रक्षा को गर्ला ? अरू सबै कन्या तिमी जहिले भन्छौ र जस-जसलाई दिन भन्नेछौ उसै-उसैलाई दिनेछु। अब यहाँबाट गएर विवाहको दिन ठहराई पठाउन लगाऊ' भनी अनेक उपचारले पूजा गरे । तब नारदजी: दक्षसित बिदा माँगी सरासर स्वर्ग गए । नारद आएको देखी देवताहरूले 'तिमी गएको काम के भयो ?' भनी सोधे । नारदजीले 'सतीदेवी-बाहेक अरू सबै कन्या दिन्छु' भने भन्ने कुरा सुनाए । अनि देवताहरूले 'धन्य नारद मुनि !' भन्दै प्रशंसा गरी विवाहको दिन ठहराई पठाए । त्यसपछि विवाहको सामग्री तयार गरी देवताहरू कन्यादान लिन भनी दक्षका घर पुगे । उनले देवताहरू आएको देखी आनन्द मान्दै मंगलयात्रा गर्दै आफ्नू मर्यादाले सतीदेवी-बाहेक तेत्तीस कोटि कन्या नारदजीको आज्ञानुसार तेत्तीस कोटि देवतालाई कन्यादान दिए । देवताहरू कन्यादान पाई हर्षपूर्वक आफाफ्ना स्त्री लिई आफाफ्ना आश्रममा गए । यो वृत्तान्त कैलास पर्वतमा रहेका शिवजीले थाहा पाएर देवताहरूले मलाई बाहेक पारी, एक वचन पनि नसोधी आफू-आफूले कन्यादान लिएछन् । कैलासको स्वामी

भएर पनि मेरा स्त्री छैनन् । अब मलाई कसले कन्या देला ! भनी ध्यान-दृष्टिले विचार गरेर हेर्दा दक्षकी तेत्तीस कोटि कन्यामा सबभन्दा जेठी बाँकी नै रहिछन् । देवताहरूले मेरो मर्यादा राखेकै रहेछन् । अब ती कन्या माँग्न कसलाई पठाऊँ? आफै जान्छु भनी दक्षका घर गए । दक्षले महादेव आउन लागेको परैबाट देखी विरणीसित भने-हे स्त्री ! त्यो आउन लागेको महादेव हो, के भन्न आयो ? भनी कुरा गर्दागर्दै महादेव घरमुनि पुगेर बोलाउनुभयो । अनि दक्षले झ्यालबाट हेरेर 'माथि आइज' भनी डाके र सोधे- हे महादेव ! आज तँ मेरा घरमा के कामले आइस् ? भनी हेलाँ गरेर बोले । अनि महादेव भन्नुहुन्छ- 'हे दक्षप्रजा-पति ! तिम्रो घर आउने मेरो अरू केही प्रयोजन थिएन । तिमीले कृपा गर्नाले तेत्तीस कोटि देवताले कन्यादान पाएर उद्धार भए । अब सतीदेवी रहेकी रहिछन्, म योग्य पनि छु, ती कन्या मलाई कृपा गर ।' महादेवको यस्तो वचन सुन्नासाथ दक्ष-प्रजापति अत्यन्त रिसाई भने-' हे पापिष्ठ महा-देव ! मेरी कन्या सतीदेवी तेरो योग्य कसरी होली ? तँ कस्तो भने मशानको खरानी घसी, सर्पको गहना लगाई, बाघको छाला ओढेर डमरु-

त्रिशूल लिई, बूढ़ो साँढेमा चढेर हिंड्ने, विष-भाङ-धतूरो खाई भूत-प्रेत नचाई मशानमा बस्ने, दिगम्बर, देख्दैमा पनि घिन लाग्ने, यस्तो तैंले मेरै मुख्याञ्जी आई यस्तो अयोग्य कुरा गरिस् । जा, मेरो घरमा नबस्' भनी पाखुरामा समाती धपाए। महादेवले त्यस्तो किसिमसित दक्षले क्षुद्रवचनद्वारा निन्दा गरेको सुनी साह्रै नै चित्त दुखाई बाहिर आएर 'नदिने भए दिन्नँ भने भइजान्थ्यो, यस्तो निन्दा गर्ने काम थिएन । अब कहाँ जाऊँ ? के गरूँ ? ती कन्या कसले मलाई पारिदेला ?' भन्ने तर्क-वितर्क गर्दै विष्णुको वैकुण्ठधाममा पुग्नुभयो । विष्णुले शंकरजी आएको देखी हत्तपत्त उठेर उच्चासनमा बसाली- 'के कामले आज परिश्रम गर्नुभयो?'भनी सोधे । अनि महादेवले आफू दक्षका घर गएको र उनले दुर्वाच्य बोली अपमान गरेको सबै कुरा सुनाइसकेपछि 'हे विष्णु ! मेरा स्त्री छैनन्, त्यसैले घर पनि छैन' यही कुरा गर्न आएको हुँ । अब जसरी ती कन्या मेरी हुनेछन् त्यही काम गर' भन्नुभयो । महादेवको वचन सुनी विष्णुले भन्नुभयो-'हे ईश्वर ! यो काम म पार लगाउँला । हजुरले सन्देह गर्नु पर्दैन ! म अहिल्यै दक्षको घर जान्छु। म फर्केर नआउञ्जेल हजुर यहीं राज गर्नुहोला' भनी

महादेवलाई पर्खाई आफू दक्षप्रजापतिको घर जानुभयो । दक्षले विष्णु आएको देखी माथि

विष्णुकहाँ महादेवजी सतीदेवी मलाई विवाह गराइदेऊ भन्न जानुभएको

डाकेर आदरपूर्वक बसाली- 'हे विष्णु ! आज मेरो घर किन पवित्र पार्नुभयो ? आज्ञा हवस्' भनी सोधेपछि विष्णुले आज्ञा गर्नुभयो- 'हे दक्षप्रजापति ! केही माँग्न आएको हुँ, दिने भए मात्र माँग्दछु ।' त्यति सुन्नासाथ दक्षले भने- 'हे विष्णु ! तिमीले माँगेपछि जे वस्तु भए पनि दिनेछु । के चाहियो, आज्ञा गर !' त्यति सुनी विष्णु भन्नुहुन्छ- 'हे दक्षप्रजापति ! म वैकुण्ठको अधिपति भएर पनि मेरा स्त्री छैनन् । तिमीले कृपा गर्नाले तेत्तीस कोटि देवता कन्यादान पाई उद्धार भए। अब सतीदेवी छन्, ती मलाई कृपा गर ।' विष्णुको यस्ता वचन सुनी दक्षले चिन्तित हुँदै भने- 'हे विष्णु ! मेरा पुत्र नहुनाले सम्पत्तिको

रक्षा गर्न राखेको, दिनु त उचित थिएन, तर वाचा गरेको हुनाले दिन कर लाग्यो, ती कन्या तिम्री भइन् । अब सुदिन ठहराई कन्यादान लेऊ ।' यति दक्षको वचन सुनी विष्णुले 'हुन्छ' भनी बैकुण्ठ जानुभयो । अनि विष्णु आएको देखेर महादेवले सोध्नुभयो- 'हे विष्णु ! तिमी गएको काम कस्तो भयो ?' अनि विष्णुले उत्तर दिए- 'हे ईश्वर ! म गएको काम पुग्ला जस्तो त भयो, तर आफैँलाई भनी माँगेर आएको छु । हजूर वृद्ध संन्यासीको रूप धारण गरी कन्यादान दिने ठाउँमा आई भिक्षा माँग्नू र 'मलाई भिक्षा नदिई कन्यादान दिए-लिने-दिने दुवैलाई श्राप दिनेछु' भन्नुहोला । अनि म- 'हे संन्यासी ! मेरो लग्न बित्न लाग्यो, कन्यादान भइसकेपछि भिक्षा दिनेछु, नसराप, बरु यहाँ आएर बस' भनी आफू बसेके छेउमा बसालिराख्नेछु र दक्षले कन्यादान दिंदा उसका आँखा छली सतीदेवीको हात हजुरको हातमा पारिदिनेछु । यस दिन, यो बेला आउनुहोला' भनी दक्षसित भएको सबै विवरण एक-एक गरी सुनाउनुभयो। विष्णुको त्यस्तो कुरा सुनेर प्रसन्न भएका महादेव 'अवश्य आउनेछु' भनी गद्गद चित्तले कैलासमा जानुभयो ।

।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां दक्षकन्याविवाहवर्णनं नाम तृतीयोऽध्यायः ।। ३ ।।

# अथ चतुर्थोऽध्यायः

## सतीविवाह-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि कन्यादान लिने दिन आयो र महादेव आउनुहोला भन्ने विचार गर्दै विष्णु दक्षको घर पुग्नुभयो । उनले सम्पूर्ण सामग्री तयार गराई अन्य विधान पूरा गरेर कन्यादान गर्न तयार भए । उता महादेव भने दक्षको घर जान बिर्सेर विष, भाङ, धतुरो खाई अचेत जस्तै भए । अनि विष्णुले अझसम्म महादेव आउनुभएन, कन्यादानको वेला भइसक्यो, आफ्नू हातमा थापूँ भने महादेवलाई हुँदैन, अब के गरूँ भनी व्याकुल हुन लागे । उता महादेव अकस्मात् झसंग भई- 'कन्यादान दिने दिन आजै हो, विष्णु पुगिसके होलान्, वेला पनि भयो होला' -यस्तो सम्झी, तत्काल वृद्ध संन्यासीको रूप धारण गरी दक्षको घर पुगी भिक्षा माँगे- 'हे विष्णु ! म धेरै परबाट आइरहेको छु, भोक लागिरहेछ, पहिले मलाई भिक्षा नदिई कन्यादान गरे लिने-दिने दुवैलाई श्राप दिनेछु।' ती संन्यासीरूप महादेवको यस्ता वचन सुनी विष्णु भन्नुहुन्छ -'हे भिक्षुक ! लग्नको

समय बित्न लाग्यो, कन्यादान भइसकेपछि भिक्षा दिएर सन्तुष्ट गराउँला, अहिले म बसेको ठाउँमा आएर बस' भनी आफू बसेकै सिंहासनको छेउमा बसाउनुभयो। महादेव कस्तो समयमा पुग्नुभयो भने-विरणीले सुनको कमण्डलुले धारा दिई

सतीदेवीको हात विष्णुको छलले महादेवको हातमा पारिदिएको

दक्षप्रजापतिले सतीदेवीको हात समाती विष्णुको हातमा सुम्पन लागेको-यस्तो समयमा पुग्नुभयो र विष्णुले आफ्नो मायाले ढाकेर दक्ष-दम्पतीको आँखा छली सतीदेवीको हात संन्यासीरूप महादेवको हातमा पारिदिनुभयो । त्यो देखेर दक्षले अत्यन्त दुःखी भई विष्णुको मुखमा हेरी-तिमी भारी कपटी रहेछौ, तिम्रो विश्वासमा पर्दा आज मेरी पुत्री सतीदेवी यो अवस्थामा पर्न गई। दक्षको त्यस्ता कुरा सुनेर पनि सुन्या नसुनै गरी केही

उत्तर नदिई संन्यासीरूप महादेवसित 'जान्छु' भनेर वैकुण्ठ गए । त्यसपछि दक्षले छोरीतर्फ हेरेर भने- 'हे सती ! पापिष्ठ विष्णुको छलमा परेर यो वृद्ध संन्यासी स्वामी पाए पनि चिन्ता गर्नु-पर्दैन । हामी छँदै छौँ, तँलाई दुःख हुन दिने-छैनौँ । अहिले उसैसित जाऊ।' पिताको यस्तो वचन सुनेर सबै बहिनीहरूले देवता स्वामी पाएको सम्झी-'म धिक्कार रहिछु' भनी विषाद गरी रुन लागिन् । फेरि 'विधाताले मेरो ललाटमा यस्तै लेखेको रहेछ, अब रुनु व्यर्थ छ; जस्तो भए पनि माता-पिताले दिएका मेरा स्वामी यिनै हुन्' भनी धैर्य धारण गरिन् । त्यसपछि संन्यासीरूप महादेवले सतीदेवीतर्फ हेरेर भने-'हे स्त्री ! अब यहाँ बसेर के गर्ने ? आफ्नू घर जानुपर्छ । माता-पितासित बिदा माँगेर आऊ।' स्वामीको यस्तो आज्ञा सुनी 'हवस्' भनी माता- पिताको नगीच गएर-'हे माता-पिता ! अब आज्ञा पाए म जाने थिएँ' भनिन् । अनि दक्षप्रजापति र विरणीले धैर्य धारण गरेर-'जाऊ' भनी बिदा दिए। सतीदेवीले माता-पितालाई प्रणाम गरी संन्यासीरूप महादेवको अगाडि लागेर हिंडिन् । निकै पर

पुगेपछि संन्यासीरूप महादेव आज्ञा गर्नुहुन्छ-'हे प्रिये ! घरबाट कहिल्यै बाहिर ननिस्केकी, सदा सुखमा पालिएकी, अत्यन्त कोमल अंग भएकी तिमीलाई परिश्रम पर्ला, सुस्त-सुस्त हिंड ।' पतिको मधुर वचन सुनेर सतीदेवी भन्न लागिन्- 'हे स्वामी ! म त हिंड्न सक्तछु, हजुरको वृद्धाऽवस्था छ, परिश्रम पर्ला, बिस्तार-बिस्तार हिंडिबक्सियोस् ।' यस्तै किसिमका अनेक कुरा गर्दै गए। सतीदेवीले आफ्ना स्वामीको वृद्धाऽवस्था देखी 'यी वृद्ध अवस्था भएका, म युवति, मेरा स्वामीलाई कसैले केही गरी मेरो अपहरण पो गर्ने हो कि ! भन्ने चिन्ता गर्दै एकछिन पनि नछाड़ी पछि लागेर गइन् । कैलासमा पुगेर महादेवले सतीदेवीको चरित्र हेर्नको लागि कैलासकै टाकुरामा यौटा खरको झुपड़ी उत्पन्न गरी-'हे स्त्री ! हाम्रो घर त्यही हो, आइपुग्यों' भन्दै औंलाले देखाए, अनि 'अब तिमी घरभित्र जाऊ, भोक पनि लाग्यो होला, जे छ झिकेर खाऊ। मलाई परिश्रम भयो, एकछिन सुत्तछु' भनी विष-भाङ-धतुरो खाई बाहिरै सुते । सतीदेवीले त्यो खरको झुप्रो देखी आफ्ना पिताको घर सम्झेर-त्यस्तो सुवर्णको घरमा बसेकी

मलाई यस्तो खरको झुपड़ीमा बस्नुपऱ्यो भनी मनमा विषाद गरी आँखाबाट आँसुका धारा बगाइन् । फेरि 'मेरो कर्मले यस्तै पारिल्यायो, के गरूँ' भनी मन बुझाइन् र पछ्यौराले आँसु पुछी घरभित्र पसिन् । भित्र हेर्दा त सबै ठाउँमा माकुराको जालो र कसिंगर मात्र देखिन् । अनि कुचोले माकुराको जालो फाली राम्रोसित बढारेर सफा पारिन् । अनि स्वामी जागा भएपछि खान के दिने भनेर भण्डारमा हेर्न पुगिन् ,तर त्यहाँ केही फेला पारिनन् र मनमा विषाद गरी महादेव सुतेको स्थानमा गई खुट्टामनि बसिरहिन् । चार दिन बितेपछि महादेव जागा हुनुभयो र सतीदेवीको मुखमा हेरी- 'हे पापिनी स्त्री ! मलाई बाहिर एक्लै सुताई आफू भित्र सुतिस्, त्यसो गरे पनि के तँलाई खानुपर्दैनथ्यो ? केही खाइस् कि खाएकै छैनस् ?' भन्दै अनेक तरहले रिसाउन लागेको देखी, हँस्याइलो मुख गरी स्वामीको मुखमा हेरी- 'हे स्वामी ! हजुरलाई गहिरो निद्रा परेको देखी जागा गराउन सकिनँ र म सुतेकी पनि छैन । यहीं बसिरहेकी छु । मैले त भण्डारमा जे भएको खाइसकेँ । अब हजुर के खानुहुन्छ ?' भनिन्।

सतीदेवी कस्ती भने सधैँ शृंगार गरी, रिसमा पनि रसमा पनि उज्यालो मुख गरी स्वामीकै भक्तिमा चित्त लगाइरहन्थिन् । सतीदेवीले त्यति भनेपछि त्यहाँ के थियो र खाइहोली भनी करुणामूर्ति शिवलाई अत्यन्त करुणा भयो र- 'हे प्रिये ! हाम्रो घर यो होइन, त्यो खरको भित्ता च्यातेर हेर त !' भन्नुभयो र सतीदेवी भन्दछिन्- 'हे स्वामी ! भएको घर नाशी नभएको घर कहाँ हेर्न जाऊँ । फेरि बनाउनुपरेमा हजुर वृद्ध, म नारी जाति कसले बनाइदेला ?' सतीदेवीको यस्तो वचन सुनी महादेव जुरुक्क उठेर खरको भित्तामा लात्तले हानी उज्ज्वल कैलासको दर्शन गराइदिनुभयो । अनेक मणिमाणिक्य जड़ेको, सुनैसुनले बनेको त्यस्तो दिव्य महल देखेर सतीदेवी प्रसन्न भई मेरा पिता दक्षप्रजापतिको घरभन्दा पनि अत्यन्त राम्रो यो घर कसको होला ! भन्ने विचार गरिन् । अनि संन्यासीरूप महादेवले आफ्नू दिव्य रूपको दर्शन दिन सतीदेवीलाई चोकमा डाकेर लगे, अनि 'हे स्त्री ! यो चोकको माझमा गाईको गोबरले मण्डलाकार गरी लिपिदेऊ भने '। सतीदेवीले तत्काल आज्ञा पालन गरिन् ।

अनि महादेवले त्यो लिपेको स्थानमा बसी निर्मल स्फटिकको जस्तो विश्वम्भर मूर्तिको दर्शन दिनु भयो । अनि सतीदेवीले मनमा आनन्द मानी हर्षको आँसु बगाई- 'म धन्य रहिछु, जगदीश्वर महादेव स्वामी पाएँ' भनी महादेवलाई फूलको माला पहिराई, तीनपल्ट प्रदक्षिणा गरी साष्टांग दण्डवत् गरिन् । त्यसपछि ती दुवै शिव-शक्ति स्वरूपले रहँदा भए ।

।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सतीदेवीविवाहवर्णनं नाम चतुर्थोऽध्यायः ।।४।।

# अथ पञ्चमोऽध्यायः

## त्रिपुरदाह-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- 'हे अगस्त्य मुनि ! तिमीले सोधेको सबै प्रश्नको उत्तर दिइसकेँ । अब के सुन्ने इच्छा छ?भन । म सबै सुनाउन तयार छु ।' त्यति सुनी अगस्त्य मुनिले बिन्ती गरे- 'हे कुमारजी ! त्रिपुरासुरले कसको तपस्या गऱ्यो ? त्यसलाई श्रीमहादेवले कसरी भस्म पार्नुभयो ? यो सुन्ने इच्छा छ, त्यो सबै आज्ञा गर्नुहवस् ।' मुनिको यस्तो प्रश्न सुनेर कुमारजी आज्ञा गर्नुहुन्छ- 'हे मुने ! अघि विष्णु भगवान्ले हिरण्याक्ष दैत्यको वध गर्नुभयो अनि समस्त दैत्यहरू दुःखी भएर खेद गर्न लागे । तब मय नामको दैत्यले मनमा विचार गर्न लाग्यो । जस्तो कामदेव नहुँदा रति भइन्, त्यस्तै त्यो दानवराज मय पनि भयो। अनि बलवान् तारकाक्ष र विद्युत्प्रभ नामका आफ्ना मित्रसमेत लिई मयले कठोर तपस्या गर्न लाग्यो। ती तीनै जना दैत्यहरू माघ पूषको जाड़ोमा हिमालयमा गई तपस्या गर्दथे, वैशाख-जेठको घाममा पञ्चाग्नि तापी गर्मी प्रदेशमा तपस्या गर्दथे। यस्तै प्रकारले तपस्या गर्दा-गर्दा दश

हजार वर्ष बिताए । तिनका देहमा केवल हाड़-छाला मात्र बाँकी रह्यो । फेरि ती ठूलो सुखबाट पनि वञ्चित भए, तैपनि तिनीहरू सूर्य जस्तै तेजिला देखिन लागे । तिनको तपस्याले ब्रह्माजी प्रसन्न भएर ती तीनै जनाको सामुन्ने पुगी नम्र स्वरले आज्ञा भयो- 'हे दैत्यहरूमा श्रेष्ठ भएका वीर हो ! तिमीहरूको तपस्याले म प्रसन्न भएँ, जे इच्छा छ सो वरदान माँग।' ब्रह्माजीको त्यस्तो वचन सुनेर साष्टांग दण्डवत् गरी, केवल घुँड़ाले मात्र भूमिमा स्पर्श गरी, हात जोरेर बिन्ती गरे- 'हे प्रभो ! हजुर प्रसन्न हुनुहुन्छ भने हामीलाई अवध्यत्व (कहिल्यै नमर्ने) वर दिनुहवस् । बल-पराक्रम पनि ठूलो होस् । फेरि विमान समान जो हामी तीन पुर बनाउनेछौं त्यसमा मनुष्यको गति नहोस् । हामी ठूला बलवान् होऔं' यही वरदान दिनुहवस् । ती दैत्यहरूले त्यस्तो वर माँगेको सुनी ब्रह्माजी आज्ञा गर्नुहुन्छ-'हे दैत्य हो ! त्यस्तो अवध्य वरदान दिन म असमर्थ छु । मृत्युको अवकाश राखेर अर्को वर माँग, म दिन्छु, यसमा अन्यथा नमान ।' ब्रह्माजीको त्यस्तो आज्ञा सुनेर मयले फेरि बिन्ति गऱ्यो- 'हे प्रभो ! अघि मैले भने-जति सबै कुरा हवस् । मृत्युलाई ती मैले

बनाएका पुरहरू एकै स्थानमा रहने छैनन् । जब दश हजार वर्ष पुग्ला तब ती पुरको केवल आधा निमेषसम्म मात्र मेल होस् र त्यही आधा निमेष-भित्र जो एक बाणले ती तीनै पुरलाई नष्ट गर्न सकोस्, त्यही पुरुष हामीलाई मार्न सकोस्।'

मयका यस्ता वचन सुनेर 'तथास्तु' भनी ब्रह्माजी आफ्नो लोकतर्फ जानुभयो । तब त्यो मय दानवले संसार नै वश गर्ने इच्छा लिएर आदिकल्पमा तीन पुरको रचना गर्दो भयो । ती तीन पुरमा पहिलो फलामको, दोस्रो चाँदीको र तेस्रो सुनको बनायो । ती तीन पुर आकाशमा सुमेरु पर्वतका शृङ्ग (टाकुरा) हुन् कि जस्ता देखिन लागे । ती पुरहरू चन्द्रमाका किरण लाग्नाले अति शीतल भएका, स्थान-स्थानमा आँखीझ्यालहरू बनेका, घरका अट्टालिकाहरू पनि अति अग्ला, आँगनहरूमा पनि राम्रा-राम्रा देख्दै मनलाई मोह पार्ने शिलाहरूले छापेका, स्थान-स्थानमा सुनले मढेका उत्तम पुरद्वारहरूमा रंग-विरंगका रत्न जडेका ; मूगा, मोति, मणिहरू स्थान-स्थानमा जडाएर बिजुलीको प्रकाश समान रत्नहरूको चारैतिर प्रकाश फैलिएको बनायो । फेरि चित्र-विचित्र प्रकाश फैलाउने गरी हीरा, मोती आदि

रत्न जडेको, वायुको वेग लाग्नाले फरफराएका पताकाहरूले शोभायमान भएका घरहरूका

मय दानवको त्रिपुर

पंक्तिहरू पनि रत्नसमूहका थुप्रा नै हुन् कि भन्ने भान पार्ने फराकिला मार्गहरू पनि सिंगारिएका अत्यन्त राम्रा पुर तयार गरायो । घर-महलहरू पनि अनेक रंगका मन हरण गर्ने रत्नहरूले सुशोभित ध्वजा-पताकाहरूले सिंगारेर ती विमान जस्ता तीन पुरलाई शोभा-युक्त बनायो । अनेक रत्न जडेका गमलाहरूमा रंग-विरंगका, जात-जातका उत्तम-उत्तम सबै ऋतुमा फुल्ने फूल र त्यस्तै छःओटै ऋतुमा फल्ने फलका वृक्षहरू लगायो । तलाउहरू पनि अनेक प्रकारका कमल, कमलिनी, कुमुदिनीका पुष्पले शोभायमान भएका तयार गरायो । यस्ता प्रकारले त्रिपुरवासीहरूको शोभाले

युक्त महल तयार भयो । फेरि मयूर, डाँफे आदि उत्तम पक्षिगणले युक्त र पुरुषका नङ लाग्नाले जसका पयोधरका गोलाकार घेरामा अर्ध-चन्द्राकार घाउ लागेका कलश जस्तै उत्तुङ्ग (ठडिएका) कुच भएका, मदिराले राता-राता आँखा भइरहेका, लाजले मुसुक्क हास्य गर्ने, लोलिएका नेत्र भएका यस्ता अनिन्द्य सुन्दरीहरूले व्याप्त भएको त्यो त्रिपुर[१] परैबाट पनि अत्यन्त रमणीय देखिन लाग्यो । यस्तो त्रिपुरमध्ये जो फलामको थियो त्यो मयले तारकाक्ष नामको आफ्नो मित्रलाई दियो । अर्को चाँदीको जुन सुन्दर पुर थियो, त्यो विद्युत्प्रभलाई दियो । जुन सुवर्णले बनेको सबैभन्दा उत्तम पुर थियो, त्यो मयले आफूले लियो । अनि त्यो त्रिपुर दैत्यपति मय मंत्रिवर्गले शोभायमान भयो । त्यो दैत्यराज आफ्ना शत्रुहरू र तिनका सेनालाई परास्त गरेर आफ्ना हितैषी ब्राह्मणवर्ग र भृत्यवर्गले सहित भई आफ्ना-आफ्ना सुन्दरी स्त्रीहरू साथमा लिई रहँदा स्वर्गकोभन्दा पनि

१. दैत्यालये तच्छुशुभे तथैव,प्रवृत्तकेकी-विहगैर्महद्भिः ।
तत्पुन्नखाभिन्न-पयोधराभि-राकीर्णरत्यन्तविलोचनाभिः ।।
सव्रीडमीषच्चपलेक्षणाभि-र्योषिद्भिराकीर्णमतीव रेजे ।
लौहं पुरं चाऽथ मयश्चकार, तत्तारकाख्याय ददौ मयश्च।।

बर्ता सुख भोग गर्न लाग्यो। अनि तीनै लोकका आनन्दलाई ध्वंश गर्न लागे। साथै अभिमानले भरिएर देवताहरू सबै विजित भए भन्ने मनमा ठान्न लाग्यो। तिनीहरूलाई मार्न लागे, उनका बगैचाका असल-असल वृक्ष र बिरुवाहरू उखेली फाल्न लागे, केही आफ्ना बगैचामा लगी सार्न लगाए। यसरी देवताहरूलाई दुःख दिएको निकै समय व्यतीत भयो। तब तिनीहरूदेखि सबै देवताहरू क्रोधित भई ब्रह्माका सामु गई त्रिपुर-निवासी दैत्यहरूको सारा अन्याय उपद्रव विस्तार गर्दा भए। अनि ब्रह्माजीले समस्त देवतालाई शान्त गराई आज्ञा भयो- 'हे देवगण हो ! त्रिपुरासुर दैत्यहरू बड़ा बलवान् छन्, तिमीहरूद्वारा तिनको नाश हुन सक्तैन, तसर्थ, नारायण आदि सकल देवता अब महादेवका शरणमा जाऔँ उनैले हाम्रो उद्धार गरिदिन्छन्। उनले हाम्रा शत्रु ती दैत्यहरूको अवश्य नाश गर्नेछन्। ब्रह्माजीको यस्तो हित वचन सुनेर स्वीकार गरी ब्रह्मा, विष्णु, इन्द्र, यम, चन्द्र, कुबेर, वायुसमेत सबै देवता ब्रह्मालाई अघि लगाई कैलास पर्वतमा पुगे। त्यहाँ महादेवको दर्शन पाई हात जोरेर स्तुति गर्न लागे- ''हे पिनाकधारी ! हे

चन्द्रमौले ! हे त्रिलोकेश ! हे अमित पराक्रमी ! हजुरलाई कोटि-कोटि नमस्कार । हे चन्द्र-शेखर ! हे त्रिलोकदेव ! हे चन्द्रमौलि ! जटाजूटधारी, नीलकण्ठ हजुरलाई कोटि-कोटि नमस्कार । संसारलाई शरण लिने, नन्दीलाई वर दिने, देवताका पनि देवता यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । थोरै सेवाले पनि प्रसन्न भएर वर दिने, यज्ञका मालिक, हिमालयमा निवास गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । योगीहरूले सदैव ध्यान गरिने, जगत्को वैभवलाई तुच्छ ठान्ने, धर्ममा दृढ़ रहने, दिशारूपी वस्त्र धारण गर्ने, भक्तलाई वर दिने,ब्रह्माण्डका धाता-विधाता यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । सूर्य, चन्द्र, इन्द्र, वायु आदि देवताको सृष्टि र पालन गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार। सूक्ष्मभन्दा पनि अति सूक्ष्म, काल-स्वरूप, नित्यस्वरूप धारण गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । परभन्दा पनि पर, परब्रह्म-स्वरूप शंकरलाई कोटि-कोटि नमस्कार छ । सारा ब्रह्माण्ड धारण गर्ने; सूर्य, चन्द्र, वायु, अग्नि र जल एवं आकाशको रचना गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ। हे

सौम्य ! हे पुरुषोत्तम ! हे वपुष्मान् ! त्रैलोक्यको सृष्टि, स्थिति, संहार गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । पूषाको दाँत भाँच्ने, दक्षको यज्ञ नाश्ने र कामदेवलाई भस्म पार्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । सुराऽसुरका उत्पन्न कर्त्ता, यज्ञका हर्ता, धर्ता हे शिखण्डिन् ! हे नीलकण्ठ ! हजुरलाई कोटि-कोटि नमस्कार छ । निरन्तर सुधा-स्वरूप, पार्वतीका भर्ता, गणेश-कुमारका पिता ! हजुरलाई कोटि-कोटि नमस्कार ! सदा मोक्षरूप वरदान दिने हे विश्वेश्वर, हे ब्रह्मात्मन् ! हे वरदाता ! हजुरलाई कोटि-कोटि नमस्कार छ । हे योगेश्वर, हे चण्डीश्वर, हे रुद्र, हे शर्व, हे शम्भो, हे भीम, हे ईश्वर ! हजुरलाई कोटि-कोटि नमस्कार छ । हामीदेखि प्रसन्न हुनुहवस् ।"

देवताहरूले काँतर भएर यस्तो स्तुति गरेको सुनी, तिनका मनको भाव जानी शिवले आज्ञा गर्नुभयो- 'हे देवता हो ! जे इच्छा छ सो वर माँग । मैले नदिइने संसारमा केही वस्तु छैन, म इच्छा-पूर्ण गर्न तयार छु । जे इच्छा छ निःशंक भएर माँग ।' महादेवको यस्तो आज्ञा सुनी प्रसन्न भएका देवताले विनम्र स्वरमा बिन्ती गरे- "हे

प्रभो ! ब्रह्माको वरले उन्मत्त भएका मय आदि दानवले हाम्रा उर्वशी, मेनका आदि अप्सराहरू बलजफत लुटेर लगे । नन्दनवनका असल-असल बोट-बिरुवा पनि कति उखेलेर नाशे, कति आफ्ना घर ओसारे । देवताको नाश गर भन्दै हामीलाई अनेक तरहको कष्ट दिइरहेका छन् । अमरावतीबाट पनि निकालियौँ । भगवन्, ती दैत्यको संहार गर्न ब्रह्मा-विष्णु पनि समर्थ छैनन् । हे ईश्वर ! अब जसरी हामी देवताहरूको भलो हुन्छ, सोही वरदान बक्सियोस्।" त्यति सुनी शिवजीले फेरि भन्नुभयो- 'हे देवता हो ! तिमीहरू मेरो रुद्र-तेजको एक अंश धारण गरी रुद्र-तेजोमय रूपले ती दानव-हरूको संहार गर ।' शिवजीको त्यस्तो वचन सुनी देवताहरूले फेरि बिन्ति गरे- 'हे भगवान् ! हामी हजुरका तेजको हजार अंशको एक अंश पनि धारण गर्न समर्थ छैनौँ भने रुद्र-तेज धारण गर्ने कुरा त परै रहोस्, हेर्ने शक्तिसम्म पनि हामीमा छैन। हे प्रभो! हामी-उपर प्रसन्न भएर त्यो अजेय त्रिपुरासुरलाई स्वयं संहार गरिबक्सनुहवस् । ब्रह्माजीको वरदान अनुसार दिव्य दश हजार वर्ष बितेपछि आधा निमेषती त्रिपुरको मिलन हुनेछ, त्यही आधा निमेष-भित्रमै त्यो त्रिपुरलाई जसले

एकै बाणले भस्म पार्ला, उसैद्वारा ती दैत्यहरूको संहार होला, अन्यथा तिनको मृत्यु हुनेछैन। हे शशिशेखर ! हामीदेखि प्रसन्न भई त्यो पापिष्ठ त्रिपुरासुरको नाश गरिदि बक्सियोस् ।' देवताहरूको त्यस्तो प्रार्थना सुनी शिवजीले फेरि आज्ञा भयो- 'हे देवता हो ! त्यस्तो अभेद्य त्रिपुर छ भने तिमीहरूको हितका निम्ति म एउटै बाणले ती तीनै पुरलाई भस्म पारिदिनेछु । त्यस्ता अजेय दानवहरूका साथ युद्ध गर्दा मेरो शक्ति थाम्न सक्ने हिमालय समान मेरो निम्ति यौटा रथ तयार पार अनि म युद्धमा जानेछु ।' महादेवको यस्तो आज्ञा सुनी प्रसन्न भएका देवताहरूले प्रणाम गरेर 'हवस्' भनी तत्काल विश्वकर्मालाई डाकी महादेवको निमित्त समस्त देवतारूपी अवयव भएको सुवर्णमय रथ तयार पारे । त्यस रथका दुवै पांग्रा सूर्य-चन्द्र भए । दक्षिण पांग्रामा बाह्र सूर्य भूषण गराइयो । बायाँ चक्रमा सत्ताईस नक्षत्र र षोडश कला भूषण बनाइयो । छः ऋतु रथका दायाँ-बायाँ राखिए । आकाशको गजुर र पांग्रा अड्याउने दण्ड मन्दराचलको बनाए । अयन र संवत्सर रथका वेग भए । चार समुद्र रथका कुण्डलिका भए । गंगादि समस्त तीर्थ राम्रा-

राम्रा वस्त्र आभूषण पहिरी स्त्री-रूप धारण गरेर हातमा चमर लिई रथमा उभिए । सारथि स्वयं ब्रह्माजी बने, ब्रह्मस्वरूप ॐकारको कोर्रा बनाए र विन्ध्याचलको छत्र निरूपण गरे । मन्दराचलको पार्श्वदण्ड बनाए । सरस्वती घण्ट भइन्। श्री नारायण अग्निबाणको टुप्पो भए । चार वेद नै चार घोड़ा भए । ताराहरू घोड़ाका गहना भए । हे अगस्त्य मुनि ! यसरी समस्त वस्तु त्यस रथका अवयव भए । यसरी जब धनु-बाण-सहित रथ तयार भयो तब पृथ्वी र आकाश कम्पित पार्दै भगवान् शिव त्यस रथमा आरूढ़ हुनुभयो । त्यस रथका अघि-पछि शिवका गणहरू-शंकुकर्ण, चण्डेश्वर, गणेश, नन्दी आदि प्रमथ गणहरू शूल, पट्टिश आदि अनेक शस्त्रास्त्र लिएर शंख, भेरी, मृदंग आदि बाजा बजाउँदै महादेव-माथि अनेक थरिका पुष्पको वर्षा गराउँदा भए । त्यस बेलाको रुद्र-तेज सहन गर्न नसकी समस्त देवता मोहमा प्राप्त भए । महादेवले देवताहरूको त्यस्तो स्थिति देखी आफ्नो तेज खिँची केही कम पार्नुभयो, अनि देवताहरू रुद्र-तेज सहन गर्नमा किंचित् समर्थ भए। त्यसपछि नारद मुनि ती दैत्यहरूकहाँ गएर भन्न लाग्नुभयो-'हे दैत्यराज !

देवताहरूको स्तुतिले प्रसन्न भएका महादेव स्वयं तिमीहरूको संहार गर्न भनी आइरहनु-भएको छ । अब तिमीहरूको जो इच्छा छ सो गर । नभए तिमीहरूको अविलम्ब नाश हुनेछ ।'

नारदजीका यस्ता वचन सुनी दैत्यराज मयले आफ्ना मित्र तारकाख्य, विद्युत्माली र अन्यान्य योद्धाहरूलाई डाकी नारद मुनिले आज्ञा भएको सबै कुरा विस्तारले सुनायो । अनि दानवमा उत्तम बलवान् भएको तारकाख्यले भन्यो- 'हे राजन् ! किन चिन्ता गर्नुहुन्छ ? देवताहरू यथार्थ रूपमा हाम्रा वध्य छन् । यो त्रिपुर भेदन गर्ने कसको पराक्रम वा शक्ति छ ? यदि समस्त देवता, यक्ष, गन्धर्व, किन्नर आए पनि यो त्रिपुर अभेद्य नै रहनेछ। फेरि शत्रुलाई जित्न साम, दाम, दण्ड, भेद आदि अनेक किसिमका नीति छन् । अतः जित्ने इच्छा भएका बलवान् शत्रुलाई आफ्नू पराक्रमद्वारा दण्ड दिनु नै उचित छ ।' वीर तारकाख्यको यस्ता कुरा सुनी विद्युत्माली भन्न लाग्यो- 'हे राजन् ! श्रीहीन र बलहीन देवता कुनै प्रकारले पनि हामीसित युद्धमा अगाडि आउन सक्तैनन् । यदि कोही मूर्खता गरेर हामीसित युद्ध गर्न अघि पर्छ भने त्यो अवश्य क्षयमा प्राप्त

हुनेछ, यसमा शंसय छैन । हे राजन् ! यसमा चिन्तित हुनुपर्ने केही कुरा छैन । एकमत भएर युद्ध गरौँ, अनि समस्त देवतालाई जितेर इन्द्रको पद पनि भोग गर्नुहवस् । फेरि अघिका हिरण्याक्ष र हिरण्यकशिपुको पद पाई चौधै भुवनको अकंटक राज्य भोग्नुहवस् ।'

विद्युत्मालीका त्यस्ता कुरा सुनेर मयले शान्त स्वरमा भन्यो- "हे दैत्य हो, सुन्यौ ? अब हाम्रो नाशको बखत आइपुग्यो ।" यति भनेर देह कम्पित पार्दै र शिर हल्लाउँदै फेरि भन्न लाग्यो - 'जो शत्रु आफूभन्दा बलियो वा निर्बल छ भने त्योसित साम, दाम, दण्ड, भेद आदि नीतिको प्रयोग गर्न सकिन्छ, तर यी त सम्पूर्ण जगत्का स्वामी श्रीमहादेव हुन् । उनी दानव र देवताभन्दा धेरै बर्ता श्रेष्ठ छन् । यदि देवताको हितका लागि उनी स्वयं हामीलाई मार्न आइरहेका छन् भने, यसको त कुनै पनि उपाय छैन । केवल महादेवको नगीच गई उनलाई नमस्कार गरौं भन्ने मेरो यो अन्तिम निर्णय हो । यदि हामी उद्दण्ड भैं कठोरता धारण गरेर उनका सामु युद्ध गर्न गयौं भने केवल उनको दृष्टिपात (हेराइ) मात्रले नै भस्म हुनेछौं । ब्रह्मादि देवता पनि दुःखी भएर

जसका शरणमा जान्छन्, आज उनै ईश्वर हाम्रो नाश गर्न आइरहेका छन् भने हाम्रो के गति होला, भन्न सकिन्न । जो क्षण मात्रमा सम्पूर्ण सृष्टि, पालन र नाश गर्न सक्तछन्, फेरि जो जगत्का कारण र मुक्तिदाता पनि हुन्, ती महादेवसित युद्ध गरेर हामी कसरी जित्ने आशा गर्न सक्तछौं ? हे वीर हो ! हाम्रो विधिहीन तपले के हुन सक्तछ ? फेरि त्यसको फल हामीहरूले धेरै वर्षसम्म भोग गरिसक्यौं । अतः म भन्दछु- हे दानव वीर हो ! तिमीहरू सबै यतिखेर कालले प्रेरित छौ, त्यसैकारण युद्ध गर्न तम्सिरहेका छौ ।' मयको त्यस्तो कुरा सुनी नारद मुनि उन्मत्त दैत्यहरूको मृत्युरूप यो कुरा भन्न लागे-'हे दानवराज ! अब तिमीहरूको तपस्या को फल सकियो । यदि संग्राममा पछि हटेर नपुंसक झैं देवताहरूको शरणमा जानु-भन्दा त संग्राममा लड़ी वीर-गति पाउनु नै उत्तम ठान्दछु। यदि शिवका हातबाट मर्न पायौ भने उनका प्रमथ गणको अधिपति पनि हुन सक्तछौ । संग्राम नगरेर शरण पर्न गयौ भने पनि देवताको हितका लागि तिमीहरूलाई नमारी छाड्नेछैनन् । फेरि दानवहरूका राजा, वीर पराक्रमी भएर पनि कायरतातिर लाग्नु

उचित छैन । कायरदेखि शिवजी प्रसन्न हुँदैनन् । बरु युद्धमा पराक्रम देखाउने वीरदेखि प्रसन्न हुनेछन् । अतः किन नलड्ने ? अवश्य लड । यदि संयोगले जित्यौ भने तीनै लोकको सुख-भोग गरौला ।

नारद मुनिका यस्ता कुरा सुनेर तारकाख्य र विद्युत्माली दानवहरू आयुष्य क्षीण भइसकेका हुनाले भन्न लागे- 'ठीक हो, उत्तम हो, नारदजीले आज्ञा भएको उचित हो।' दानवराज मयले पनि आफ्ना सहयोगीहरूको कुरा सुनी अब समस्त दानव वंशको संहार हुने समय भयो भन्ने जानी नारदजीले आज्ञा भएको कुरो उचित हो भनी सर्थन गरे । अनि मयका वचन सुनेर नारदजी पनि प्रसन्न हुनुभयो र समस्त दैत्यहरूलाई युद्ध गर्न उद्यत पारी मयसित बिदा माँगी महादेवकहाँ गएर उहाँ भएको कुरा सबै निवेदन गरे । त्यसपछि समस्त दानवहरू युद्धको इच्छा गरी अनेक तरहका शस्त्रास्त्रले सज्जित भई लड्न तयार भए । बलनामा, नेमिनामा, बाणासुर, तारकाख्य, विद्युत्माली आदि प्रधान दानवहरू पनि युद्धको निश्चय गरी राजा मयका सामुन्ने आई अनेक प्रकारले सिंहनाद गर्दै गर्जन थाले । फेरि ती दानव सैन्य स्वयं

दानवहरूलाई नै भयदायक देखिन लागे । परस्परमा -ऊः रथ आयो, उता हेर, ऊः महादेवका रथको ध्वजा देखियो भन्न लागे । भय र शोक त्यागी नाना तरहका शस्त्रास्त्र लिई युद्धको इच्छाले जसरी पशु पुतली आगोको नगीच जान्छ, त्यसरी नै त्यो पशु गए-झैं कालले प्रेरित दैत्यगणले शिवको रथ कहिले आइपुग्छ र युद्ध गर्न पाइन्छ भनी हेरिरहेका थिए । त्यसै बखतमा पश्चिम सागरको शिरोभागमा रहेका अनेक सौन्दर्यले शोभा बढाइरहेका ध्वजा-पताका आदिले सज्जित एवं सुशोभित सुमेरु पर्वत समान शिवरथ देखियो । नन्दीश्वर आदि महादेवका प्रधान गणहरू उच्च स्वरले सिंहनाद गर्न लागे । तिनको सिंहनाद सुनेर दानवगणहरू पनि नगर छाडी बाहिर निस्के । यता चण्डेश्वर पनि उज्ज्वल कुठार हातमा लिएर डरलाग्दो मुख पारी शिवगणका सामुन्ने आए । फेरि देदीप्यमान त्रिशूल हातमा लिई शिवकै समान पराक्रम गर्ने इच्छा भएका गणका अधिपति पार्श्वभागमा आए । अर्को गणका स्वामी शंकुकर्ण मुसल हातमा लिएर अर्को पार्श्वमा डटे। नन्दी, भृंगी, रिटी, तुण्डी र वीरभद्र आदि प्रधान वीरहरू पनि वज्र, त्रिशूल, गदा, परिघ आदि लिएर

युद्धमा अग्रसर भए । यता दानवगण पनि शिवजी-को रथ आएको देखेर युद्धका निमित्त अनेक शस्त्रास्त्र लिएर शिवगणमाथि जाइलागे । अनि दुवै तर्फबाट युद्ध शुरू भयो । शिवजी पनि त्रिपुरलाई भस्म हुन लागे-झैं देखेर प्रसन्न मुद्राले संग्राममा तत्पर हुनुभयो । नन्दी चाहिं महाबली दानवसित जुझे । भृंगीले दश बाणद्वारा विद्युत्प्रभलाई भेदन गरे । तर राता-राता नेत्र पारेर अनेक शिलाले ठोक्ता पनि उसलाई केही हानि गर्न सकेनन् । तब भृंगी र रिटीले त्यस दैत्यका पृष्ठदेशमा प्रहार गरे, अनि उसले पनि सर्प झैं निःश्वास फेर्दै ठूलो शूलले भृङ्गी र रिटीलाई मर्म-मर्ममा प्रहार गऱ्यो । त्यसको पीड़ा खप्न नसकी भृंगी र रिटी संग्रामबाट भागे । त्यस दानवराजले जब तिनीहरूलाई त्यसरी भगाएथ्यो तब गणनायक गणेशलाई पनि एक हजार शरको प्रहारले घायल तुल्यायो । फेरि त्रिसट्ठी र दश बाण थपेर गणेशको सर्वाङ्गमा घाउ गरायो । वैरीको त्यस्तो अदम्य साहस देखेर गणेशजी पनि रिसाई सूँढ लामो पारेर त्यस दानवको घाँटीमा बेह्री बेसरी निमोठी, मत्त हात्तीले तलाउमा फुलेको कमलको पुष्पलाई सहजै उखेलेर फाले-झैं गरी

विद्युत्प्रभ दानवको शिर उखेलेर फालिदिए । अनि गिंडबाट छुट्टिएको उसको शिर-सरोवरबाट छुट्टिई हात्तीका दाँतमा अड्केको कमलको पुष्प झैं शोभित भयो । त्यो देखेर भृङ्गी र रिटीले अनेक स्तुति-गान गरे । अनि नेमिनामा र बलनामा दुवै दानव रिसाई गणनायक गणेशका सर्वाङ्गमा बाण हानेर घाउ लगाउन थाले । ती दानवलाई शंकुकर्णले बीचमै रोकेर तिनका रथ, सारथि, ध्वजा र घोड़ा सबै काटी-मारी विरथी गराए । ती दुवै दानव पनि तत्काल अर्को रथमा चढ़ेर आई चण्डेश्वर र गणनायकका सबै अंगमा अनेक बाण प्रहार गरी घाउ पारिदिए। गणनायक र चण्डेश्वरले पनि दानवका प्रहार खपेर रिसले राता-राता आँखा पारी हातमा मुसल लिई वेगले हाने । त्यसको चोट खप्न नसकी दुवै दानव यमराजको नगरमा पुगे । त्यसपछि त्रिपुरनिवासी ठूला-ठूला जो-जो योद्धाहरू थिए, ती सबै रिसले चूर भई एक-साथ निस्केर वज्र, त्रिशूल, परिघ, कुठार आदि अस्त्र लिई शिवजीका गणमाथि जाइलागे । यसरी परस्पर घोर-घमासानको संग्राम चल्न लाग्यो । महादेवको आज्ञा पाएका शिवगणहरू पनि गजराजले कदली-वन ध्वस्त

पारे-झैँ र उन्मत्त सिंहले मृगहरूलाई भर्काए-झैं ती दानवहरूलाई छिन्न-भिन्न पारी मार्न लागे । ती दैत्यहरूमा कसैका शिर छैनन्, कसैका गिंड छैनन् । त्यस युद्धमा रगतको नदी बगे-झैँ भयो । वायुको वेगले छिन्न-भिन्न भएका मेघ झैँ र वज्रको चोटले धूलो भएका पर्वतका शिखर जस्तै लड्दै पश्चिम समुद्रमा गिर्दै गए । जब नेमिनामा र बलनामा वीरलाई शंकुकर्णले मारे भन्ने सुनेपछि तारकाख्य नामको दानव रिसाएर गणनायक-माथि झम्टियो र अनेक बाण प्रहार गरेर घायल पारिदियो । तब शंकुकर्णले पनि त्यसका प्रहार खपेर त्यसको शिरमा मुसल बजारी उच्चस्वरले सिंहनाद गरे। अनि त्यो दानव केही बलहीन भएर गिर्ला जस्तै देखियो । अनि निर्धक्कसित त्यसका छातीमा भाला प्रहार गरे । त्यस चोटले दानव भूमिमा लड्यो, तर तुरुन्त उठेर चक्र लिई गणनायक-माथि प्रहार गऱ्यो । अनि शंकुकर्णले रिसाई साह्रै पीड़ा पर्ने गरी मुड्कीले हिर्काए । त्यो चोटले दानव फन्न घुमेर ढली मूर्च्छा पऱ्यो र दिव्य आयुधहरू त्याग्दो भयो । अनि त्यो चोट खप्न नसकेर मृत्युमा प्राप्त भयो।त्यसरी उसलाई गिरेको देखेर उठाई राजा

मयको भवनमा लगेर सारा स्थिति सुन उँदै अनेक किसिमले विलाप गर्न लागे । त्यसरी रोई विलाप गर्न लागेका दानवहरूलाई मयले राम्ररी बुझाई भने- 'हे दानव हो ! मेरो घरमा अमृतको कुण्ड छ, त्यसैमा चोभी मरेका जति सबै दानवलाई बचाओ ।' त्यति सुनेपछि 'जो आज्ञा' भनी प्रसन्न मनले मरेको तारकासुरलाई अमृतमा चोभेर बचाए । मरिसकेका वीरलाई पनि जीवन प्रदान गरे भन्ने खुशीले राजा मयलाई सबैले बारम्बार प्रणाम गरे। त्यसै गरी मरेका अरू दानवहरूलाई पनि जीवित पारे । अनि त्यो तारकाख्य पहिलेभन्दा पनि दोब्बर साहस र शक्तिका साथ संग्राममा आयो। ब्रह्माजीले त्यसलाई देख्नासाथ आफ्नू दाहिने हातको औंलाले शंकेत गरेर श्रीमहादेवलाई विनयपूर्वक भन्नुभयो- 'हे ईश्वर ! त्यो दानव अघि नै मरिसकेको थियो, तर अहिले फेरि बाँचेर लडाइँमा आयो । मयका घरमा अमृतको कुण्ड छ, त्यसले मरेका समस्त दानवलाई बचाउनेछ । अतः हे शिव ! त्यसका घरमा अमृत रहेसम्म मरेका दानवलाई बराबर बचाइरहनेछ । यसकारण, एक बाण प्रहार गरेर त्यो अमृत शोषिलिनुपर्दछ । ब्रह्माजीको वचन मानेर शिवले एक बाण प्रहार गरी सारा

अमृत शोषिलिनुभयो । ब्रह्माजीले फेरि विनय-पूर्वक बिन्ती गरे- 'हे प्रभो ! अब त्यो बाण प्रहार गर्नुहवस् । मैले त्रिपुरसितको युद्ध अघाउँजी देखेँ । लड्दा-लड्दा आज हजार वर्ष बितिसक्यो । तर त्यसको नाश हुन सकेन । अब त्यो बाण शीघ्र छाड्नुहवस्, अनि वैरीको नाश होला । ठीक उसै बेला ती तीन पुरहरू आधा निमेषसम्म जोरिई फेरि छुट्टिनेछन् । ती पुरहरू एकपल्ट जोरिएर छुट्टिएपछि जति बाण प्रहार गरे पनि सफलता प्राप्त हुन सक्तैन । हे प्रभो ! मेरो प्रार्थना स्वीकार गरिबक्सिन्छ भने तत्काल बाण प्रहार गरेर यस त्रिपुरलाई नाश गर्नुहोस् । ब्रह्माजीको त्यस्तो विनय-युक्त कुरा सुनी 'ठीक हो, असल हो' भनी त्यो अग्नि-सोम-युक्त उग्र बाण धनुमा चढाई धनुलाई तल-माथि झुकाई दिव्य दश हजार वर्ष पुग्नासाथ आधा निमेष, आँखा झिम्म गरेर उघारे-जति समयको लागि त्रिपुर जोरियो, तब महादेवले आफ्नू योगबलले जोरिनुलाई निश्चल पारिदिनु-भयो । अनि जसको टुप्पामा अग्नि-सोम स्थित थिए, त्यो नारायणरूपी बाण शिवले प्रहार गर्नु-भयो ।

त्यो बाण छुट्नासाथ त्रिपुरका भव्य महलहरूमा

आगो लागेर चारैतिर डढ्न थाल्यो । 'धिक्-धिक्, कष्ट-कष्ट' भन्ने शब्द सुनिन लाग्यो । महादेवले तत्काल नन्दीलाई भन्नुभयो-त्यो मय दानव मेरो प्रिय भक्त छ, त्यसलाई अग्निले नडढाऊन् । श्री महादेवको त्यस्तो आज्ञा पाउनासाथ वायुरूप भई बाणभन्दा पनि वेगले गई मयको घरमा नन्दीले देखे-राजा मय शिवलिंग सामुन्ने राखी उनकै ध्यान गरिरहेको छ । तब नन्दीले मयलाई भने- 'अग्निले तिमीलाई जलाउनेछैनन् ।' मयले तुरुन्त नन्दीलाई प्रणाम गरे । त्यसै बेला अग्नि पनि आइपुगे र नन्दीले शिवको आज्ञा अग्निलाई सुनाइदिए । तब अग्निले मय दानवतिर फर्केर भने- 'हे शिवभक्त ! अब तिमी यो नगर छाडेर तुरुन्त जाऊ।' मयले 'जो आज्ञा' भनेर सुवर्णको शिवलिंग बोकी तत्काल पाताल गए। यता नन्दीले फर्केर गई सम्पूर्ण कुरा शिवजीलाई बिन्ती चढाए । अब त्रिपुर भस्म हुन लाग्यो । त्यसका वेदी, महल, उद्यानहरू धमाधम भत्किएर नाशिन थाले । अनेक दानव र तिनका परिवारहरू कराएको मात्र सुनिन लाग्यो । वस्त्र खुस्केका अनेक सुन्दरी स्त्रीहरू घरबाट बाहिर निस्की रोए कराएको चर्को स्वर सुनिन लाग्यो । अग्ला-

अग्ला महल र विमानहरूमा रहेका, कठोर (कड़ा) र उच्चस्तन भएका, मदले विह्वल नेत्र भएका, आफ्ना आफ्ना पतिका अत्यन्त प्रिय नारीहरू अग्निबाणले डराई घर-घरमै यता-उता दगुर्न र कराउन थाले । जस्तै पर्वतमा भूमि-कम्प हुँदा त्यहाँका किन्नरहरू भयले व्याकुल हुन्छन्, त्यस्तै आफ्ना पतिलाई भयले आकुल भई अंकमाल गर्न थाले । कोही डराई भाग्न लागे । कतिपय दानवगण आफाफ्ना स्त्रीहरूलाई बोकेर नगर छाडी वेगले भाग्न लागे । शिवको भक्तिले हीन र वस्त्राभूषणले पनि हीन, पर्वताकार, देख्तैमा डरलाग्दा, काला-न-काला दानवहरू डढेर सागरमा खस्न लागे । जति दानवहरू समुद्रमा खसेथे, ती सबैलाई जलका अनेक जन्तुले खान थाले । कति दानवहरू त आफ्ना पति वा पत्नीको अवस्था देखेर खप्न नसकी आगोमा डढेर मरे ।[१]

रतिका अन्तमा खेदित भएका, तर तुरुन्त कामले पीडित भई प्रियाका साथ जाऊँ भन्ने इच्छा भएका ती कति दैत्यहरू भार्या-सहित अग्निमा डढेर मरे । कोही समुद्रमा हामफाली जल-जन्तुको

१. रत्याविरामे पति-खेदितानां, प्रियैरिवासामभिगन्तुकामाः ।
सर्वे ततो दैत्यवृषाः सभार्याः, प्रदह्यमानास्त्रिपुरो भवेयुः ।।

भोजन भए । कोही आधा डढेर, कोही भाग्दा लडेर स्वाहा भए । यस प्रकार त्यो अमोघ अग्नि-सोमयुक्त बाणले त्रिपुर भस्म पारी शेष नगर समुद्रमा डुबाई फेरि भगवान् शिवको हातमा आइपुग्यो । त्यस्ता प्रकारले अभेद्य त्रिपुर भस्म भएपछि देवताहरू आफाफ्ना अधिकार पाई शिवजीलाई प्रणाम गरेर स्तुति गर्न लागे - 'हे रुद्र ! आज हजुरद्वारा जुन रौद्रकर्म हुन गयो, त्यो अन्य कसैबाट पनि न कहिल्यै भएको थियो, न फेरि हुनेछ । हे शंकर ! यो कामले हामी समस्त देवताहरूको कष्ट निवारण गरिदिनुभयो । अतः हजुरलाई कोटि-कोटि नमकार छ ।' यस्तो देव-गणले स्तुति गरेको सुनी महादेव प्रसन्न भएर आज्ञा भयो- 'हे देवता हो ! आफ्ना प्रिय भक्तजनलाई सदैव पुत्र जस्तै स्नेहपूर्वक पालन गर्नुपर्दछ । आज त्रिपुरवासी दानवहरूको संहार हुन गएकोले तिमी-हरूको इच्छा पूर्ण भयो । अब तिमीहरू खुशी-साथ आफाफ्ना आश्रममा जाओ । श्रीमहादेवले यस्तो आज्ञा भएको सुनी महादेवलाई दण्डवत् प्रणाम गरी देवताहरू आफाफ्ना लोकमा जाँदा भए ।

देवताहरू गएपछि नन्दी, भृङ्गी, भूत, प्रेत, पिशाच, डाकिनी-शाकिनी सहित भएर शिवजी कैलाशपुरी

पाल्नुभयो । हे अगस्त्य मुनि ! यो सहसा कसैले वर्णन गर्न नसकिने त्रिपुर-दाह मैले सुनाएँ । जो शिवभक्त खुशीसाथ यो कथा सुन्ला वा सुनाउला त्यो समस्त पापबाट मुक्त भएर मरेपछि शिवको पार्षद भएर सधैँ कैलासमै बस्न पाउनेछ ।

*।।इति श्री स्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां त्रिपुरदाहवर्णनं नाम पञ्चमोऽध्यायः ।।५।।*

काशी का नवदुर्गा

# अथ षष्ठोऽध्यायः

## दक्षयज्ञ-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- 'हे अगस्त्य मुनि ! यस्तो किसिमसँग मैले त्रिपुर-दाह सुनाएँ, अब के सुन्ने इच्छा छ ?' यस्तो कुरा सुनी अगस्त्य मुनि बिन्ती गर्दछन्- हे कुमारजी ! दक्षप्रजापतिका तेत्तीस कोटि कन्या तेत्तीस कोटि देवताले विवाह गरे । सतीदेवीलाई विष्णु भगवान्को छलले शिवजीले प्राप्त गर्नुभयो । त्यसपछि सतीको मृत्यु के कारण परेर भयो ? यस विषयमा सुन्ने इच्छा छ, सुनाइबक्सियोस् । यस्तो आग्रह गरेको सुनी कुमारजी भन्नुहुन्छ- 'हे मुने ! एकदिन दक्षप्रजापतिले विरणीसित भने- हे स्त्री ! मैले यज्ञ गर्ने इच्छा गरेको धेरै समय भयो, अब त्यो यज्ञ गर्ने इच्छा बलवती भयो तसर्थ तिमी सम्पूर्ण सामग्री तयार गर । अनि महादेव र सतीदेवी-बाहेक अरू छोरी-ज्वाइँ र ब्रह्मा, विष्णु आदि समस्त देवता, यक्ष, गन्धर्व, किन्नर, नाग, दैत्य, अप्सरा, दश दिक्पाललाई निमन्त्रणा गर्न पठाऊ भन्ने आफ्ना स्वामीको आज्ञा पाई विरणीले सम्पूर्ण सामग्री तयार पारी महादेव र सतीदेवी-बाहेक सबै छोरी,

ज्वाइँ, ब्रह्मा, विष्णु, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग, अप्सरा, दश दिक्पालहरूलाई निमन्त्रणा पठाइन् । दक्षका सबै छोरी-ज्वाइँहरू नाना वस्त्रालंकार पहिरी यज्ञमा होम्न अनेक मणि-माणिक्य, फल-फूल र वस्त्रादि यज्ञमा होम गर्ने सामग्री लिएर दक्षप्रजापतिको यज्ञ हेर्न भनी आए । दक्षले पनि सबै आएका व्यक्तिहरूलाई यथायोग्य सेवा सत्कार गरेर राखे । सुदिनमा यज्ञ आरम्भ भयो। त्यो अश्वमेध यज्ञ कस्तो भने-नन्दी, भृङ्गी, चतुःषष्ठी योगिनी, भूत-प्रेत, पिशाच, प्रमथगण-सहित भई श्रीमहादेव बस्ता जस्तो शोभा हुन्छ, त्यस्तै तेत्तीस कोटि छोरी ज्वाइँ र ब्रह्मा, विष्णु आदि देवता; ऋषि, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग, अप्सराहरू नाना वस्त्र अलंकार पहिरी ऊभन्दा ऊ राम्री, ऊ भन्दा ऊ राम्री भई नाच-गान गरी मंगलको निमित्त सुवर्णमय कलश-सहित अश्वमेध यज्ञ गर्दा शोभायमान देखियो । त्यसरी अश्वमेध यज्ञ चलिरहेको बखतमा नारद मुनिले को आए, को आएनन् भनी आसनबाट उठेर चारैतिर हेर्न लागे। दक्षका तेत्तीस कोटि कन्या, ब्रह्मा-विष्णु प्रभृति सकल देवता; ऋषि, यक्ष, गन्धर्व, किन्नर, नाग, अप्सरा आदि सबैलाई

देखे, तर महादेव र सतीलाई देखेनन् । बिना-महादेवको यो दक्ष-प्रजापतिको यज्ञ कसरी पूर्ण होला, के कारण हो, निम्ता पठाउन पो बिर्सेका हुन् कि अथवा अरू कुनै कारण छ कि भन्ने मनमा तर्क गर्दै तुरुन्त त्यहाँबाट अन्तर्धान भई कैलास पर्वतमा गए ।

त्यसै बेला उता महादेवले सतीदेवीलाई- 'हे प्रिये ! आज हामी दुवै जना जूआ खेलौं, आऊ' भन्नुभयो । सतीले 'हवस्' भनी पाशा ल्याइन् र दुवै जना प्रेम-साथ जूआ खेल्न लागे । खेलमा सतीदेवीले जितिन् र स्वामीलाई गिज्याउन लागिन्। अनि शिवजी झोकिएर झोली थापे, त्यो पनि जितिन् । अनि नागरूपी गहना थापे, त्यो पनि जितिन् । त्यसै वेला दक्षको निम्ता पाएर देवता, दानव, यक्ष, किन्नरहरू विमानमा बसेर गइरहेका थिए । तिनीहरूलाई देखेर सतीले स्वामीसित- 'ती विमानमा बसेर जाने को हुन्, आज्ञा हवस्' भनी सोधिन् र महादेवले- 'तिमीलाई केको धन्धा पर्‍यो, आफ्नू काम गर' भन्दा सतीदेवी चिन्तित भएर माथितिर नै हेरिरहिन् । अनि शिवले हाँसेर मुकुट थाप्नुभयो, त्यो पनि जितिन् । त्यसरी निकैपल्ट हारेकोले शिवजी केही पनि नभनी

हाँसिरहनुभयो । अनि सतीदेवीले बिन्ती गरिन् - 'हे स्वामी ! हजुरका सबै वस्तु मैले जितिसकें, अब के थाप्नुहुन्छ, लौ थाप्नुहोस् ।' अनि शिवजीले- 'अब म आफ्नो अंग थाप्दछु' भन्नु-भयो । तब सतीदेवीले हात जोरेर विनम्र स्वरमा बिन्ती गरिन् - 'हे स्वामी ! हजुरको अंग त अघि पनि पछि पनि मेरै हो । यदि मैले हारें भने हजुरको अंगको साटो कुन कुरा टक्र्याउँला ? यो सम्पूर्ण ब्रह्माण्डमा हजुरको अंगको साटो दिने मेरो विचारमा कुनै वस्तु पनि छैन । फेरि हजुरको अंग जूआ खेली जितेर आफ्नू बनाउनुपर्ने पनि केही आवश्यकता देख्दिनँ, जुन दिन मेरा पिता-माताले तिल-कुश-सहित हजुरका हातमा मेरा हात राखिदिएका थिए, उसै दिनदेखि हजुरको अंग मेरो र मेरो अंग हजुरको भइसक्यो । यसमा शंका छैन र हजुरले आफ्नो अंग थाप्नु-पर्दैन।' सतीदेवीको त्यस्तो स्नेहयुक्त वचन सुनेर महादेव प्रसन्न भई- 'धन्य तिमी' भनेर जूआ खेल्न छाडी मीठा-मीठा वार्ता गरेर कैलासमा बसेका थिए । त्यसै वेला नारद मुनि पुगेर सती र शिवलाई साष्टांग दण्डवत् गरी हात जोरेर उभिइरहे । श्रीमहादेव कस्ता भने-जटाको मुकुट

बनाई, बाघका छालाको पटुका कसेका, हात्तीको छाला ओढेर सर्वाङ्गमा भस्म लेपन गरी, स्थान-स्थानमा सर्पका गहना लगाई, घाँटीमा नर-मुण्डमाला पहिरी, सतीदेवीलाई काखमा लिएर कोटि सूर्य झैँ तेजले जाज्वल्यमान भई, नन्दी, भृंगी, भूत-प्रेत, डाकिनी-शाकिनी द्वारमा राखेर प्रमथगण-सहित भइरहेका महादेवलाई नारदले देखेर हर्ष मानी बारम्बार चरणमा गिरी दण्डवत् गर्दा भए । त्यसरी नारदजीले भक्ति गरेको देखेर मनमा आनन्द मानी श्री महादेवले आज्ञा भयो- 'हे मुने ! तिम्रो भक्ति देखेर म प्रसन्न भएँ, जे इच्छा छ वर माँग।' तब नारदजी केही भन्न नसकी उभिइरहे । तब- 'के काम परेर यहाँ आयौ ? भन' यति शिवजीले आज्ञा भएको सुनी नारदजी हात जोरेर भन्न लागे- 'हे शम्भो ! म अरू के वर माँगूँ ? हजुरको भक्तिमा मेरो चित्त सदा लागिरहोस् । हे ईश्वर ! म आउने कारण के हो भने-दक्षप्रजापतिले अश्वमेध यज्ञ गर्दा तीनै लोकका देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग, अष्टवसु, वसिष्ठ आदि ऋषि र ब्रह्मा-विष्णु एवं दश दिक्पाल-सहित सबै यज्ञस्थलमा आएका छन् । मैले यज्ञस्थलमा प्रदक्षिणा गरेर

हेर्दा केवल हजुर दम्पतीलाई देखिनँ र यज्ञका मुख्य भोक्ता, कर्ता एवं फलदाता हजुरलाई किन डाकेनन् ! भनी आश्चर्य लाग्यो र म त्यही कुरा बिन्ती चढाउन आएको हुँ। हे गौरीशंकर ! यसको अर्थ केही बुझ्न सकिनँ' भनी नारद मुनिले बिन्ती गरेको सुनी सतीदेवीले आफूलाई अत्यन्त अपमान गरेको ठानी श्रीमहादेवसित बिन्ती गरिन् - 'हे जगदीश्वर ! नारायण प्रभृति तेत्तीस कोटि देवता, यक्ष, गन्धर्व, किन्नर, नाग, दैत्य, अप्सराहरू र मेरा सबै बहिनीहरूलाई डाक्ता हामी दुई जनालाई मात्र किन डाकेनन् ?' भन्दै विस्मयका साथ आँखाबाट आँसु बगाइन् र मलिन मुख भएकी सतीदेवीलाई शिवजीले आज्ञा भयो- 'हे प्रिये ! तिमी दुःख नमान, किनभने तिमी नरुचाइएकी छोरी, म मन नपरेको ज्वाइँ, डाकेनन् त के भयो ? यस कुरामा तिमीले आफ्नू अपमान मान्नुपर्दैन, तिम्रो म छँदै छु । दक्षको यज्ञमा गएर पो हामीले के पाउनु छ र नगए पनि के होला !' भनी धेरै प्रकारले सम्झाउँदा पनि नमानेर- 'हे स्वामी ! त्यस्तो आज्ञा नहोस्, मलाई त्यो अश्वमेध यज्ञ हेर्ने अत्यन्त इच्छा छ । आज्ञा भए नारदजीसित गई एकपटक हेरेर मात्र आउने थिएँ' भनेर बहुतै

जिद्दी गरी महादेवका चरणमा परिन् । अनि जगदीश्वरले फेरि भन्नुभयो- 'हे प्रिये, यस्तो हठ नगर । किनकि विशेष गरेर तिमी आफ्नो स्वाभिमानमा रहेकी, त्यहाँ अपमान होला । जाने काम नगर' भनी अनेक किसिमले बुझाउँदा पनि नमानी नारदका साथ लागी कैलासबाट प्रस्थान गरिन् । पिताको यज्ञस्थलमा पुगेर आदरसाथ माता-पितालाई ढोग दिई, सा है चित्त दुखाई, आँखाबाट आँसुका धारा बगाई मंगल वचन बोलिन् - 'हे माता- पिता ! हजुरहरूले गर्न लागेको यस्तो ठूलो यज्ञमा पनि मलाई किन सूचना दिनु-भएन ? के म हजुरहरूकी छोरी होइन ? मैले के अपराध गरें, अथवा मेरा स्वामीले हजुरको के बिराम गरिदिनुभयो, आज्ञा हवस्। विष्णु प्रभृति तेत्तीस कोटि देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग, अप्सरा र ऋषि-मुनि एवं दश दिक्पाल स्त्री-पुरुष-सहित सबै डाकेर केवल हामी दुई जनालाई मात्र किन डाक्नुभएन ? फेरि यज्ञका कर्ता-धर्ता महादेव नै हुनुहुन्छ, उनी-बिना हजुरको यो यज्ञ कसरी पूर्ण होला ? यज्ञको फल दिने पनि उहाँ नै होइबक्सिन्छ, देवताका देवता पनि

शिव नै होइबक्सिन्छ । फेरि सृष्टिकर्ता पनि उहाँ नै होइबक्सिन्छ । महादेव- बिना गरेको यज्ञ निष्फल हुन्छ। यज्ञकर्त्ता नभएको यस्तो अशुद्ध यज्ञ किन आरम्भ गर्नुभयो ? यसले हजुरहरूको कदापि जय हुनेछैन । श्रीमहादेवलाई तुरुन्त डाक्न पठाउनुहोस् अनि मात्र यज्ञको उद्देश्य सफल भई इच्छित फल प्राप्त हुनेछ । हे पिता ! शंकरलाई अशंकर गरी थाल्नुभएको यो यज्ञ शंकर नभईकन पनि पूर्ण हुन्छ ? कि यो ब्रह्माण्डमा दुई शंकर छन्, यदि छन् भने मलाई आज्ञा हवस् ! फेरि मेरो स्वामीलाई नडाकेको कारण के हो ? हे माता-पिता ! मलाई भन्नुहवस्' भनी सतीदेवीले भनेको सुनी दक्षप्रजापति भन्न लागे- 'हे पुत्री ! तँ मनमा दुःख नमान् । तेरो पति भोलानाथ यो यज्ञमा डाक्ने योग्य छैन किनकि तेत्तीस कोटि देवता, यक्ष, गन्धर्व, नाग आदि अनेक रंग-विरंगका वस्त्र र मणि-माणिक्यका अनेक अपूर्व गहनाहरूले सज्जित भई, श्रीखण्ड आदि सुगन्धित वस्तु लेपन गरी, अनेक थरिका मंगल यात्रा गरी, गन्धर्वद्वारा गीत र अप्सराहरूको नाच आदिले शोभित भएको यज्ञमा देख्दै घिनलाग्दो त्यो

महादेवलाई कसरी डाक्ने ? हे सती ! तेरो स्वामी के ढंगको छ र ?- देहमा खरानी घसी, कम्मरमा बाघको छाला बाँधी, हात्तीको छाला ओढी, विष, भाँग, धतुरो खाई, राता-राता आँखा पारी, जस्तो मन लाग्यो उस्तै नाची, सर्पको गहना लगाउने, जटाको मुकुट कस्ने, मुण्डमाला पहिरी, दायाँ हातले डमरु बजाई, बायाँ हातले त्रिशूल समाई, भूत-प्रेत आदि अघि-पछि लगाई, दिगम्बर मतवाला जस्तै जहाँ पायो उहीं पाउ राखी, लाज नमानी हिंड्ने । यस यज्ञमा भने-देवकन्या, नागकन्या, गन्धर्व-कन्या र तेरा सबै बहिनीहरू तथा तेत्तीस कोटि देवताहरूले शोभायमान यस्तो पवित्र यज्ञस्थलमा त्यस्तो देख्तै अशोभा हुने र घिनलाग्दो तेरो स्वामीलाई कसरी डाकूँ, भनी नडाकेको हो । फेरि तँलाई मात्र डाकूँ भने उ पनि पछि लागेर आउला भनी तँलाई पनि डाक्न सकिनँ । तँ दुःख नमान् । फेरि तैँले हाम्रो सेवा पनि गरेकी होस्, अपराध पनि केही गरेकी छैनस् । तेरो स्वामी त्यस्तो गतिको हुनाले नडाकेको हो । फेरि सृष्टि-स्थिति-संहार गर्ने महादेव हुन् र यज्ञको फल दिने पनि उनै हुन् भनिस् । त्यो

कुरा होइन, त्यो त बहुलाहा मात्र हो । यज्ञकर्त्ता श्री नारायण हुन्, सृष्टिकर्ता चतुर्मुख ब्रह्मा हुन्, स्थिति-संहार कर्ता पनि नारायण महाविष्णु हुन् । त्यो महादेव कहाँको देवता हो ? त्यसलाई नडाकेर मेरो यज्ञ कसरी अपूर्ण होला ! तेरो

सतीदेवीले यज्ञकुण्डमा हामफालेको

स्वामी महादेवलाई त कसै गरे पनि म डाक्तिनँ । त्यसले मेरो यज्ञमा के वरदान देला ? तेत्तीस कोटि देवता, ब्रह्मा-विष्णु स्वयं उपस्थित छन्' भनी दक्षप्रजापतिले जगदीश्वर महादेवलाई क्षुद्र वचनले निन्दा गरेको सुनेर मनले सहन नसकी, राता-राता आँखा पारी, क्रोधले नाग जस्तै लामो-लामो श्वास फेरी सुस्केरा हाल्दै दाह्रा किटी जुरुक्क उठेर भूमिमा लात्तले हानी, स्वामीको निन्दा गरेको सम्झी, चित्तले सहन नसकी, छातीमा मुड्कीले

हानी, शिव, शिव ! भन्दै स्वामीको नाम उच्चारण गरी यज्ञ-कुण्डमा हामफाली प्राण छाड्दी भइन् । अनि हिमालय पर्वतकी स्त्री मेनकाको गर्भमा वास लिन पुगिन्।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सतीदेवीदेहत्यागवर्णनं नाम षष्ठोऽध्यायः ।।६।।*

प्रयागको त्रिवेणीस्नान

# अथ सप्तमोऽध्यायः

## दक्षसेना-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! सतीदेवीले त्यसरी प्राण त्यागेको देखेर देवता, यक्ष, गन्धर्व, किन्नर, नाग, दैत्य र ऋषि-मुनि सबैले-अहो ! साह्रै अनर्थ भयो भन्दै आश्चर्य माने । उसै वेला अकस्मात् आँधी चलेर धूलो उडी सारा आकाश ढाक्यो र विपरीत हावा चल्न लाग्यो । बिना-बादलकै मेघ गर्जन लाग्यो। यज्ञमा उपस्थित सबै देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नागहरू धूलो उडेर आँखामा परी हेर्न असमर्थ भए । वायुको वेगमा अड्न नसकी भूमिमा घोप्टिए । वायुको त्यो उग्र वेगले कतिलाई उडाएर लग्यो, कति भूमिमा पछारिए, कति रुन-कराउन लागे । त्यस हुरीमा परे र कतिको हात भाँच्चियो, कतिको खुट्टा मर्कियो, कतिले भूमिमा टाउको टेक्न पुगे, कतिका मुख भूमिमा घोटिएर माटो खान लागे । उठ्न असमर्थ भएका जति रुन-कराउन लागे । कति रक्षा गर, रक्षा गर, मरेँ बाबा ! बचाओ भन्न लागे । यस्ता प्रकारले यज्ञमा उत्पात भएको केही बेरपछि हुरीको वेग

कम भयो र दक्षप्रजापतिले चिन्ता गरी सबै छोरी-ज्वाइँलाई 'नडराओ, डराउनुपर्दैन' भनी सान्त्वना दिइसकेपछि चित्त व्याकुल गरी अब कसो गरूँ भन्दै गुरु बृहस्पतिकहाँ गएर बिन्ती गरे- 'हे गुरो ! अनर्थ भयो, अब कसो गर्नें, असम्भव कुरा प्रत्यक्ष भयो' भन्दै भयभीत स्वरमा कराउन लागे । त्यसै बेला नारदजीले सतीदेवीले अग्नि-कुण्डमा हामफाली प्राण त्याग गरेको देखी हावाभन्दा पनि वेगले शीघ्र कैलास पुगी महादेव-का चरणमा दण्डवत् गरी उभिइरहे । अनि 'हे नारद ! तिमी के भन्न आएका ? भन । किन मौन भई उभिएका छौ ?' यस्तो शंकरजीको आज्ञा सुनी हात जोरेर नम्र स्वरमा बिन्ती गरे- 'हे ईश्वर ! हजुरकी प्राणप्रिया सतीदेवीले दक्षप्रजापतिको यज्ञाग्निमा हामफालेर प्राण त्याग्नुभयो । किनभने-'हे जगदीश्वर ! हे करुणा-निधे ! पापिष्ठ दक्षले हजुरलाई अनेक क्षुद्र वचनले हेलाँ गरी निन्दा गरेको- 'त्यो महादेव कहाँको देवता हो ? त्यो त बौलाहा पो हो, त्यसलाई नडाकेर मेरो के हुन सक्तछ ? मेरा तेत्तीस कोटि छोरी-ज्वाइँ र ब्रह्मा-विष्णु आदि छँदै छन्, कस्तै भए पनि म त्यसलाई डाक्ने होइन' इत्यादि अनेक

दुर्वचन बोलेको सुन्दा सहन नसकी क्रोध-युक्त भएर भूमिमा लात्तले हानी, यज्ञको परिक्रमा गरी, कसैको पनि मुखतर्फ नहेरी, केवल हजुरको नाम 'शिव-शिव' भन्दै यज्ञाग्निमा हामफाली प्राण त्यागिन् । हे प्रभो ! हजुरको डरले अग्निले देह दग्ध गर्न सकेका छैनन् । केवल प्राण छाडेर यज्ञ-कुण्डमा शयन गरे- झैँ सुतिरहनुभएको छ । हे ईश्वर ! यही कुरा बिन्ती चढाउन आएको हुँ । हे चन्द्रमौले ! अनर्थ भयो, अब के गर्ने ?' यति भनी नारदजी उभिइरहे । नारद मुनिका कुरा सुनेर महादेवले आज्ञा भयो- 'हे मुने ! तिमीले भनेको कुरा निश्चय (सत्य) हो कि होइन ?' शिवको यस्तो वचन सुनी नारदले भने- 'हे जगदीश्वर ! हजुरका सामु मिथ्या बोल्ने साहस अथवा शक्ति ममा छैन । ध्यान-दृष्टिले हेर्नुभए सत्याऽसत्य ज्ञात हुनेछ ।' नारदजीका त्यस्ता वचन सुनी ध्यान-दृष्टिले विचार गरी हेर्नुभयो त अत्यन्त क्रोधले तीनै नेत्रबाट अग्निका ज्वाला निकाली, दाह्रा किटी, पाखुरा निमोठ्तै नारदजीको सामुन्ने नै भन्नुभयो-'हे मुने ! तेत्तीस कोटि देवताले रक्षा गरिएको पापिष्ठ दक्षको विनाश नगरी छाड्नेछैन । अब तिमी आफ्नू आश्रममा जाऊ ।'

भनी बिदा दिनुभयो र नारदजी श्रीमहादेवलाई दण्डवत् प्रणाम गरेर आफ्नो धाममा गए ।

नारदजी गएपछि शिवजीले सतीदेवीलाई सम्झेर रिसले तीनै नेत्रबाट अग्निका जस्तै ज्वाला निकाली

शिवजीले जटा पछारेर महाकाली र वीरभद्र उत्पन्न गरेको

शिखाबाट एउटा जटा झिकेर भूमिमा पच्छारे । त्यसबाट मेघ गर्जे-जस्तै चर्को शब्द गरी भयंकर चतुःषष्ठी योगिनी र भूत-प्रेत-पिशाच, प्रमथगणले सहित भएर महाकाली उत्पन्न भइन् । कस्ती महाकाली भने- डरलाग्दो अनुहार भएकी, लामा लामा दाह्रा निस्केकी, आकाश जस्तै पेट भएकी र बाघको छाला कम्मरमा बेह्रेकी, झाँक्रो फिंजेकी, हातमा भयंकर खड्ग लिएकी, कहिले हाँस्ने, कहिले लामो जिभ्रो निकाल्ने यस्ती महाकाली शिवजीको सामुन्ने उभिई- 'के कामले मेरो आराधना

गर्नुभयो ?' भनी बिन्ती गरिन् । अनि महादेवले अघि झैँ अर्को जटा झिकेर भूमिमा पच्छारे । त्यसबाट पृथ्वी कम्पायमान पार्दै, क्रोधित सिंह जसरी गर्जन्छ त्यस्तै ध्वनि निकाल्दै, हजार सूर्य जस्तै तेज भएका, सम्पूर्ण शरीरमा खरानी घसेका, मुण्डमाला लगाएका, दायाँ हातमा त्रिशूल लिएका र बायाँ हातले डमरु बजाउने यस्ता भीषण मूर्ति भएका वीरभद्रले महादेवका अगाडि उभिएर बिन्ती गरे- 'हे शम्भो ! हामीहरूलाई किन आराधना गर्नुभयो ?' तिनीहरूको यस्तो प्रार्थना सुनेर महादेवले आज्ञा भयो- 'हे वीरभद्र ! हे महाकाली ! तिमीहरूलाई पापिष्ठ दक्षप्रजापतिको यज्ञ विध्वंश पारी उसको पनि संहार गरी दक्षका सहायक, संरक्षक देवताहरूको पनि संहार गरेर आओ भनी डाकेको हुँ । अब तिमीहरू नन्दी, भृंगी, चौषट्ठी योगिनी, भूत-प्रेत, पिशाच-समेत भई दक्षको यज्ञ विध्वंश गर्न तत्काल जाओ ।' श्रीमहादेवको यस्तो आज्ञा सुनी नन्दी, भृङ्गी, भूत-प्रेत, योगिनी र पिशाचसहित भई मेघ गर्जे-झैँ सिंहनाद गरी, पृथ्वी डोलायमान पारी साक्षात् यमराज नै प्राणीको नाश गर्न हिंडे-झैँ क्रोधित भएर शिवको आज्ञा शिरोपर गरी कैलास पर्वतबाट

हिंड़े। तिनीहरूको चाला-माला देखेर पृथ्वीलाई भार थाम्न कठिन पऱ्यो र थर्र-थर्र काँपिन् । सात समुद्र छचल्किए । समस्त जीव त्राहि-त्राहि भए । दक्षको यज्ञमा पनि अनेक किसिमका उत्पात हुन लागे । आकाशमा काग र गिद्ध मण्डलाकार गरी उड्दै कराउन थाले । स्यालहरू आँखा र मुखबाट आगोको ज्वाला निकाल्दै कराउन र दगुर्न लागे । रगतको वृष्टि भयो । विपरीत वायु चल्न लाग्यो । यस्तो उत्पात हुन लागेको देखेर यज्ञमण्डपमा बसेका सबै हाहाकार गर्दै यता-उता भाग्न लागे । स्त्री, बालक, बूढाहरू भाग्न नसकी भूमिमा घोप्टिएर रुन-कराउन लागे । कोही अङ्ग के-के हुने हो भनेर डराई त्राहि-त्राहि हुन लागे ।

ठीक उसै बेला शिवको आज्ञा पाएर उन्मत्त भएका वीरभद्र र महाकाली, नन्दी, भृङ्गी आदि शिवका गण मेघ गर्जे-जस्तै गर्जंदै हात्तीका बथानमा सिंह पसे-झैँ दक्षका यज्ञमा पुगे र दक्षद्वारा डाकिएका देवता, यक्ष, गन्धर्व, किन्नर, नाग, दैत्यगणासित परस्पर जुधे । त्यो देखेर दक्षका कन्याहरू, देवकन्या, नागकन्या, ब्राह्मण, ऋषि-मुनि आदि सबै 'त्राहि-त्राहि नारायण' भन्दै रोई

कराई दश दिशातिर भाग्न लागे । कोही भाग्न नसकेर लडे, कसैको हातखुट्टा भाँचियो, कोही टाउकाको भरले पल्टेर माटो खान लागे । कति मूर्च्छा परी असहाय जस्तै भूमिमा लडिरहे । तर विष्णु प्रभृति देवता, यक्ष, गन्धर्व, किन्नर आदि सबैले दक्षप्रजापतिको रक्षा गर्न शस्त्र-अस्त्र लिएर वीरभद्र र महाकाली-माथि प्रहार गर्न लागे । यसरी परस्परमा घमासान संग्राम भयो । इन्द्रादि देवताहरूले कुन-कुन अस्त्र प्रहार गरे भने-इन्द्रास्त्र, अग्न्यस्त्र, देव्यस्त्र, वरुणास्त्र, पाशुपतास्त्र, ब्रह्मास्त्र, तोमर, गदा, खड्ग र मुसल, नागपाश आदिले वीरभद्र र महाकाली तथा चौषष्ठी योगिनी; भूत-प्रेत, प्रमथगण र विषमज्वर-माथि प्रहार गरे । यस्ता तरहले आफूमाथि शस्त्रास्त्र प्रहार गरेको देखेर वीरभद्रका गणहरूले पनि कठोर स्वरले गर्जेर दक्षका सैन्य-भित्र पसी जति भेटे; उतिको टाउको समाती, निमोठी, हात-खुट्टा भाँची, मुड्कीले हानी, रगत छदाई देवताहरूको संहार गरे । उता महाकालीले पनि प्रत्यक्ष काल जस्तै खड्ग लिई वर्षाकालको प्रचण्ड मेघ गर्जे झैं गर्जी, सिंहनाद गर्दै मृगका फौजमा सिंह पसे-झैं र सुकेका परालमा आगो लागे-जस्तै गरी

दक्षका सेनाको संहार गरिन् । वीरभद्र-समेत नन्दी, भृङ्गी, चतुःषष्ठी योगिनी, भूत, प्रेत, पिशाच, प्रमथगण-समेतले शत्रुतिरका कसैको शिर, कसैको हात-खुट्टा छुट्ट्याए। कसैलाई निमोठी रगत पिएर नाच्न लागे, कोही हाँस्न थाले । कसैको मासु लुछेर खाए । कसैको कोखामा प्वाल पारेर रगत पिउन लागे । कोही देवता भागे । यसरी दक्षका कोटि-कोटि सेना र कोटि-कोटि देवताको संहार गरे । त्यसरी संहार गरेको देखेर दक्षका सेना र देवताले वीरभद्र र महाकाली-माथि आफ्ना शस्त्रास्त्र प्रहार गरे, तर ती सम्पूर्ण शस्त्रास्त्र महाकालीको शरीरमा छुनासाथ आफैँ भस्म भएर जान्थे । फेरि शिवगण र महाकालीले दक्षका सैन्य र देवगण, यज्ञमा आएका धेरै वीरहरू मारिदिए । विषम ज्वरले पनि सबैका शरीरमा प्रवेश गरी अचेत पारिदिए । अनि वैकुण्ठका स्वामी श्रीविष्णुले सम्पूर्ण देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग-सहित दक्षका सबै सेना अचेत भएका देखेर आफ्नू देहबाट शीत-ज्वर उत्पन्न गरेर सबैलाई सचेत गराए । फेरि अनेक शस्त्र-अस्त्र लिएर बत्तीमा पुतली गए-झैं वीरभद्र र महाकाली-माथि जाइलागे । वीरभद्रले पनि त्रिशूल

लिई सिंहनाद गर्दै सुकेको खरमा आगो लगाए-झैँ एकक्षणमै दक्षका अनेक सेनाहरू काटी मारि-दिए । तिनमा कसैको शिर छैन, कसैको हात छैन, कसैका खुट्टा छैनन् । यस्तो स्थिति दखेर कोही 'रक्षा गर, रक्षा गर' भन्दै भाग्न पनि नसकी भूमिमा लडिरहे । यसरी सबै देवताहरूको संहार गरी अन्य दैत्य-दानवलाई समाती अग्नि-कुण्डमा होम्न लागे । वीरभद्रले त्यसरी दक्षका सेना, देवता, यक्ष, दानव, गन्धर्व, किन्नरहरूको नाश पारी यज्ञ-स्थल ध्वस्त पारिदिएको हेर्न नसकी श्रीविष्णुले राता-राता आँखा पारी नागले झैँ निःश्वास फेर्दै प्रलयकालको अग्नि जस्तै भई बायाँ हातले पाञ्चजन्य शंख बजाई, दाहिने हातले कौमोदकी गदा उठाई संहारकालका रुद्र जाइलागे-जस्तै वीरभद्रका सेना-माथि जाइलागे । त्यो देखेर देवता, यक्ष, गन्धर्व, किन्नर, नाग आदि सबै र दक्षप्रजापतिका सेनाले "धन्य-धन्य विष्णु, तिम्रो जय कल्याण होस्" भन्दै आफाफ्ना शस्त्रास्त्र लिई विष्णुको सहायतामा लागेर कठोर युद्ध गरे । त्यस्तो देखेर महाकाली रीसले आगोको ज्वाला झैँ डरलाग्दो तेज प्रकट गरी खड्ग लिई जाइलागिन् । त्यो देखी भूत-प्रेत, पिशाच,

प्रमथगण, डाकिनी, शाकिनी र चतुःषष्ठी योगिनी सबै युद्ध गर्न लागे । जस्तै ठूलो हावा चल्नाले मेघ टुक्रा-टुक्रा हुन्छ, त्यस्तै दक्षका सेना, देवता, दैत्य, गन्धर्व, किन्नर, नाग आदि दश दिशामा भागे । तब विष्णुले निर्धक्ककसित वीरभद्रको छातीमा कौमोदकी गदा प्रहार गरे । त्यो गदा वीरभद्रको छातीमा बज्रन गयो, अनि ती मूर्च्छा परी भूमिमा ढले । फेरि विष्णुले नन्दी, भृङ्गी, चौषट्ठी योगिनी, भूत-प्रेत, पिशाच, प्रमथगणका उपर शङ्खको चर्को शब्दका साथ शस्त्रास्त्र प्रहार गरे । त्यसरी विष्णुको प्रहारले कति लडी भूमिमा पल्टे, कति मूर्च्छा परे, कति भागे । त्यो देखेर दक्षप्रजापतिका सेनाले धन्य-धन्य विष्णु भनी स्तुति गरी पुष्पवृष्टि पनि गरे । तब विष्णुले पाञ्चजन्य शंख बजाए । मूर्च्छा भइरहेका वीरभद्र महाकालीका कानमा देवता, यक्ष, गन्धर्व, किन्नर र दक्षका सेनाले संकुलध्वनि र धन्य-धन्य विष्णु भनी स्तुति गरेको शब्द पर्‍यो र चेतना फर्क्यो । आफ्ना सैन्य कोही भूमिमा ढलेका, कोही भाग्न लागेका र कोही के कसो गरूँ भनी अन्योलमा परेका देखी अत्यन्त क्रोधित भई काल-सदृश त्रिशूल लिई विष्णुलाई लक्ष्य गरी वेगले प्रहार

गरे । त्यो त्रिशूल विष्णुका छातीमा लाग्यो । त्यसको कष्ट सहन नसकी नव द्वारबाट रगतको धारा बगाई विष्णु मूर्च्छा परी ढले । उनी मूर्छित भएपछि वीरभद्रले प्रलयकालको मेघ झैं गर्जन गरी दक्षका सेनामाथि जाइलागे । आफ्ना गणसमेत मिलेर कोटि-कोटि देवताहरूको संहार गरे । वीरभद्र गर्जेको शब्द उनका गणहरू नन्दी, भृङ्गी, प्रमथगण-समेतका कानमा पऱ्यो र बिउँझी उभिएर हेर्दा रणभूमिमा विष्णु मूर्च्छा परेका र वीरभद्रले दक्ष-सैन्य र देवताहरूको संहार गरेको देखेर 'धन्य-धन्य वीरभद्र' भनी आफाफ्ना शस्त्र-अस्त्र लिएर दक्षका सैन्यमाथि जाइलागे । त्यसरी अत्यन्त भयंकर युद्ध भयो । कस्तो युद्ध भने, 'हे मुनि ! महाकाली र वीरभद्र तथा उनका सेना समेत जाइलागे । अनि कसैको टुपी समातेर पछारी खड्गले हानी मारे । कसैलाई मुड्कीले नै मारे । चौषट्ठी योगिनीले पनि कतिलाई निमोठेर मारे । कसैको काखीमा प्वाल पारेर रगत पिई मारे । कसैलाई पक्री अग्निकुण्डमा होमिदिए। यस्ता प्रकारले देवता, यक्ष, गन्धर्व, दैत्य, किन्नर-को नाश गरेर वीरभद्रका सैन्यले 'जय-जय' भनी कराएको शब्द मूर्च्छा परेका विष्णुको कानमा

पऱ्यो र मूर्च्छाबाट उठेर हेर्दा वीरभद्र र महाकालीले यज्ञ विध्वंश पारी, देवताहरू र दक्षका सैन्य-समेत नाश गरेको देखी, अत्यन्त क्रोधित भई राता-राता आँखा पारेर हे पापिष्ठ ! आज तेरो नाश गरेर दक्षको यज्ञ पूर्ण पारी सबै देवता, यक्ष, गन्धर्व, नाग आदि सबैलाई सन्तोष दिनेछु । आज एकादश रुद्र तेरो सहायक भएर आए पनि रक्षा गर्न सक्नेछैनन् । सम्पूर्ण दुष्टको संहार गर्ने यो चक्र देखिस् ? भनी सुदर्शन चक्र देखाए । विष्णुले भनेको त्यस्तो क्षुद्र वचन सुनेर वीरभद्र रीसले चूरभई भन्दछन्- हे पापिष्ठ विष्णु ! सम्पूर्ण दुष्टको नाश गर्ने चक्र भनेर देखाइस् । तेरो पराक्रम-माफिक त्यो चक्र मेरा उपर प्रहार गरेर हेर् । मुखले भनेर मात्र केही हुन सक्तैन । यस्तो वीरभद्रको वचन सुनी विष्णु रिसाई वीरभद्रलाई ताकेर सुदर्शन चक्र प्रहार गरे । त्यो चक्र अनेक सूर्यको जस्तो तेज र प्रलय-कालको मेघ गर्जे-झैं गर्जना गर्दै काल-रुद्र नाश गर्न गए-झैं गयो । त्यस्ता प्रकारले आएको त्यो चक्रलाई देखी नन्दी, भृङ्गी, भूत-प्रेत, चौषट्ठी योगिनी, प्रमथगण आदि शिवगण त्राहि-त्राहि वीरभद्र-महाकाली भनी उनका नगीचै गए ।

जस्तो समुद्र मथनमा कालकूट विष निस्केर सबैलाई भस्म पार्न खोज्दा त्यो विष शिवले पान गर्नुभएको थियो, त्यस्तै त्यो चक्र आएको देखेर वीरभद्रले 'आँ' मुख बाइदिएकोले वीरभद्रको मुखमा पस्यो र उनले निल्न तयार भएको देखी विष्णुले चाँडो गरी वीरभद्रका मुखबाट सुदर्शन चक्र झिकी त्यहाँबाट अन्तर्धान भई वैकुण्ठ जाँदा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानीपरमेश्वर्या व्रतकथायां दक्षसेनावधो नाम सप्तमोऽध्यायः ।।७।।*

काशीको गंगास्नान

# अथ अष्टमोऽध्यायः

## दक्षयज्ञविध्वंस-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! विष्णु भगवान् संग्रामबाट अन्तर्धान भएपछि बाँकी बचेका देवता, यक्ष, गन्धर्व, किन्नर र दैत्य सबै हाहाकार गरेर दश दिशातिर भागे । ती परस्परमा भन्दथे- 'अब दक्षप्रजापतिको प्राण रहन्न किनकि नारायण जस्ताको सुदर्शन चक्र मिथ्या भयो, जुन चक्र लिई विष्णु खड़ा हुँदा स्वयं शिव पनि टिक्न सक्तैनथे, त्यस्ता नारायण पनि भागे । अब हाम्रो क्षुद्र पराक्रमले के होला ! तस्मात् अब आफाफ्नू प्राण रक्षा गर्नु नै उचित हो' भन्दै दश दिशा भागे । नारायण-सहित देवता, यक्ष, गन्धर्व, नाग आदि आफाफ्नू जीवन बचाई भागेको देखी वीरभद्रले नागले झैं निःश्वास फेरी, वर्षा-कालको मेघ गर्जे झैँ गर्जी, तत्काल दक्षको टुपी समाती भूमिमा ढलाई बोध गराए- 'हे पापिष्ठ दक्ष ! तैँले महादेवको अनेक निन्दा गरिस् । आफ्नी छोरीको हत्या गरिस्, तँ जस्तो पापी यस संसारमा खोजे पनि पाइन्न । त्यो बौलाहा हो, उसलाई नडाके मलाई के होला ! भनी त्रिलोकका ईश्वरको

निन्दा गरिथिस्, अब यस बखतमा तेरा रक्षक ज्वाइँहरू कता गए ? तिनीहरूको सहायता माँगी आफ्नू प्राण बचा । तेरो यज्ञ बिना-शंकर नै पूरा गराऊन् । अब तँलाई पनि यही यज्ञमा होम्न सके हामीलाई सन्तोष होला' भनी अनेक तरहले बोध गराई दक्षप्रजापतिको शिर काटेर अग्नि-कुण्डमा होमिदिए । यस्ता प्रकारले दुष्ट-संहार गरेको देखी नन्दी, भृङ्गी, चतुःषष्ठी योगिनी, भूत-प्रेत, विषमज्वर र महाकाली आदिले प्रसन्न भई, शिव-निन्दक दक्षप्रजापतिको नाश गऱ्यौ, धन्य-धन्य वीरभद्र ! तिमी-समान वीर यस संसार-मा हुन दुर्लभ छ भनी स्तुति गरे । त्यसपछि दक्षप्रजापतिकी स्त्री विरणीले आफ्ना पतिको शिर यज्ञकुण्डमा होमिदिएको देखेर अत्यन्त अधैर्य भई ठूलो हावा चल्दा केराको थाम ढले-झैं पृथ्वीमा ढली मूर्च्छा परिन् । केही बेरमा चेष्टा आयो र शोक गर्न थालिन् - 'हे नाथ ! मलाई यस अवस्थामा अनाथ तुल्याई कता गयौ ? जगदीश्वर महादेवलाई यज्ञमा नडाक्ता यस्तो भयो । हे मूढ ! व्यर्थको अभिमान मनमा लिएर शिवको निन्दा गर्दा आफू मृत्युमा प्राप्त भयौ, मेरो यो गति भयो' भनी अनेक प्रकारले शोक गरेर

वीरभद्रसित प्रार्थना गरिन् - 'हे ईश्वर ! मेरा पति दक्षप्रजापति अज्ञानी, मूढ र अभिमानी पनि हुन् । तिनलाई कुनै चेष्टा पनि थिएन । त्यस्ता मूढको नाश गरी हजुरको के कीर्ति होला[१]। मलाई विधवा नतुल्याई स्वामी वरदान दिनुहवस्। हे वीर ! आफ्नू सृष्टि आफैँले संहार गर्नु अनुचित हो । सृष्टि-स्थिति-संहार गर्ने महारुद्र पनि तिमी, महादेव पनि तिमी, आदि मध्य अन्त्य नभएका ब्रह्मा, विष्णु, शिव जे भने पनि तिमी नै हौ। हे भक्त-वत्सल ! मेरो मुख हेरी मेरा स्वामीको सबै अपराध क्षमा गरेर जीवन दान दिई मलाई सौभाग्यवती बनाउनुहवस्' भनेर स्तुति गरेको इन्द्रादि देवताहरूले सुनी आकाशबाट पुष्पवृष्टि गरी- 'हे वीरभद्र ! दक्षप्रजापतिलाई जीवनदान दिई विरणीलाई सन्तोष दिनुहवस्' भनी आकाशवाणी गरे । देवताहरूले त्यस्तो आग्रह गरेको र विरणीको चिन्तित अनुहार देखेर मनमा करुणा उत्पन्न भयो र विरणीतर्फ

१. दक्षप्रजापतिले शिवजीसँग विरोध गरेको कारण: - अघि कुनै समयमा ब्रह्माजीको यज्ञमा दक्षप्रजापति पुग्दा सभामा बसेका सबै जना उठे, तर शिवजी उठ्नुभएन र दक्षले त्यहीँ शिवको अनेक निन्दा गरे तापनि दक्षले आफ्नू अपमान गरे भनेर शिव रिसाउनुभएन, केही नबोली त्यहाँबाट हिंड्नुभयो ।

हेरी वीरभद्रले भने- 'हे विरणी ! तिम्रो स्तुतिले म प्रसन्न भएँ र तिमीलाई स्वामी वर दिन्छु, तर तिम्रो स्वामीको शिर मैले अघि नै अग्निकुण्डमा होमिसकेँ । अब यज्ञमा बलि दिएको बोकाको शिर जोरेर जीवित पारिदिन्छु, किनकि दक्षले जगदीश्वरको साह्रै निन्दा गर्‍यो, अतः यो पशु

वीरभद्रले दक्षको शरीरमा बोकाको टाउको जोरिदिएको

हो, यसैले पशुकै टाउको जोरिदिन्छु ।' यस्तो वीरभद्रको वचन सुनी विरणीले 'हुन्छ' भनी अञ्जलि जोरी उभिइरहिन् । अनि वीरभद्रले यज्ञशालाबाट बोकाको टाउको मगाई पछिल्तिर मुख फर्काएर जोरी दक्षप्रजापतिलाई जिलाइ-दिए । दक्षप्रजापति जीवित भएपछि विरणीले मनमा सन्तोष मानी छाग-मुख अर्थात् बोकाको टाउको भएका स्वामी-सहित भै वीरभद्र र

महाकालीलाई दण्डवत् प्रणाम गरी आफ्नू घर गए ।

यता वीरभद्र र महाकाली पनि देवता, यक्ष, गन्धर्व, किन्नर आदिको संहार गरी, दक्षको यज्ञ विध्वंश पारी नन्दी, भृङ्गी, चतुःषष्ठी योगिनी, भूत-प्रेत, प्रमथगण समेत त्यहाँबाट अन्तर्धान भई कैलासमा पुगी शिवजीलाई दण्डवत् प्रणाम गरेर- 'हे ईश्वर ! हजुरको आज्ञा-अनुसार दक्षको यज्ञ विध्वंश पारी देवता, यक्ष, गन्धर्व र उसका समस्त रक्षक मारी दक्षको शिर छुट्ट्याई अग्निकुण्डमा होमिसकेपछि उसकी स्त्री विरणीले आफ्ना स्वामी मरेको देखी साह्रै दीन भावले विलाप गर्न लागिन् । त्यो देखेर मैले अग्निकुण्डमा बलि दिएको बोकाको टाउको ल्याएर पछाडि मुख फर्काई जोरेर दक्षप्रजापतिलाई जिलाई आएँ' भनी बिन्ती गरे र महादेव प्रसन्न भई- 'हे वीरभद्र ! हे महाकाली ! तिमीहरू धन्य रहेछौ, म प्रसन्न भएँ' यति भनी ती दुवैलाई आफ्नू शरीरमा लीन गराए । त्यसपछि महादेवले प्राणप्रिया सतीलाई सम्झी दक्षप्रजापतिले यज्ञ गरेको स्थानमा पुगेर हेर्दा अग्निकुण्डमा सुतिरहेकी सतीदेवीलाई देखी 'हा सती ! कैलास

शून्य तुल्याई मलाई एक्लै छाडेर कता गयौ ?' भन्दै साह्रै नै अधैर्य भई वृक्ष ढले-झैं भूमिमा लडी मूर्च्छा परे । केही बेरमा चेत आयो र 'हे प्यारी ! अब मैले यस संसरमा बाँच्नु पनि व्यर्थ भयो । मलाई एकक्षण पनि एक्लै नछाडी मेरै मुख्याञ्जी बसेर मैले भनेका कथा पुराणहरू सुनिरहन्थ्यौ, मेरो वचन नमान्दा तिम्रो यो गति भयो, म यस स्थितिमा पुगें' भन्दै मुड्कीले छाती ठोकी, वर्षाकालमा आकाशबाट पानी परे-झैं मोतिका दाना जस्ता आँसुका ढिका खसाली फेरि विलाप गर्न लाग्नुभयो-'हे प्रिये ! म कतै गएर आउँदा सुनको कमण्डलु लिई गोडा धोइदिन आउँथ्यौ । हे प्यारी ! मेरो खाने वस्तु भनेर विष, भाङ, धतुरो-मेरो स्वामीले खाने वस्तु भनेर जतन गरी राख्दथ्यौ, अब को राखिदेला ! तिमी-बिना मेरो चित्त कसरी स्थिर रहला ?' यसरी भन्दै कहिले काखमा लिने, कहिले अंकमाल गर्ने, कहिले म्वाइँ खाने, कहिले छातीमा हात राख्ने, कहिले सतीदेवीको हात समाई आफ्नू छातीमा राख्ने, यसरी अनेक प्रकारका शोक गरी सतीदेवीको मृत शरीर पिठिउँमा बोकी बौलाहा

जस्तै भएर पृथ्वी भ्रमण गरी हिंडे । महादेवले

महादेवले सतीदेवीको मृत देह बोकेर बौलाहा झैं हिंडेको

पीठमा बोकेकी हुनाले गलित वा दुर्गन्ध केही भइनन् । केवल निदाए की जस्ती भएर रहिन् ।

।।इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां दक्षयज्ञविध्वंशवर्णनं नाम अष्टमोऽध्यायः ।।८।।

काशी का कालभैरव र विशालाक्षी

# अथ नवमोऽध्यायः

## सतीअङ्गपतन-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ-हे अगस्त्य मुनि ! त्यहाँपछि इन्द्रादि समस्त देवताहरू महादेवले सतीदेवीलाई त्यसरी पीठमा बोकेर पृथ्वी भ्रमण गरेर हिंडेको देखी वैकुण्ठ गएर विष्णु भगवान्सित बिन्ती गरे- 'हे परमेश्वर ! महादेवले शोक गरेको देखेर दुःखी नहुने यो समस्त ब्रह्माण्डमा यौटा जीव पनि पाइने छैनन् । हजुरले यो ब्रह्माण्डको रचना गर्ने र शिवजीले रक्षा गर्ने हो । हजुर दुईले नगरे विश्वको सुरक्षा अरू कसले गर्ला ? यस बखत शिवजी दक्षको यज्ञबाट सतीदेवीलाई पीठमा बोकेर पृथ्वी भ्रमण गरिरहेका छन् । जबसम्म सतीदेवीको मृत देह रहला, तबसम्म शिवजी भ्रमण गरि नै रहनेछन् । अब हजुरको मायाले माखा वा झींगा सृष्टि गरी औंसा वा कीरा पारी सतीदेवीको अंग गलाएर पतन गराइ-दिनुहवस् । सकल देवताको यस्तो बिन्ती सुनी विष्णु आज्ञा हुन्छ - 'हे देवता हो ! तिमीहरूको कल्याणका लागि म आफ्नू मायाले झींगा उत्पन्न गरी औँसा पारी सतीको देह गलाई पतन गराउँला,

यसमा शंका नगरे । अब तिमीहरू अमरावती जाओ ।' भगवान् विष्णुको त्यस्तो आश्वासन पाएपछि देवताहरू 'हवस्' भनी विष्णुलाई दण्डवत् प्रणाम गरी आफाफ्ना लोकमा फर्के । अनि विष्णु भगवान्ले आफ्नू मायाद्वारा झींगा उत्पन्न गरी औंसा पारिदिए । अनि सतीदेवीको शरीर टुक्रा-टुक्रा भएर पतन भयो । जहाँ-जहाँ अंग पतन भयो, त्यहाँ-त्यहाँ एक-एक पीठ उत्पन्न भयो । त्यहीं त्यहीं ब्रह्माजीले एक-एक स्वयंभू लिंग उत्पन्न गराए । सबभन्दा पहिले नेपालमा गुह्य पतन भयो । नेपाल पीठ, गुह्येश्वरी देवी, चन्द्रघण्टा योगिनी, सिद्धेश्वर महादेव उत्पन्न भए, शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा इन्द्रादि देवता आई तपस्या गरे । ईश्वरी प्रसन्न भई 'सत्य, त्रेता, द्वापर र कलि यी चारै युगमा देवताकै नामले प्रख्यात भए' भनी वरदान दिइन् । फेरि वाराणसीमा पुग्दा शिर पतन भयो । वाराणसी पीठ, विशालाक्षी देवी, शंकटा योगिनी, विश्वेश्वर महादेव उत्पन्न भए । शिवशक्ति स्वरूपले रहे । त्यस मोक्ष-भूमिमा गन्धर्वहरू आई नाच-गान-द्वारा तपस्या गरे । ईश्वरी प्रसन्न भै वाक्य-सिद्धि हुने वरदान दिइन् । फेरि कामरूपमा पुग्दा छाती

पतन भयो । कामरूप पीठ, कामाक्षा देवी, कीर्ति योगिनी, चक्रधरेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा यक्षगण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'स्वर्ग-मर्त्य-पातालमा सदा यक्षगणका नामले विख्यात हुनेछौ' भनी वरदान दिइन् । फेरि पौरबन्धमा गएर दाहिने कान पतन भयो । पौरबन्ध पीठ, अम्बिका देवी, चन्द्रवेगा योगिनी, धनेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा दैत्यगण आई तपस्या गरे । ईश्वरी प्रसन्न भई देवगणलाई जित्न सके भनी वरदान दिइन् । फेरि कश्मीरमा गई जिभ्रो पतन भयो । कश्मीर पीठ, शारदा देवी, घोरघण्टा योगिनी, श्रमधारेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे। त्यस पुण्य-भूमिमा किन्नरगण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'इच्छासिद्धि हवस्' भनी वरदान दिइन् । फेरि कन्नौजमा पुगी अंगको छाला पतन भयो । कान्यकुब्ज पीठ, सफला देवी, झंकेश्वरी योगिनी र दुग्धेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा रावण आई तपस्या गर्‍यो । ईश्वरी प्रसन्न भई देवलोक जित्न सकेस् भनी वरदान

दिइन् । फेरि पूर्णगिरिमा गई बायाँ कान पतन भयो । पूर्णगिरि पीठ, पूर्णा देवी, कपालकुण्डला योगिनी र चन्द्रेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्ष-भूमिमा गन्धर्वहरू आएर नाच-गान गरी तपस्या गरे । ईश्वरी प्रसन्न भई 'इन्द्रका सभामा नाच-गानमा कहिल्यै नचुके' भनी वरदान दिइन् । फेरि अस्तातकमा पुग्दा दाहिने हात पतन भयो । अस्तातक पीठ, कर्तेश्वरी देवी, एकाक्षी योगिनी, निद्रापतेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा राधिकागण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई तिमीहरूको सदैव कृष्ण दाहिना (अनुकूल) रहून् भनी वरदान दिइन् । फेरि चामुण्डाचलमा गई बाहु पतन भयो । चामुण्डा-चल पीठ, पुकम्बी योगिनी, चामुण्डा देवी र इच्छावीरुकेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा नारद मुनि आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'तिम्रो वाक्यसिद्धि हवस्' भनी वरदान दिइन् । फेरि एकावीरमा पुग्दा बायाँ हात पतन भयो । एकावीर पीठ, सिद्धेश्वरी देवी, सिद्धा योगिनी, दुग्धेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले

रहे । त्यस पुण्य-भूमिमा कर्णवीर आदि श्मशान आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'सम्पूर्ण मृतकको दाह गर्न सके' भनी वरदान दिइन् । फेरि कामरोष्ठमा पुग्दा घाँटी पतन भयो । कामरोष्ठ पीठ, कामिनी देवी, महाकालेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा लक्ष्मी आएर तपस्या गरिन् । ईश्वरी प्रसन्न भई सृष्टि-स्थान हुन सके भनी वरदान दिइन् । फेरि त्रिश्वेतमा पुगेर मलद्वार पतन भयो । त्रिश्वेत पीठ, महाकालेश्वरी देवी, विकटदन्ता योगिनी, त्रिपुरेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा यमराज आएर नाना उपचारले पूजा-सहित तपस्या गरे । ईश्वरी प्रसन्न भई 'ब्रह्माजीको सृष्टि संहार गर्न सके' भनी वरदान दिइन् । फेरि कैलास पर्वतमा पुगेपछि दाहिने पाउ पतन भयो । कैलास पीठ, पार्वती देवी, अम्बिका योगिनी, विश्वम्भरेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे। त्यस मोक्ष-भूमिमा ब्रह्मा आएर अनेक स्तुति-सहित तपस्या गरे। ईश्वरी प्रसन्न भएर वरदान माँग भनिन् र ब्रह्माले 'तीनै लोकमा सृष्टिकर्ता हुन पाऊँ' भनी वरदान माँगे । ईश्वरी प्रसन्न भई 'तथास्तु'

भनी वरदान दिइन् । फेरि भृगुक्षेत्रमा पुगी उपल्लो दाँत पतन भयो । भृगु पीठ, शरदा देवी, ब्रह्मदाह्य योगिनी, सत्येश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा धर्मदत्त राजा आएर योग-मार्गले तपस्या गरे । ईश्वरी प्रसन्न भई 'तिमीलाई कसैले जित्न नसकून्' भनी वरदान दिइन् । फेरि चन्द्रपुरमा गएर दक्षिण नेत्र पतन भयो । चन्द्रपुर पीठ, चन्द्रा देवी, सिद्धा योगिनी, प्रकाशेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा दश दिक्पाल आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'तिमीहरू आफाफ्ना दिक्स्थितिमा रहन सके' भनी वरदान दिइन् । फेरि केदारमा गएर देब्रे हात पतन भयो । केदार पीठ, केदारेश्वरी देवी, चामुण्डा योगिनी, कोटेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा एकादश रुद्र आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् र एकादश रुद्रले 'हामीहरूको तेज समान रहोस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि श्रीपीठमा पुग्दा तालु पतन भयो । श्रीपीठ, कमला देवी, भद्रा योगिनी, कमलेश्वर महादेव उत्पन्न भए । शिव-

शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा अष्टवसु आएर षोडशोपचारले पूजा र तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । अष्टवसुले 'हामीहरू को वाक्य-सिद्धि हवस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि एकावीरमा गएर नाभि पतन भयो । एकावीर पीठ, एकवीरा देवी, गोरक्षा योगिनी, हाटकेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा नागहरू आएर नाना रत्न मणिमाणिक्य चढाई पूजा र तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ भनिन् ।' नागहरूले 'सप्त पातालको अधिपतित्व प्राप्त होस्,' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि जालन्धरमा पुगेर तल्लो ओठ पतन भयो। जालन्धर पीठ, जालपा देवी, ज्वालामुखी योगिनी, पिशाचेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा कामधेनु गाई आएर नित्य दूध अर्पण गरी तपस्या गरिन् । ईश्वरी प्रसन्न भई 'वरदान लेऊ' भनिन् । कामधेनुले 'मेरो दूध, दही, घिउ, मल-मूत्र सधैं पवित्र मानियोस्,' भनी माँगिन् । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि कुशलान्तमा पुगेर कपालका केश पतन भए । कुशलान्तक

पीठ, भूतघण्टा योगिनी, क्षीरेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे। त्यस मोक्षभूमिमा अश्विन्यादि सत्ताईस नक्षत्र आएर भक्तिसाथ तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'वरदान लेओ' भनिन् । नक्षत्रहरूले 'ज्योतिष शास्त्र हाम्रो अधीनमा रहोस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि मल्लवीमा पुगेर बायाँ पैताला पतन भयो । मल्लवी पीठ, महाकाली देवी, कराला योगिनी, भूपालेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यहाँ द्वादशादित्य आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । द्वादशादित्यले 'हामी बाह्र महीनाका अधिपति रहौँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि देवकोटमा पुगेर बायाँ घुँडा पतन भयो । देवकोट पीठ, भद्राक्षी देवी, ललिता योगिनी र मातेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा मेषादि बाह्र राशि आएर तपस्या गरे। ईश्वरी प्रसन्न भई वरदान माँग भनिन् । राशिहरूले 'मनुष्यहरू हाम्रा अधीनमा रहून्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि गोकर्णमा पुगेर बायाँ कान पतन भयो । गोकर्ण पीठ, भैरवी देवी, एकजंघा योगिनी,

यागेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा विष्कुम्भादि योगहरूले ठूलो कष्ट सहेर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'वरदान लेओ' भनिन् । ती योगहरूले 'ज्योतिष शास्त्र हाम्रा अधीनमा रहून्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि अट्टहासमा पुगेर तल्ला दाँतहरू पतन भए । अट्टहास पीठ, भ्रामरी देवी, शंखधरा योगिनी, शतभूतेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा वाग्मती आदि नदीहरू आएर जल चढाई भक्तिपूर्वक तपस्या गरे । ईश्वरी प्रसन्न भई वरदान माँग भनिन् र वाग्मती आदि नदीहरूले 'हामीमा भुक्ति-मुक्ति दिने अधिकार होस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि मातुलेश्वरमा पुगेर दाहिने स्तन पतन भयो । मातुलेश्वर पीठ, योगेश्वरी देवी, पिंगला योगिनी, बुधराधेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा आई कश्यपादि ऋषिहरूले तपस्या गरे । ईश्वरी प्रसन्न भई वरदान लेओ भनिन् । ती ऋषिहरूले 'चारै वेद हाम्रा अधीनमा रहून्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि विश्वमा पुगी बायाँ स्तन पतन भयो । विश्वपीठ,

भुवनेश्वरी देवी, भुवना योगिनी, कृष्णावर्णेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा श्रीकृष्ण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर वरदान माँग भनिन् । श्रीकृष्णले 'तीनै लोकका स्त्रीहरू मलाई देखेर मोहित होऊन्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सतीदेवीअंगपतनं नाम नवमोऽध्यायः ।।९।।*

•

नवराज को लावण्य नगर

# अथ दशमोऽध्यायः

## पीठोत्पत्ति-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! राजगृहमा गएर दाहिने कुहुना पतन भयो । राजगृह पीठ, राजगृहेश्वरी देवी, उल्कामुखी योगिनी, हरेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा वायु आएर अनेक तरहले मीठा सुगन्ध बहाई तपस्या गरे । ईश्वरी प्रसन्न भएर वरदान लेऊ भनिन् । वायुहरूले 'संसारमा जति जीवात्मा छन् तिनको प्राणवायु हुन सकौं' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि कोह्लापुरमा गई उदर पतन भयो । कोह्लापुर पीठ, महालक्ष्मी देवी, नन्दा योगिनी, श्मशानेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्य-भूमिमा गरुड़ आएर नाना रत्न एवं फल-फूल चढाई तपस्या गरे । ईश्वरी प्रसन्न भई वरदान लेऊ भनिन् । गरुड़ले 'नागहरू मेरा आहारा होऊन्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि महापन्थमा गएर बायाँ कुहुनो पतन भयो । महापन्थ पीठ, प्रचण्डचण्डिका देवी, रेणुका योगिनी, विश्वा-

मित्रेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा अप्सराहरू आएर नाच-गान-सहित तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । अप्सराहरूले 'इन्द्रादि देवताहरू-लाई सदैव मोहित पार्न सकौँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि एकापुरमा पुगी दाहिने घुँडा पतन भयो । एकापुर पीठ, साधुक्षी देवी, संकुपा योगिनी, उन्मत्तेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा शिलाहरू आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । शिलाहरूले 'देवताका अंगमा लागौँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि ॐकारपुरमा गएपछि माथिल्लो ओठ पतन भयो । ॐकार पीठ, मातृका देवी, पूर्णोदया योगिनी, सन्तानेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्ध-भूमिमा कल्पवृक्ष आएर अनेक फल-फूल चढाई पूजा र तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेऊ' भनिन् । कल्पवृक्षले 'जहिले जे चितायो सो फलाउन सकूँ' भनी माँगे । ईश्वरी प्रसन्न भई 'तथास्तु' भनिन् । फेरि उज्जयनमा पुग्दा रगतको डल्लो पतन भयो । उज्जयिनी पीठ, महाकाली

देवी, ललज्जिह्वा योगिनी र झंकेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा हिमालय पर्वत आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेऊ' भनिन् । हिमालयले 'देवता, दैत्य, मनुष्य सबैलाई मुक्ति दिन सकूँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि जयन्तीपुरमा पुग्दा कलेजो पतन भयो । जयन्तीपुर पीठ, जयन्ती देवी, खेचरा योगिनी, कल्पेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा तुलसी, कुश आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । तुलसी, कुशले 'स्वर्ग, मर्त्य, पाताल तीनै लोकले हामीलाई मानून्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी बरदान दिइन् । फेरि चरित्र पुरमा पुग्दा दाहिने करङ पतन भयो । चरित्रपुर पीठ, सवर्णेश्वरी देवी, चित्रवर्णा योगिनी, वायव्येश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा योगिनी-गण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । योगिनीहरूले 'योग सिद्ध हवस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि क्षीरिकापुरमा गएर भुँडी पतन भयो । क्षीरिकापुर पीठ, युगधारा

देवी, कलंका योगिनी, सहस्रनेत्रेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्ष-भूमिमा मातृकागण आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । मातृकागणले 'हामी स्थानका स्वामी होऔँ' भनी माँगे । ईश्वरी प्रसन्न भई 'तथास्तु' भनी वरदान दिइन् । फेरि हस्तिनापुरमा पुग्दा दाहिने कुम पतन भयो । हस्तिनापुर पीठ, चण्डेश्वरी देवी, कोटराक्षी योगिनी, मुसुखारेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा सुदर्शन चक्र आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'वरदान लेऊ' भनिन् । सुदर्शन चक्रले 'संहारकर्त्ता हुन सकूँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि उड्डीयनमा पुगेपछि शिर पतन भयो । उड्डीयन पीठ, चित्रकला देवी, पिंगलाक्षी योगिनी, यज्ञेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा हनुमान्ले फल-फूल चढाई, नाची, उफ्री तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । हनुमान्ले 'रामचन्द्रको सेवक भएर लंका पोल्न सकूँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि विश्वमा पुग्दा मिगौंला पतन भयो । विश्वपीठ,

झंकेश्वरी देवी, झंकाली योगिनी, कुण्डलेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा विश्वकर्मा आएर अनेक सुन्दर देवालयहरू बनाई तपस्या गरे। ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । विश्वकर्माले 'मेरो कीर्ति सत्य, त्रेता, द्वापर र कलि चारै युगमा स्थिर रहोस्' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि प्रयागमा पुग्दा फोक्सो पतन भयो । प्रयाग पीठ, सुन्दरी देवी, सिंहजंघा योगिनी, महीदेवेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्षभूमिमा दश अवतार आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर वरदान लेओ भनिन् । दश अवतारले 'सत्य, त्रेता, द्वापर, कलि चारै युगमा दैत्य संहार गर्न सकौँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि मायापुरमा गएपछि फियो पतन भयो । मायापुर पीठ, मायादेवी, चंचला योगिनी र तपस्येश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा चौषट्ठी लिंग आएर जप ध्यानादिद्वारा तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । चतुःषष्ठी लिंगले 'हामी स्वयंभू लिंग भएर रहन पाऔँ'

भनी माँगे । ईश्वरीले 'तथास्तु' भनिन् । फेरि मल्लगिरिमा पुग्दा बायाँ कुम पतन भयो । मल्लगिरि पीठ, मल्लिका देवी, कोकुरा योगिनी, उत्पन्नेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस शुद्धभूमिमा भूत-प्रेत, पिशाच आदि आएर नाच-गानद्वारा तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । भूत-प्रेत र पिशाचले 'सधैँ तिम्रो नगीचमा बस्न पाऔँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि मलयागिरिमा पुग्दा आसन पतन भयो । मलयागिरि पीठ, वज्रेश्वरी देवी, कोमला योगिनी, जागेश्वरी महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे। त्यस सिद्धभूमिमा सत्य आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'वरदान माँग' भनिन् । सत्यले 'सत्यमा रहनेलाई उद्धार गर्न सकूँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि मेरु-गिरिमा पुगेपछि शुचिस्थान पतन भयो । मेरुगिरि पीठ, पूर्णा देवी, कपालिनी योगिनी, जिह्वापतेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा सप्तनाग आएर तपस्या गरे । ईश्वरी प्रसन्न भएर 'वरदान लेओ' भनिन् । नागहरूले 'हाम्रो शरीर अगम्य रहोस्'

भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि सेनामा गएर मुकुट पतन भयो । सेना पीठ, उमा देवी, अष्टवक्त्रा योगिनी, कामेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा नवग्रह आएर तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान लेओ' भनिन् । नवग्रहले 'लाभ-हानिको अधिकार पाऔँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि मेहन्द्रमा पुग्दा दाहिने तिघ्रा पतन भयो । महेन्द्र पीठ, इन्द्राणी देवी, ऊर्ध्वगमनी योगिनी, तारकेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा लक्ष्मी आएर नाना रत्न र द्रव्यादि चढाई तपस्या गरिन् । ईश्वरी प्रसन्न भएर 'वरदान माँग' भनिन् । लक्ष्मीले 'कार्तिक कृष्ण अमावस्याका दिन सम्पूर्ण लोकले मेरो पूजा गरून्' भनी माँगिन् । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि हिरण्यपुरमा पुगेर सुतस्थान पतन भयो । हिरण्य पीठ, नवरत्नेश्वरी देवी, त्रिपुरेन्द्रा योगिनी, नारदेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा सरस्वती आएर अनेक स्तुति र तपस्या गरिन् । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । सरस्वतीले 'समस्त जीवात्माको बोलीमा

मेरो निवास होस्' भनी माँगिन् । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि वानरपुरमा पुगेर बायाँ तिघ्रा पतन भयो । वानरपीठ, कामेश्वरी देवी, भेरुण्डा योगिनी, वेदान्तेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस मोक्ष-भूमिमा कमल आदि अनेक पुष्प आएर मीठो सुगन्ध फिंजाई तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । फूलहरूले पूजा-कालमा प्रशस्त होऔं' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि महालक्ष्मी पुरमा गएर बायाँ करङ पतन भयो । महालक्ष्मीपुर पीठ, कमलाक्षी देवी, दिगम्बरा योगिनी, त्रिकुटेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस सिद्धभूमिमा अणिमादि अष्टसिद्धि आएर योगमार्गले तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । अष्टसिद्धिले 'अमर होऔं' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि उद्यानमा पुग्दा कण्ड्याउलो पतन भयो । उद्यान पीठ, त्रिपुरासुन्दरी देवी, सुशंकोदरा योगिनी, भैरवेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा मेघ आएर मानसोपचारले पूजा र तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग'

भनिन् । मेघले 'समस्त संसारलाई जलदान गरी उद्धार गर्न सकूँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । फेरि छायाछत्रमा पुगेर शेष रहेका सबै अंग पतन भए । छायाछत्र पीठ, छत्रेश्वरी देवी, सुसुकोदरा योगिनी, पिशाचेश्वर महादेव उत्पन्न भए । शिव-शक्ति स्वरूपले रहे । त्यस पुण्यभूमिमा अष्टभैरव आएर नाना उपचारले पूजा एवं तपस्या गरे । ईश्वरी प्रसन्न भई 'वरदान माँग' भनिन् । अष्टभैरवले 'मातृकागणको अधिपति होऔँ' भनी माँगे । ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । हे अगस्त्य मुनि ! यस्तै किसिमले जुन-जुन स्थानमा सतीदेवीको अंग पतन भयो, त्यहाँ-त्यहाँ एक-एक पीठ र स्वयम्भू लिंग उत्पन्न हुँदै गयो । समस्त पीठको संख्या साढे सात करोड़ छ (७,५०,००,०००) । त्यसमध्ये पचास पीठको मात्र दर्शन गरे पनि अवश्य मुक्ति प्राप्त हुन्छ । मनुष्य-जन्म पाएर ती पचास पीठमा एक पीठको पनि दर्शन गर्न सकेन भने त्यसले जन्म लिएको व्यर्थ हुन्छ भनी स्वयं ब्रह्माजीले आज्ञा भएको छ ।

*।।इति श्रीस्कन्दपुराणे केदारखण्डे मायमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां अंगपतन-पीठोत्पत्तिवर्णनं नाम दशमोऽध्यायः ।।१०।।*

# अथ एकादशोऽध्यायः

## मृगस्थली - उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! तहाँ उप्रान्त सतीदेवीको प्रत्येक अंग पतन भयो र महादेवले चित्त दृढ पार्न नसकी हा सती ! भन्दै भूमिमा ढली मूर्च्छा परे। निकै बेरपछि होश आयो र लामो-लामो सास फेरी चित्तले सतीलाई नै सम्झी बौलाहा जस्तै जताततै डुल्न लागे। त्यस्ता तरहले महादेव हिंडेको देखी तारकासुर दानवले आफ्ना मन्त्रीगण डाकी भन्यो-'हे मन्त्री हो ! हेर, सतीदेवीको वियोगमा महादेव बौलाहा जस्तै भएर हा सती ! भन्दै हिंडिरहेका छन् । यसै अवसरमा देवताहरूलाई युद्धमा जितेर इन्द्रको अमरावती हात लाउनुपर्दछ । अब हामीलाई कसैले केही गर्न सक्तैन । अहिल्यै जाऔँ' भनी तत्काल आफ्ना सेनाहरू अगि लगाएर सेनापति र मन्त्री-सहित भई लड़ाइँ गर्न अमरावती गयो । त्यो देखेर देवराज डराई- 'हे देवता हो ! अब हामी यहाँ नबसौं, किनकि तारकासुरलाई महादेवले वरदान दिनुभएको छ । अतः त्यसलाई युद्धमा कसैले पनि जित्न सक्तैन । बरु यहाँबाट भागौँ

भनी स्वर्गबाट भागी मृगस्थलीमा आएर बसि-रहे । त्यसरी देवताहरू स्वर्गबाट भागेपछि तारका-सुरले अमरावतीमा अधिकार जमाई स्वर्ग-मर्त्य-पाताल तीनै लोकको राज्य भोगेर बस्तो भयो ।

त्यसपछि महादेव पृथ्वीभ्रमण गर्दै मृगस्थलीमा आउनुभयो र देवताहरूले देखी साष्टांग प्रणाम गरी बिन्ती चढाए-'हे ईश्वर ! अब हजुरसँग मृतक देह छैन । नेत्र खोलेर हेर्नुहवस् । पापिष्ठ

मृगस्थलीमा बसेका देवताहरूको प्रार्थना नसुनी महादेव हिड्नुभएको

तारकासुरले हाम्रो अमरावती खोसेर लियो । त्यसलाई हजुरले वरदान दिनुभएको हुनाले हामी त्योसँग लडाइँ गर्न असमर्थ भई भागेर यहाँ आई बसेका छौँ । अब हाम्रो रक्षा गरी पापिष्ठ तारकासुरको संहार गर्नुहवस् । देवताहरूको यस्तो प्रार्थना सुनी महादेवले नेत्र उघारी हेर्नुभयो र

सामुन्ने देवताहरूलाई देखी केही पनि उत्तर नदिई मनले उनैलाई सम्झी हा सती ! भन्दै त्यहाँबाट हिंड्नु भयो । महादेवले शोक गरेको देखी संसार-मा जति जीवात्मा छन्, ती कसैले पनि सहन सकेनन् । यस्तै प्रकारले सतीको शोकमा एक सय वर्षसम्म महादेव पृथ्वी-भ्रमण गरेर हिंडिरहनुभयो । त्यसपछि एकदिन चित्त दृढ गरी महादेवले हेर्दा आफूसित सतीदेवीको शरीर छैन भन्ने जानी अब के गरूँ ? कता जाऊँ ? कसरी शान्ति प्राप्त होला भनी भरिसक्य धैर्य धारण गरी उत्तरापन्थमा तपस्या गर्न जान्छु भनेर हिंडेको त चित्त दृढ हुन नसकी दक्षिणको बाटो लागी जाँदा-जाँदा कर्णाटक नगरको ब्रह्मपुर भन्ने स्थानमा पुग्नुभएछ । त्यहाँका ऋषिहरू गंगा-स्नान गर्न गएका रहेछन् । ऋषि-पत्नीहरूले महादेवलाई त्यतैबाट जान लागेका देखी आपुसमा कुरा गर्न लागे- 'हे ऋषि-पत्नी हो ! हेर, ती जान लागेका महादेव हुन् । सतीदेवी मर्नाले बौलाहा जस्तै भई त्यस प्रकारले हिंडिरहेका छन् । हाम्रा स्वामीहरू एकभक्त रहनाले र अनेक व्रत उपवास गर्नाले दुर्बल छन् । अतः हामीहरूलाई काम-भोगमा सन्तुष्ट पार्न सक्तैनन् । यसकारण हामीहरू यिनैका

पछि लागेर जाऔँ' । यति सल्लाह गरी सबै ऋषि-पत्नीहरू महादेवका पछि लागेर हिंडे । त्यसरी पत्नीहरू गएको गंगामा स्नान गर्न गएका ऋषिहरूले थाहा पाई खोज्दै गए । निकै पर पुगेपछि बाटोमै भेटे र- 'हे महादेव ! तिमीले हाम्रा स्त्रीहरू किन हरण गरेर ल्याएका ?' भने । तिनीहरूले त्यस्तो भनेको सुनी महादेवले'तिम्रा पत्नीहरू म किन हरण गरेर ल्याउँथें ?' भनी उत्तर दिनु भयो । अनि ऋषिहरूले- 'यी तिम्रा पछि लागेर आएका को हुन् त ?' भनी सोधे । अनि महादेवले पछाडितिर फर्केर हेर्दा ऋषि-पत्नीहरूलाई देखेर- 'यिनीहरूलाई मैले त ल्याएको होइन । कुन्नि किन पछि लागेर आएछन्' भन्नुभयो । अनि रिसाएका ती ऋषिहरूले- 'हे महादेव ! हाम्रा पत्नीहरू तिम्रो लिंग देखेर पछि-पछि आएका हुन् । अतः तिम्रो त्यो लिंग पतन होस्' भन्ने श्राप दिए । तिनीहरूको श्रापले तत्काल शिवको लिंग पतन भयो र त्यसैबाट यौटा ज्योतिर्लिङ्ग प्रकट भएर सम्पूर्ण ब्रह्माण्ड ढाक्न लाग्यो । त्यो देखेर देवता, यक्ष, गन्धर्व, किन्नर आदि श्री विष्णु भगवान्कहाँ पुगी बिन्ती गरे- 'हे ईश्वर ! महादेवको ज्योतिर्लिङ्ग उत्पन्न भएर

समस्त ब्रह्माण्ड ढाक्न लाग्यो । सोही कुरा बिन्ती गर्न आएका हौं । अब जे गर्नुपर्ने हो, तत्काल गर्नुपर्‍यो ।' देवताहरूको त्यस्तो प्रार्थना सुन्नासाथ विष्णु भगवान् तत्काल त्यहाँ पुगी त्यो ज्योतिर्लिङ्गलाई अंकमाल गर्नासाथ ज्योतिर्लिङ्ग साम्थ भयो । त्यो देखेर समस्त देवता, यक्ष, नाग, गन्धर्व र किन्नर आदिले विष्णु भगवान्‌को अनेक प्रकारले स्तुति गरी आफाफ्ना आश्रममा गए । अनि त्यही ज्योतिर्लिङ्गबाट प्रकट भई महादेवले ती ऋषिहरूलाई भन्नुभयो- 'हे ऋषि हो ! म निर्दोषलाई व्यर्थमा श्राप दियौ, अतः तिमीहरूको पनि वाक्य शुद्ध नहवस् र ब्राह्मणीहरू पनि एकपति मानेर बस्न नसकून् ।' यति भनी उत्तरापन्थमा गई काम, क्रोध, लोभ, मोह छाडी, सम्पूर्ण इन्द्रिय बाँधी, परब्रह्ममा आफ्ना तीनै नयन मिलाई बडो कष्टपूर्वक तपस्या गर्न लाग्नुभयो ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां इन्द्रादिदेवतामृगस्थलीगमनं नाम एकादशोऽध्यायः ।।११।।*

# अथ द्वादशोऽध्यायः

## स्वस्थानीव्रत-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि हिमालय पर्वतले आफ्नी पत्नी मेनका गर्भिणी भएको थाहा पाई अत्यन्त हर्षपूर्वक आफ्नो मर्यादा अनुसार उचित कर्म गरिदिए । दश महीना पूरा भएपछि मेनकाको गर्भबाट हिमालयकी कन्या जन्मिन् । ती कस्ती कन्या थिइन् भने-हजार सूर्यको तेज जस्तै तेज भएकी, रक्तवर्ण र कोमल अंग एवं परम सुन्दरी, पद्मपत्र जस्ता नेत्र भएकी, बत्तीस लक्षणले युक्त कन्या जन्मेकी देखेर हिमालयले वसिष्ठ प्रभृति ऋषि र गर्ग आदि ज्योतिषीहरूलाई डाक्न पठाएर विधिपूर्वक न्वारान गराए । अनि वसिष्ठ प्रभृति ऋषि ज्योतिषीहरूले बिदा हुने बखतमा भने- 'हे हिमालय ! यस बालिकाको नाम 'पार्वती' राख्यौं । हे गिरि-राज ! तिमी धन्य रहेछौ । यी बालिकाले श्री महादेव स्वामी पाएर चौधै भुवनकी स्वामिनी हुनेछन् । समस्त पापी र दुष्टहरूको संहार गर्ने-छन् । तिम्रो श्रद्धा-भक्तिले हामी सन्तुष्ट भयौं । अब आज्ञा पाए आफाफ्ना आश्रममा जाने थियौं ।

यति वसिष्ठ आदि ऋषि ज्योतिषीहरूले त्यस्तो भनेको सुनी हिमालय पर्वतले प्रसन्न भई नाना मणि-माणिक्य सुवर्ण द्रव्यादि दक्षिणा दिई प्रणाम गरेर बिदा दिए । अनि समस्त आगन्तुक र वसिष्ठ प्रभृति ऋषि ज्योतिषी आफाफ्ना आश्रममा गए। त्यसपछि पार्वती शुक्लपक्षका चन्द्रमा झैं दिन-दिनै बढेर ठूली भइन् । तिनी खेल्दा पनि शिव-पूजा गरेर नै खेल्दथिन् । यस्ता प्रकारले बाल अवस्थादेखि शिवको भक्तिमा चित्त लगाइरहेकी थिइन् ।

एकदिन नारद मुनिले विष्णु भगवान्कहाँ गएर भने 'हे वैकुण्ठनाथ ! हिमालयकी कन्या पार्वती सबै तरहले तिम्रो योग्य छिन् । कस्ती भने लक्ष्मीभन्दा पनि सुन्दरी, बत्तीसै लक्षणले युक्त भएकी ती कन्यासँग तिमी विवाह गर।' यति नारद मुनिले भनेको कुरा सुनी विष्णु भगवान् आज्ञा गर्नुहुन्छ-'हे मुने ! के हिमालयले ती कन्या मलाई देलान् र ?' नारद मुनिले उत्तर दिए-'त्यसको चिन्ता तिमीले लिनुपर्दैन । म अहिल्यै गएर पक्का निधो लिएर आउँछु' यति भनी नारद तुरुन्त हिमालयकहाँ पुगे । हिमालय पर्वतले भेटेर उचित सत्कार गरिसकेपछि नारदजी भन्दछन् -

'हे गिरिराज ! तिमीसित केही भन्न आएको हुँ । तिम्री कन्या पार्वती वैकुण्ठनाथ विष्णुलाई देऊ ।' यति नारद मुनिको कुरा सुनी प्रसन्न भएका हिमालय पर्वत भन्दछन् - 'हे मुने ! यो अत्यन्त उत्तम कुरा भन्यौ । तिम्रो आज्ञाले मेरी पुत्री वैकुण्ठनाथ विष्णुलाई दिएँ । अब तिमी विष्णुकहाँ गएर यो कुरा भन ।' यति हिमालय पर्वतले भनेपछि नारद मुनि वैकुण्ठ गएर हिमालयसित भएको सबै कुरा सुनाए । अनि हिमालय पर्वतले आफ्नी कन्या तिमीलाई दिन्छु भने-भन्ने यति नारद मुनिको कुरा सुनेर विष्णु प्रसन्न भएर- 'हे नारद ! तिमी धन्य रहेछौ । अब आफ्नू आश्रममा जाऊ' भनेर बिदा दिएपछि नारद मुनि आफ्नू आश्रममा गए । त्यसपछि हिमालय पर्वतले पार्वती कन्यादान दिन भनी सामग्री तयार पारी नारद मुनिलाई डाकेर विष्णुकहाँ पठाई राम्रो लग्न ठहराई आफ्ना गुरु बृहस्पति आदि सम्पूर्ण देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य र नाग सबैलाई निमन्त्रण पठाए । अनि विष्णु भगवान् पार्वती कन्यादान लिन हिमालयकहाँ पुगे । उता मेनकाले हीरा-मोती, मणि-मणिक्य नाना रत्नहरूले झकिझकाउ पारेर वस्त्रालंकार पहिराई पार्वतीलाई सिँगारिराखेकी थिइन् । त्यो

देखेर जया, विजया, अजिता, अपराजिता आदि सखीहरूले पार्वतीलाई भने-'हे सखी ! आज तिम्रो विवाह हुन्छ । विष्णुलाई कन्यादान दिन्छन्।' यति सखीहरूले भनेको सुनी पार्वतीको मनमा शंका उत्पन्न भयो-'मैले बाल अवस्थादेखि नै श्रीमहादेव स्वामी पाऊँ भनेर धाइरहेकी छु, अझ पनि महादेवलाई नदिएर अरू कसैलाई दिए भने म आत्महत्या गरेर मर्नेछु ।' तिनको कुरा सुनेर सखीहरूले भने-'हे पार्वती ! त्यसो हो भने तिमी यहाँ नबस । हामी कसैले पनि नदेख्ने स्थानमा लुकाएर आउँछौं, लौ हिंड ।' यति सखीहरूले भनेको सुनी- 'हे सखी हो, जसो गर्ने हो गर, म केही जान्दिनँ' भनिन् । त्यसपछि सखीहरूले नदीतटको वनमा लगेर पार्वतीलाई कसैले नदेख्ने एकान्त ठाउँमा लुकाएर आए । त्यसपछि हिमालय पर्वतले आफ्ना गुरु बृहस्पतिलाई यज्ञमा बसाली सारा विधि गरिसकेर कन्यादान दिन पार्वतीलाई लिन पठाए । तर घरमा देखेनन् र यता-उता सबै खोज्न लगाए । कहीं पनि पाउन सकेनन् र हिमालय पर्वतले अत्यन्त व्याकुल भई गुरु बृहस्पतिकहाँ गएर- 'पार्वती कहीं पनि छैनन्, अब के कसो गरूँ' भने । यति हिमालय पर्वतले

भनेको सुनी गुरु बृहस्पतिले 'यस लग्नमा भएन' भनी विष्णुलाई बिन्ती गरे । अनि आएका निम्तारु जति सबै फर्केर आफाफ्ना आश्रममा जाँदा भए । उता सखीहरूले पार्वतीलाई वनमा लुकाएर आएपछि पार्वतीले नदीतटमा गएर बालुवा ल्याई त्यसको पार्थिव शिवलिंग बनाई श्रीमहादेवको आराधना गर्न लागिन् । उसै बेला दुई दैत्य प्रघोष र दमघोष आएर पार्वतीको सौन्दर्यमा लोभिएर अनेक प्रकारका नराम्रा चेष्टा देखाउन लागे । तिनको चेष्टा देखेर पार्वतीलाई रीस उठ्यो र उनले हेर्नासाथ दुवै भस्म भए । अनि पार्वतीले बनाएको शिवलिंगबाट स्वयं महादेव प्रकट भई

पार्वतीलाई महादेवले दर्शन दिनुभएको

आफ्नू ज्योति:स्वरूपको दर्शन दिनुभयो र 'हे पार्वती ! तिमीले मेरो किन आराधना गरेकी ?'

भन्नुभयो । पार्वतीले बिन्ती गरिन् - 'हे जगदीश्वर ! मैले बालक कालदेखि नै श्रीमहादेव स्वामी पाऊँ भनेर हजुरलाई धाइरहेकी छु । मेरा पिता हिमालय पर्वतले विष्णुलाई कन्यादान दिन लाग्दा भागेर यहाँ लुक्न आएकी हुँ । मदेखि प्रसन्न भई रक्षा गर । हे प्रभो ! मेरो इच्छा पूर्ण गराऊ ।' पार्वतीको यस्तो प्रार्थना सुनेर महादेव आज्ञा गर्नुहुन्छ- 'हे पार्वती ! तिम्रा माता-पिताले कन्यादान नदिई मैले तिमीलाई 'मेरी' भन्न मिलेन ! अब विष्णु आएर तिमीलाई जस्तो उपदेश दिनन्, उसै माफिक गरे इच्छा पूर्ण हुनेछ ।' महादेवको यस्तो शिक्षा सुनेर पार्वतीले 'जो आज्ञा' भनी साष्टांग प्रणाम गरिन् । अनि महादेव अन्तर्धान हुनुभयो । त्यसपछि सखीहरू आए र पार्वती घर गइन् । छोरी आएकी देखेर रिसाएका हिमालयले भने- 'हे पुत्री ! तिमी कहाँ गएकी थियौ ?' पार्वतीले बिन्ती गरिन् - 'हे पिता ! म बालक कालदेखि नै श्री महादेव स्वामी पाऊँ भनी उनैलाई धाइरहेकी छु र उनकै ध्यान भक्ति पनि मेरो हृदयले सदैव गरिरहेछ । हजुरले श्री विष्णुलाई दिन लाग्दा लुक्न गएकी थिएँ ।' आफ्नी पुत्री पार्वतीले यति भनेको सुनी उनको न्वारानका दिन

वसिष्ठ प्रभृति ऋषि र ज्योतिषीहरूले पार्वतीको विषयमा भविष्यवाणी गरेको सम्झी चुप लागे । त्यसपछि पार्वतीले विष्णु कहिले आउलान् र श्री महादेव स्वामी पाउँली भनी अनेक तीर्थ, व्रत, दान, धर्म, जप, तप, नियम पालन गर्न लागिन् । फेरि निकै दिन बालुवाको शिवलिंग बनाई पार्थिव पूजा पनि गरिन् । तिनको अडिग श्रद्धा एवं भक्तिभाव देखेर विष्णु भगवान् गरुड़मा चढ़ी शंख, चक्र, गदा, पद्म धारण गरी पार्वतीको

पार्वतीलाई विष्णुले स्वस्थानीको व्रत-पूजा गर्ने उपदेश दिनुभएको

सामुन्ने आएर आज्ञा गर्नुभयो- 'हे पार्वती ! तिमीले अनेक तीर्थ, व्रत, दान, धर्म, पूजा-पाठ, यज्ञ आदि गरेको देख्दा म अत्यन्त प्रसन्न भएँ । तिम्रो मनमा जे इच्छा छ सो वरदान माँग, म दिन तयार छु ।' विष्णु भगवान्ले त्यस्तो आज्ञा

भएको सुनी पार्वती विनति गर्दछिन् - 'हे ईश्वर ! हे परब्रह्म परमात्मा ! मलाई केही वरदान पाउनको इच्छा छैन । केवल महादेव स्वामी प्राप्त हुने वरदान बक्सियोस् ।' पार्वतीको यस्तो प्रार्थना सुनी विष्णु भगवान् आज्ञा गर्नुहुन्छ - 'हे पार्वती ! तिमीले परिश्रमसाथ गरेका यी तीर्थ, व्रत, दान, धर्म, व्रत, उपवासभन्दा पनि यौटा अति उत्तम र गोप्य कुरा भन्दछु, तिमी एकचित्त भएर ध्यानपूर्वक सुन- 'श्री स्वस्थानी परमेश्वरीको व्रत गर । त्यस व्रतको प्रभावले जगदीश्वर श्री महादेव स्वामी पाउने छौ, यसमा शंका छैन ।' श्री विष्णुले यति आज्ञा भएको सुनी पार्वतीले फेरि बिन्ती गरिन्- 'हे ईश्वर ! त्यस व्रतको विधान के हो, र त्यसमा के - के गर्नुपर्दछ ? यो सबै विस्तारपूर्वक आज्ञा गर्नुहवस् !' पार्वतीको यस्तो प्रार्थना सुनी विष्णु भगवान् आज्ञा गर्नुहुन्छ-'हे पार्वती ! पौषशुक्ल पूर्णिमाको दिनदेखि व्रत आरम्भ गर्नुपर्दछ । एक दिन पहिले नै हात-खुट्टाका नङ काटी स्नान गरेर पवित्र भई एकभक्त रही, एकचित्त गरी, नित्य मध्याह्न कालमा श्री महादेवको पूजा गर्नू र एक महीनापछि अर्थात् माघशुक्ल पूर्णिमाको दिन अष्टोत्तर सय रोटी, अष्टोत्तर सय अक्षता, अष्टोत्तर

सय बेली-पुष्प, अष्टोत्तर सय कुड्का सुपारी, अष्टोत्तर सय पान र जात-जातका फल-फूल, नैवेद्य, आदि सबै वस्तु तयार पारी आर्सी (तामाको थाली) मा ॐकार लेखी गंगाजलले स्नान गराउनू र श्रीखण्ड, रक्तचन्दन लगाई, पीताम्बर वस्त्र पहिराई, धूप-दीप, नैवेद्य, कस्तूरी, भेटी, दक्षिणा चढाई षोडशोपचार वा पञ्चोपचारले पूजन गरिसकी स्तोत्र पाठ, जप, ध्यान गरिसकी अर्घ्य दिनू । अनि हे पार्वती ! स्वस्थानी परमेश्वरी भनेकी कस्ती छन् भने-

अष्टासु च दलेष्वेव मातृकाष्टस्थितास्तथा ।
खड्गं त्रिशूलं चोर्ध्वं च अर्धे च वरमुत्पलम् ।।
चतुर्भुजां त्रिनेत्रां च सर्वालंकार-भूषिताम् ।
सुवर्णवद्-विकासाभां स्वस्थानीं जगदीश्वरीम् ।।

अर्थ-अष्टदल पद्ममा अष्टमातृका, त्यसमाथि खड्ग, त्रिशूल र वर नीलोत्पल, हातमा धारण गरेकी, चार बाहु र तीन नेत्र भएकी, अनेक प्रकारका अलंकार पहिरेकी, अनेक आयुध लिएकी, पीतवर्णभन्दा पनि अत्यन्त शोभायमान भएकी यस्ती श्री स्वस्थानी परमेश्वरीको ध्यान गरेर हे जगदीश्वरी ! भनी मनमनै उनीसित इच्छा

भएको वरदान माग्नू । अनि प्रसाद झिकेर अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ बेलीपुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुनसमेत आफ्नू पतिलाई दिनू, पति नभए छोरोलाई दिनू, छोरो नभए मीतछोरोलाई दिनू र मीतछोरो पनि नभए जुन कामना वा इच्छाले व्रत गरेको छ, त्यो मेरो फलानू कामना पूर्ण होओस् भनेर गंगामा बगाइदिनू, सय रोटी आफूले फलाहार गर्नू । रातमा जाग्राम बसेर स्वस्थानीकै महिमा गान, भजन, कीर्तन गर्नू, सुन्नू सुनाउनू । यति गरेपछि अवश्य इच्छा पूर्ण हुनेछ, यसमा कुनै शंका छैन । हे पार्वती ! स्वस्थानी परमेश्वरीको प्रसाद लिने वेलामा श्री महादेव तिम्रो सामु आफै प्रकट हुनुहुनेछ । तिम्रो श्रद्धा भक्ति देखेर म प्रसन्न भएँ ।' यति भनिसकेर 'तिमीले महादेव स्वामी पाए' भनी विष्णु भगवान्ले वरदान दिनुभयो । हे अगस्त्य मुनि! नारायण विष्णुले यति आज्ञा भएपछि पार्वतीले मनमा सन्तोष र आनन्द मान्दै श्रद्धा-सहित विष्णुको पनि पूजा र प्रणाम गरिन् । तिनले पूजा गरिसकेपछि विष्णु भगवान् बिदा भएर गरुड़मा चढ़ी त्यहाँबाट अन्तर्धान भई वैकुण्ठ धाममा जाँदा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां श्रीविष्णुस्वस्थानीव्रतोपदेशवर्णनं नाम द्वादशोऽध्यायः ।।१२।।*

# अथ त्रयोदशोऽध्यायः

## पार्वतीविवाह-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! त्यसपछि पौषशुक्ल पूर्णिमाको दिन आयो र पार्वतीले श्री विष्णुको उपदेश अनुसार सखी समेत भई हात-खुट्टाका नङ काटी स्नान गरी पवित्र भई एकभक्त रही एकचित्त गरी नित्य मध्याह्न कालमा श्री महादेवको पूजा गर्न लागिन् । महिना दिन पूरा भयो र माघशुक्ल पूर्णिमाको दिन सम्पूर्ण सामग्री तयार गरी श्री स्वस्थानी परमेश्वरीको विधिपूर्वक पूजा ध्यान जप र स्तोत्र पाठ गरिन् । देवराज इन्द्रले त्यो समाचार पाएर देवताहरूसित भने- 'हे देवता हो ! अब पापिष्ठ तारकासुरको नाश हुने समय आयो, किनकि हिमालय पर्वतकी पुत्री पार्वतीले महादेव स्वामी पाएपछि उनका गर्भबाट पुत्र जन्मनेछन् । तिनै कुमारले हाम्रो शत्रु तारकासुर दैत्यलाई मारिदिनेछन् । अनि हामी अमरावती प्राप्त गरी राज्य-सुख भोगौँला । फेरि महादेव सतीदेवी मर्नाले शोक गर्दै सम्पूर्ण पृथ्वी भ्रमण गरिसकेर उत्तरापन्थमा गई काम, क्रोध, लोभ, मोह त्यागी, सम्पूर्ण इन्द्रिय रोकी तीनै नेत्र

बन्द गरी केवल परब्रह्ममा चित्त लगाएर ठूलो कष्टले तपस्या गरिरहेका छन् । अतः महादेवलाई तपस्याबाट च्युत गराई फेरि काम, क्रोध, लोभ, मोहमा ल्याउने उपाय के छ ?' यति सुरराजले भनेको सुनी देवताहरूले भने- 'हे देवेन्द्र ! यो काम गर्न कामदेव-बाहेक अरू कसैले सक्तैन । अतः कामदेव गई महादेवको हृदयमा कामबाण प्रहार गरेर आऊन् ।' यति देवताहरूको कथन सुनी देवेन्द्रले स्वीकार गरी कामदेवलाई डाक्न तुरुन्त वायुलाई पठाए । वायु पनि तत्काल गएर कामदेवलाई इन्द्रको आज्ञा सुनाई लिएर आए । अनि कामदेवले इन्द्रलाई 'मलाई के कामले डाक्नुभयो ?' भनी सोधेपछि इन्द्रले भने- 'हे कामदेव ! सतीदेवी मर्नाले महादेव उत्तरापन्थमा गई काम, क्रोध, लोभ, मोह त्यागी सम्पूर्ण इन्द्रिय रोकेर परब्रह्ममा चित्त लगाई तपस्या गरिरहेका छन् । महादेव-बिना यो संसारको रक्षा को गर्ला ? अतः तिमी त्यहाँ गई महादेवलाई कामबाण हानी फेरि काम, क्रोध, लोभ, मोहमा ल्याऊ ।' यति सुरेन्द्रको आज्ञा सुनी 'हुन्छ' भनी आफ्नी पत्नी रति समेत भई उत्तरापन्थमा गए । हे अगस्त्य मुनि ! कामदेव त्यहाँ पुगेर पहिले शिवलाई साष्टांग

दण्डवत् गरी सुरराजको आज्ञाले कामबाण कानसम्म खैंची मर्मस्थान ताकेर प्रहार गरे । अनि महादेवले थाहा पाएर क्रोधित भई सहसा आँखा उघारेर हेर्नासाथ तीनै नेत्रबाट अग्निका

रति र कामदेव शिवलाई कामबाण प्रहार गर्न गएका

ज्वाला निस्की कामदेवलाई भस्म पारिदियो । तब कामदेवकी स्त्री रतिले आफ्ना स्वामी भस्म भएको देखी अनेक प्रकारले शोक गर्दै शिवजीका पाउमा परेर बिन्ती गरिन् - 'हे प्रभो ! यो अपराध मेरा स्वामीको होइन । देवराजको आज्ञाले हजूरको हृदयमा कामबाण प्रहार गरेको हो । हे जगदीश्वर ! मदेखि प्रसन्न भई स्वामी दान दिनुहवस् । हे शम्भो ! हजूर दुष्ट जनको संहार र साधु जनको रक्षा गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । हजुरको स्तुति गर्न शेषनाग र सरस्वतीले

पनि सक्तैनन् भने म जस्तीले कसरी सक्नेछु ! हे भक्तवत्सल ! मलाई विधवा नतुल्याई मेरा स्वामीको जीवन-दान दिएर मलाई सन्तुष्ट पार्नुहवस् । रतिले

शिवजीले हेर्नासाथ कामदेव भस्म भएको र रतिको विलाप

त्यसरी स्तुति गरेको सुनी महादेवलाई दया लाग्यो र आज्ञा गर्नुभयो- 'हे रति ! यस जन्ममा अब तिमी स्वामी पाउन सक्तिनौ । द्वापरयुगको अन्त्यमा विष्णु भगवान्ले अवतार लिनेछन् । तिम्रो स्वामी तिनै कृष्णका पुत्र प्रद्युम्न भएर जन्म लिनेछन् । अनि तिमी दुवैको भेट होला । अहिले दुःख नमानी घर जाऊ।' महादेवले यति आज्ञा भएको सुनी रतिले 'जो आज्ञा' भनी शिवलाई दण्डवत् प्रणाम गरी घर फिरिन् ।

त्यसपछि महादेवले सतीदेवीलाई सम्झी 'कहाँ जन्म लिन गइन्' भनी ध्यानदृष्टिले विचार गर्दा

हिमालय पर्वतकी पुत्री पार्वती भएर जन्मी श्री महादेव स्वामी पाऊँ भनी नाना तीर्थ, व्रत, तप-जप आदि गरेको र विष्णुको उपदेशले श्री स्वस्थानी परमेश्वरीको व्रत गर्न लागेको थाहा पाएर अब तिनको चरित्र हेर्दछु भनी देवेन्द्रको रूप धारण गरी हातमा वज्र लिई ऐरावत हात्तीमा चढेर पार्वतीले व्रत गरेको स्थानमा पुग्नुभयो । महादेव कस्तो समयमा त्यहाँ पुग्नुभयो भने सम्पूर्ण व्रत गरिसकी हातमा अर्घ्य लिएर- 'हे ईश्वरी ! निरञ्जन निराकार रूप हजुरलाई कोटि-कोटि नमस्कार । सम्पूर्ण व्रत पनि तिमी, सृष्टि-स्थिति- संहार गर्ने पनि तिमी, पञ्चमहाभूत र सत्त्व, रज, तम त्रिगुण पनि तिमी । यो समस्त ब्रह्माण्डमा आत्मस्वरूप भएकी र आदिशक्ति पनि तिमी, कालस्वरूप पनि तिमी; आदि, मध्य, अन्त्य पनि तिमी । यस्ती अव्यक्त स्वरूप भएकी तिम्रो गुणगान गर्न शेष र सरस्वतीले पनि नसकेको म कसरी सक्नेछु ! मेरो पूजाले प्रसन्न हुनुहोस्' भनी अनेक प्रार्थना गरेर प्रसाद झिक्न लागेको वेलामा इन्द्रस्वरूप महादेव टुप्लुक्क पुग्नुभयो । तब पार्वतीले देखेर यथायोग्य सत्कार गरी- 'हे देवराज ! के कामले आउनुभयो, आज्ञा होस्' भनिन् र इन्द्रस्वरूप महादेव आज्ञा

गर्नुहुन्छ - 'हे पार्वती ! तिम्रो श्रद्धा-भक्ति देखेर म प्रसन्न भएँ । महादेव स्वामी पाउन भनी तिमीले यो व्रत गर्‍यौ, तर ती महादेव कस्ता छन् भने- बौलाहा जस्ता, महानिर्घिनी, नागका गहना लगाएका, बाघको छाला कम्मरमा बेह्रेका, भूत-प्रेत, प्रमथगण साथमा लिई बूढो गोरुमा चढेका, दाहिने हातमा डमरु र बायाँ हातमा त्रिशूल लिएका; विष, भाङ, धतूरो खाई निर्लज्ज झैं डुल्ने र अघोर मूर्ति भई श्मशानमा वास गर्ने । तिमी भने यस्ती परम सुन्दरी छ्यौ, यस्ती सुन्दरीलाई त्यस्ता महादेव स्वामी कदापि योग्य छैनन् । म सम्पूर्ण देवताको राजा हुँ,बरु मलाई स्वामी तुल्याई स्वर्गकी रानी भएर अलभ्य सुख-भोग गर ।' यति इन्द्रस्वरूप महादेवले आज्ञा भएको सुनी पार्वती रीसले चूर भई भन्न लागिन् -'हे पापिष्ठ इन्द्र ! मैले यस्तो श्री स्वस्थानी परमेश्वरीको व्रत गरेको स्थानमा आएर महादेवको निन्दा गर्‍यौ, म यो सहन सक्तिनँ । अब म तिमीलाई श्राप दिन्छु' भनी श्राप दिन तयार भइन्, र इन्द्रस्वरूप महादेव डराई- 'हे पार्वती ! म इन्द्र होइन, तिम्रो चरित्र हेर्न इन्द्रको रूप धारण गरेर आएको हुँ, धन्य तिम्रो भक्ति ! तिम्रो तपस्याले म सन्तुष्ट भएँ' भनी

आफ्नू ज्योतिःस्वरूपको दर्शन दिनुभयो र पार्वतीले महादेवको दर्शन पाएर मनमा आनन्द मानी साष्टांग प्रणाम गरिन् । अनि- 'हे जगदीश्वर ! मैले अनेक व्रत, दान, यज्ञ, जप, तप गरेँ तैपनि हजुरको दर्शन पाइनँ । आज वैकुण्ठनाथ विष्णुको उपदेशले गरेका श्री स्वस्थानी परमेश्वरीको व्रतको प्रभावले हजुरको दर्शन पाएँ । अब स्वस्थानी परमेश्वरीको प्रसाद दिन कन्यादान भएको छैन, कसो गरूँ ?' भनी बिन्ती गरिन् । अनि महादेव प्रसन्न भई पार्वती कन्यादान लिन हिमालय पर्वतका घर जानुभयो । हिमालय पर्वतले महादेव आउनुभएको देखी आफ्नी पुत्रीले महादेव स्वामी पाउन लागी भनी बडो हर्ष मानी आफ्नी स्त्री मेनकासित भने- 'हे स्त्री ! हामी धन्य रहेछौँ ! पार्वती कन्यादान लिन स्वयं महादेव आउनुभयो । अब कन्यादानको सामग्री तयार पार' भनी अह्राए । अनि वसिष्ठ आदि ऋषि ज्योतिषीहरूलाई डाकी लग्न विचार गरेर अक्षय तृतीयाको दिन लग्न ठहराई सम्पूर्ण देवता, ऋषि, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग, अप्सरा उपस्थित भई यज्ञमा बसे । ब्रह्माजी यज्ञ गराउन लागे । अन्य ब्राह्मणहरू वेद- पाठ गर्नलागे। अप्सराहरू नाच-गानमा लागे ।

देवकन्या, यक्षकन्या, नागकन्या, दैत्यकन्या आदि नाना वस्त्र अलंकार पहिरी ऊभन्दा ऊराम्री, ऊ भन्दा ऊ राम्री बनी पार्वती कन्यादान दिएको हेर्न लागेका थिए । हिमालयकी पत्नी मेनकाले पनि पार्वतीलाई सुगन्ध लेपन गराई;हीरा, मोती, मणि-माणिक्य आदि रत्न जडेका गहना र वस्त्रहरू पहिराई सिँगारी राखेकी थिइन् । त्यस बखत पार्वतीभन्दा राम्री तीनै लोकमा कोही पनि देखिएनन्। मंगल गीत गरी हातमा जौ-तिल-कुश लिई हिमालयले पार्वतीको हात समाती,मेनकाले सुवर्णको कमण्डलुले जलको धारा दिई कन्यादानको संकल्प पढ्दा हिमालयले सोधे- 'हे ईश्वर ! यस शुभ लग्नमा म आफ्नी पुत्री कन्यादान दिन तयार छु, हजुरको गोत्र के हो ? बिना गोत्रले गरेको काम अधूरो हुन्छ र शुभ कर्मको फल पनि प्राप्त हुँदैन भनी शास्त्रहरूको कथन छ ।'

हिमालयको त्यस्तो वचन सुनी महादेवले केही पनि उत्तर दिन नसकी लाज मानी अधोमुख गरिरहनुभयो । हिमालयले पनि पार्वतीको हात समाती महादेवको मुखमा हेरिरहे । विष्णु प्रभृति समस्त देवता, यक्ष, किन्नर, गन्धर्व, दैत्य, नाग आदि कसैले पनि 'यो त्यसै हो' भन्न सकेनन् ।

त्यसै मौकामा नारद मुनि सतीदेवीका हाड़को यन्त्र बनाई शिव-गीत गाउँदै हिमालयकहाँ आइपुगे र सबै कुरा सुनेपछि भने- 'हे गिरिराज ! जो सम्पूर्ण ब्रह्माण्डको सृष्टि-स्थिति-संहार गर्दछन्, जो अहिले यौटै छन् तापनि आफ्नू मायाले ब्रह्मा, विष्णु, महेश तीन रूपका बन्दछन् । आदिपुरुष यिनै हुन् । यिनका माता-पिता पनि छैनन्, जात पनि छैन र गोत्र पनि छैन । सर्वव्यापी पनि यिनै, तेत्तीस कोटि देवताका माता-पिता पनि यिनै । फेरि चौधै भुवनमा भएका समस्त जीवात्माका हृदयमा बसेर पाप-पुण्यको साक्षी भइरहेका पनि यिनै। निरञ्जन निराकार पनि यिनै। यस्ता ईश्वरको महिमा वर्णन गर्न हजार जिभ्रा भएका शेषनाग र सरस्वतीले पनि नसकेको म कसरी सकुँला ? अतः शंका नमानी जगदीश्वर महादेवलाई पार्वती कन्यादान देऊ।' नारद मुनिले यति भनेको सुनी सम्पूर्ण देवता, यक्ष, गन्धर्व, किन्नर, नाग आदिले- 'नारद मुनिले सत्य भने' भन्दै समर्थन गरे । अनि हिमालयले महादेवलाई पार्वती कन्यादान दिए । पार्वतीले महादेवको गलामा फूलको माला पहिराइन् र तीनपल्ट प्रदक्षिणा गरी पाउमा ढोगिदिइन् । हिमालयले पनि आएका जति सबै

देवता, यक्ष, गन्धर्व, किन्नर, दैत्य, नाग आदिलाई भोजन गराई यथायोग्य दक्षिणा दिए । त्यसपछि सबैले हिमालयसित भने- 'हे हिमालय ! तिमी धन्य रहेछौ। तिमी झैं भाग्यमानी सातद्वीप, नवखण्डमा पनि हुन दुर्लभ छ । तिमीले संसारमा जन्म लिएको सफल भयो किनभने जुन जगदीश्वर महादेवलाई कठोर तपस्याले पनि दर्शन गर्न पाउन्नन्, उनैलाई ज्वाइँ रूपमा पायौ । हामी कृतार्थ भयौं। अब बिदा पाए आफाफ्ना आश्रममा जाने थियौं ।' निमन्त्रणमा आएका सबैले यति भनेपछि हिमालयले आदरपूर्वक सबैलाई बिदा दिए र सबै आफाफ्ना आश्रममा जाँदा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां पार्वतीविवाहवर्णनं नाम त्रयोदशोऽध्यायः ।।१३।।*

काशीका विश्वनाथ दर्शन

# अथ चतुर्दशोऽध्यायः

## शिवश्वसुरगृहगमन-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ-हे अगस्त्य मुनि ! त्यसपछि पार्वतीले श्री स्वस्थानी परमेश्वरीको प्रसाद आठ रोटी, आठ अक्षता, आठ बेलीपुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुन समेत- 'हे स्वामी ! अब मेरो तपस्या पूर्ण भयो । बालक

पार्वतीले महादेवलाई स्वस्थानीको प्रसाद दिएकी

कालदेखि हजुरलाई पति पाऊँ भनी धाइरहेकी थिएँ, बल्ल इच्छा पूर्ण भयो' भनी महादेवका हातमा प्रसाद दिई साष्टांग प्रणाम गरिन् र 'हे आदि-पुरुष ! श्री स्वस्थानी परमेश्वरीको व्रतको प्रभावले मैले हजुर जस्ता स्वामी पाएँ । म अझ अरू केही बिन्ती गर्दछु- यो संसारमा कोही दरिद्र

छन्, कोही दुःखी छन्, कोही पापी छन्, कसैका स्त्री छैनन्, कसैका पुरुष छैनन्'। अतः यो व्रत प्रकाश गरिदिन पाए त्यस्ता सबैको कल्याण हुनेछ।' यति पार्वतीले भनेको सुनी महादेव आज्ञा गर्नुहुन्छ-'हे प्रिये ! तिमी धन्य रहिछौ। संसारका दुःखी दरिद्रीप्रति तिम्रो मनमा यस्तो दया रहेछ। अब यसको उपाय सुन-पहिले अश्वत्थामा ऋषिलाई डाक्न पठाई उनलाई रसातल पातालमा पठाऊ। त्यहाँ उनले यो व्रत प्रकाश गरिदिनेछन्।' यति महादेवले आज्ञा गरेपछि पार्वतीले अश्वत्थामा ऋषिलाई डाक्न पठाइन् र उनी आएपछि शिव-पार्वतीलाई प्रणाम गरेर- हे भवानीशंकर ! मलाई के कामले डाक्नुभयो ? भनी सोधे। अनि पार्वती आज्ञा गर्दछिन् - हे अश्वत्थामा ! तिमी रसातल पातालमा जाऊ र त्यहाँ जो दुःखी छन्, जो दरिद्र छन्, जो पापी छन्, जसका स्त्री छैनन् र जसका सन्तान छैनन्, तिनलाई यस्तो विधिले व्रत गराऊ भनी आफूलाई विष्णुले उपदेश गरे-झैं सारा व्रत-विधि बताइन् र पाताल जाने बिदा दिइन्। पार्वतीको आज्ञा सुनी अश्वत्थामा ऋषिले शिव-पार्वतीलाई प्रणाम गरी रसातल पातालमा गए।

हे अगस्त्य मुनि ! त्यसपछि एकदिन महादेवले यी पार्वती कत्तिकी बाठी रहिछन्, जाँच गर्नुपर्‍यो भनी आफू कसैले नदेख्ने स्थानमा लुक्न जानुभयो। महादेवलाई नदेखी पार्वती यता-उति खोज्दै गइन्, तर कहीं पाउन सकिनन् । अनि चित्त आकुल गरी कता जानुभयो होला भन्दै अनेक स्थानमा खोज्दा लुकिरहेका महादेवलाई भेट्टाएर भनिन् -'हे स्वामी ! हजुर किन मलाई छली लुक्न जानुभयो ? म राम्री भइनँ कि हजुरको मनपरिनँ कि, मलाई किन छाडेर अन्त जानुभयो ?' पार्वतीले त्यसरी भनेको सुनी महादेव केही पनि नबोली मनमनै भन्न लाग्नुभयो-यी पार्वतीले मलाई यसै छाड्ने भइनन् । अब रूप फेरेर अर्कै रूप धारण गरी वन-विहार गर्न जान्छु भन्ने निश्चय गरी अन्तर्धान भएर श्लेष्मान्तक वनमा किरातीको रूप धारण गरी शिकार खेल्दै हिंड्न लागे । पार्वतीले फेरि महादेवलाई देखिनन् र मनमनै दुःख मानी-यसरी महादेवले मलाई किन छल्नुभयो भन्ने शंका गरी ध्यान-दृष्टिले विचार गर्दा महादेव किरातीको रूप धारण गरेर श्लेष्मान्तक वनमा शिकार खेल्दै हिंडेको थाहा पाइन् र महादेवलाई झुक्याउनको लागि अत्यन्त राम्री किरातिनीको रूप धारण

गरी अनेक हाउ-भाउ कटाक्षले युक्त भएर श्लेष्मान्तक वनमा पुगी यौटा ठूलो वृक्षको छायामा बसिरहिन् । केही बेरपछि महादेव पनि हुल्दै त्यहीं आउनुभयो र किरातिनी रूप पार्वतीलाई त्यहाँ बसिरहेकी देखेर तिनको रूपमा मोहित भई सोध्नुभयो-'हे सुन्दरी ! तिमी को हौ ? देवकन्या हौ कि यक्षकन्या हौ ? नागकन्या हौ कि स्वर्गकी अप्सरा हौ ? मैले देख्दा त तिमी जस्ती सुन्दरी यस संसारमा हुन दुर्लभ छ । एक्लै यस्तो वनमा आएर किन बसिरहेकी ? तिमीलाई डर पनि लाग्दैन कि ? यो भयंकर वनमा जंगली जन्तु बाघ, हात्ती आदिको पनि कत्ति भय नमानी निर्धक्कसित किन बसेकी छौ ?' यति किरातीरूप महादेवले आज्ञा भएको सुनी पार्वतीले महादेव यिनै हुन् भन्ने चिह्नेर मनमनै दण्डवत् प्रणाम गरिन् । त्यस वेला महादेव कस्तो रूपमा आउनुभएको थियो भने-बायाँ हातमा धनुष र दाहिने हातमा त्रिशूल लिएका, काँधमा शर राख्ने ठोक्रो भिरेका, नागका गहना लगाएका, देख्दैमा डरलाग्दो मूर्ति भएका त्यस्ता किरातीरूप महादेवसित पार्वती भन्दछिन् - 'हे किरात ! म यहाँ बसेको धेरै दिन भयो, किरातिनी हुनाले

वन-जन्तुको डर पनि लाग्दैन। म यहाँ तपस्या गरेर बसेकी छु।' यस्तै प्रकारले दुवै दम्पतीको परस्पर कुरा गर्दागर्दै साँझ पऱ्यो र किरातीरूप महादेवले भन्नुभयो- 'हे सुन्दरी ! तिमी पनि एक्लै रहिछौ, म पनि एक्लै छु । आज हामी दुवै यहीं वास बसौँ ।' महादेवको यस्तो वचन सुनी पार्वती भन्दछिन् - 'हे किरात ! तिमी लोग्नेमानिस, म स्वास्नीमानिस, यस्तो जंगलका बीचमा एक्लै अरूकोही नभएको स्थानमा कसरी एकै ठाउँमा वास बसौँ ? फेरि पुरुष जातिको मनमा धर्म हुँदैन । राम्री स्त्री देखेपछि माता-पिता, घर-द्वार सबै बिर्सन्छन्, तसर्थ एकै ठाउँमा वास नबसौँ, यो कुरा नगर ।' यति किरातिनीरूप पार्वतीले भनेको सुनी किरातीरूप महादेवले- 'हे सुन्दरी ! यस कुरामा तिमीले शंका नगर' भन्नुभयो र दुवै स्त्री-पुरुष त्यही वृक्षमनि वास बसे। यही क्रमले बस्ता-बस्ता निकै दिन बित्यो र एकदिन पार्वतीले विचार गरिन् - यी भोलानाथ सधैँ यसरी नै बसेर पनि निर्वाह गर्न सक्तछन् । अब केही युक्ति गर्नुपऱ्यो भन्ने निश्चय गरी महादेवलाई छलेर आकाशवाणी भए-झैं गरेर भन्न लागिन् - 'हे जगदीश्वर ! हजुरले याद नराख्ता हामी ब्रह्मा, विष्णु, इन्द्रादि

सबैले साह्रै कष्ट पायौं । यसै गरी बस्नुभयो भने हाम्रो कल्याण कसरी होला ? कैलास शून्य भएको निकै दिन भइसक्यो । हे वृषभध्वज ! कैलासको चर्चा गरी हाम्रो उद्धार गर्नुहवस् ।' यस्तो आकाशवाणी भएको सुनी-'यो कसका उपर भनेको होला, फेरि म यहाँ आएको त कसैलाई पनि थाहा छैन' भनेर यता-उता हेर्दा केही पत्ता पाउन नसकी 'देवताहरूले भने होलान्' भनी चुप लागेर किरातिनी-रूप पार्वतीलाई नदेखी खोज्न लाग्नुभयो । अनि पार्वती पनि केही थाहा नपाए-झैं गरी फल-फूल टिपेर खान लागेकी थिइन् । किरातरूप महादेव त्यहीं पुगेर- 'हे सुन्दरी ! तिमी कता गएकी थियौ ? मैले तिमीलाई खोज्दा कहीं पाउन सकिनँ' भन्नुभयो । अनि पार्वती भन्दछिन् - 'हे किरात ! म कहीं पनि गएकी छैन । भोक लाग्यो र कन्द-मूल खोज्न हिंडेकी हुँ । यसरी कुरा गर्दागर्दै पूर्णचन्द्रभन्दा पनि राम्री पार्वतीलाई देखेर चित्त चञ्चल भई कामले पीड़ा गर्दा महादेवले किरातिनी- रूप पार्वतीलाई समात्न जाइलागे । त्यो देख्नासाथ किरातिनी-रूप पार्वती भन्न लागिन् -'हे किरात! तिमी कस्ता रहेछौ ? के तिम्रो धर्म यही हो ?

मैले त श्रीमहादेव- बाहेक अरू कसैलाई स्वामी स्वीकार गर्नेछैन भन्ने प्रतिज्ञा गरेर यस वनमा आई उनैको तपस्या गरेर बसेकी छु । तिमी त्यसो गर्छौ भने म श्राप दिई आत्महत्या गर्नेछु।' यति पार्वतीले भनेको सुनी किरातरूप महादेवले भन्नुभयो-'हे सुन्दरी ! तिम्रो त्यस्तो प्रतिज्ञा छ भने म उही महादेव हुँ, वन-विहार गर्न मन लागेर यहाँ आएको हुँ, नपत्याए हेर' भनी आफ्नू ज्योतिःस्वरूपको दर्शन दिनुभयो । अनि पार्वतीले मनमा आनन्द मान्दै दण्डवत् प्रणाम गरेर बिन्ती गरिन् -'हे ईश्वर ! अब मेरा माता - पिताकहाँ कन्यादान लिन हिंड्नुहवस् ।' यति सुनेर 'हुन्छ' भनी किरातिनीरूप पार्वतीका पछि लागेर गए । केही बेरमा हिमालय पर्वतका घर पुगे । अनि महादेवलाई 'यिनी त पार्वती पो रहिछन्' भन्ने ज्ञात भयो र-मलाई छली आफ्ना माता-पिताकहाँ ल्याइन्, अब कसो गरूँ ! भनी लाज मानी त्यहाँबाट अन्तर्धान भई किरातेश्वर शिवलिंग भएर श्लेष्मान्तक वनको उत्तरतिर गई बसिरहनुभयो । फेरि महादेवलाई नदेखेर चिन्ताग्रस्त भएकी पार्वतीले ध्यानदृष्टिले हेर्दा किरातेश्वर शिवलिंग भएको थाहा पाई पार्वती पनि नित्य वाग्मतीमा स्नान गरी

किरातेश्वर शिवको ध्यान र षोडशोपचारले पूजा गर्दै तपस्या गर्न लागिन् । पार्वतीले स्नान गरेकी हुनाले त्यस स्थानको नाम गौरीघाट भयो । जो मनुष्य गौरीघाटमा स्नान गरेर किरातेश्वरको दर्शन गर्ला त्यसका सबै पाप नाश भएर सुख शान्ति भई यस लोकमा अनेक भोग भोगी परलोकमा कैलासवास होला ।

हे मुने ! त्यही क्रमले पार्वतीले कठोर तपस्या गरेको देखी शिवजी प्रसन्न भएर आफ्नू ज्योतिःस्वरूपको दर्शन दिए । अनि पार्वतीले अत्यन्त हर्षसाथ शिवका पाउमा दण्डवत् गरी अञ्जली जोरेर बिन्ती गरिन् - 'हे स्वामी ! हजुरले मलाई किन यसरी बारम्बार दुःख दिनुभएको ? म हजुरकी मनपरिनँ कि' भनी अनेक विस्मात गरेको सुनी प्रत्यक्ष भएर पार्वतीलाई अंकमाल गरी काखमा राखेर त्यहाँबाट अन्तर्धान भई हिमालयका घर जानुभयो । त्यसरी छोरी ज्वाइँ घरमा आएको देखेर हिमालयले अत्यन्त आनन्द मान्दै सिंहासनमा राखेर चौरासी व्यंजन तयार पारी भोजन गराए । त्यहाँ दुइ-चार दिन बसेपछि एकदिन महादेवले पार्वतीसित भन्नुभयो- 'हे प्रिये ! कैलास शून्य भएको धेरै दिन भइसक्यो,

अब यहाँ बसेर के गर्नु छ ? कैलास जाऔँ हिंड, तिम्रा माता-पितासित बिदा माँग्न जाऔँ' यति भनी दुवै दम्पती गएर हिमालयसित भन्नुभयो-'हे पिता ! सतीदेवी मरेदेखि आजसम्म कैलास शून्य छ । अब बिदा पाए कैलास जाने थियौं ।' महादेवले आफूलाई 'हे पिता' भनेर सम्बोधन गरेको सुनेर हिमालय अत्यन्त प्रसन्न भई बिन्ती गर्दछन् - 'हे त्रैलोक्यनाथ ! समस्त अखण्ड ब्रह्माण्डका सकल देवताहरूका पितामह हजुरले अज्ञानीलाई जस्तै मलाई 'हे पिता !' भन्नुभयो । अब मेरो समस्त अज्ञान नाश गरी स्वच्छ ज्ञान प्रदान गर्नुहवस् । सदैव हजुरको भक्तिमा मेरो चित्त लागिरहोस् । हे शशिशेखर ! पहिले पूजा गर्दछु' भनी छोरी-ज्वाइँ दुवैलाई नाना वस्त्रालंकार पहिराई सिंहासनमा बसाली षोडशोपचारले पूजन गरी भोजन गराई अञ्जलि जोरेर स्तुति गर्न लागे-हे भवानी-शंकर ! जस्तै समुद्रका घर लक्ष्मी-नारायण बस्ता समुद्रलाई आनन्द भएथ्यो, त्यस्तै तपाईं दुवै जना मेरो घरमा बसिदिनाले मलाई आनन्द भइरहेको छ । हे ईश्वर ! हजुर कस्ता भने आफ्नू मायाले यो समस्त ब्रह्माण्डमा व्याप्त भएर रहने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार । फेरि समुद्र

मथनमा निस्केको कालकूट विषले संसार दग्ध हुन लाग्यो र हजुरले त्यो विष कण्ठमा राखी रक्षा गर्नुभयो र 'नीलकंठ' नाम रह्यो । यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । हे विश्वम्-भर ! आफूले सृष्टि गरी आफै संहार गर्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । हे पर-ब्रह्म ! त्रिपुरासुर दैत्यलाई मार्दा हजुरको रथका अवयवहरू कस्ता थिए भने पृथ्वी नै रथ, चार वेद रथका चार घोडा, चन्द्र-सूर्य रथका पांग्रा, ब्रह्मा सारथि, सुमेरु पर्वत धनु, शेषनाग ताँदो र विष्णु भगवान् बाण गरेर मार्ने यस्ता हजुरलाई कोटि-कोटि नमस्कार छ । हे युगनायक ! ब्रह्मा पनि तपाईं, स्थावर-जंगम पनि तपाईं, यमका यम पनि तपाईं, नारायण पनि तपाईं, सत्त्व रज तम त्रिगुण पनि तपाईं, जीवन र मृत्यु पनि तपाईं, देवताका देवता पनि तपाईं, अनाथका नाथ पनि तपाईं, विश्वरूप पनि तपाईं, अष्टवसु र द्वादशाऽऽदित्य पनि तपाईं, दिक्पाल पनि तपाईं, सम्पूर्ण ब्रह्माण्डका प्राणीको हृदयमा बसी पाप-पुण्यका साक्षी भइरहेका पनि तपाईं । हे शम्भो ! हजुरको महिमा वर्णन गर्न शेषनाग, सरस्वती र ब्रह्माले पनि नसकेको म कसरी सक्नेछु ?' यसरी

हिमालय पर्वतले स्तुति गरेको सुनी महादेव प्रसन्न भएर हँसिलो मुख पारी - 'हे गिरिराज ! तिम्रो श्रद्धा भक्ति देखेर म प्रसन्न भएँ, सदैव मेरो भक्तिमा चित्त लगाई अन्त्यमा कैलासपद प्राप्त गरे । अब हामी जान्छौँ भनी हिमालय पर्वत र मेनकासित बिदा भई, साँढेमा चढेर पार्वतीलाई काखमा लिई कैलास पर्वतमा गएर प्रमथगण-सहित भई आनन्दले रहँदा भए ।

।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां शिव-पार्वती-कैलासप्रवेशो नाम चतुर्दशोऽध्यायः ।।१४।।

काशीको स्वर्णमयी अन्नपूर्णा

# अथ पञ्चदशोऽध्याय:

## तारकासुर-वध-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! एकदिन पार्वतीले बुकुवा घस्ता निस्केको मयलको मूर्ति बनाई द्वारमा पाले राखेकी थिइन् । महादेव बाहिरबाट आएर भित्र जान खोज्दा त्यस मूर्तिले जान दिएन र त्यससित युद्ध गरी त्यसको शिर छेदन गरेर भित्र जानुभयो । अनि पार्वतीले महादेवसित 'द्वारमा कोही बसेको थिएन ?' भनी सोधिन् र महादेवले 'त्यसको त मैले शिर छेदन गरेर आएँ' भन्नुभयो । अनि पार्वतीले 'त्यो त मेरो पुत्र हो । किन शिर छेदन गर्नुभयो ?' भनी पुत्र-भावले स्नेह र शोक गर्न लागिन् । अनि महादेवले -'हे पार्वती ! मैले थाहा नपाएर त्यस्तो गरेँ, बचाइदिन्छु, शोक नगर' भनी बुझाई आफ्ना गणहरूलाई डाकी- 'हे गण हो ! चारै दिशामा गई पहिले जे भेट्दछौ त्यसैको शिर छेदन गरेर ल्याओ ।' भनी चन्द्रबाण दिएर पठाउनुभयो । गणहरू 'जो आज्ञा' भनेर चारै दिशामा हेर्दै जाँदा निकै बेरपछि यौटा हात्ती फेला पारे र महादेवको आज्ञानुसार त्यसका उपर चन्द्रबाण प्रहार गरे ।

त्यो चन्द्रबाण गएर हात्तीको गर्धनमा लागेर शिर छेदन भयो र त्यो हात्ती यौटा मात्र दाँत भएको अग्लो र राम्रो थियो । त्यस्तो हात्तीको शिर लगेर महादेवको अगाडि राखिदिए । अनि-'हामीले यही पायौं' भनी बिन्ती गरे । तब श्रीमहादेवले हात्तीको शिर मृत मूर्तिमा जोरेर जीवित पारिदिए । त्यही मूर्तिको नाम 'गणेश' भई पार्वती-पुत्र कहलाए । त्यसपछि महादेव त पार्वतीसित मात्र भुलेर भित्र नै रहन लागे । महादेव-बिना यो ब्रह्माण्ड संसाको रक्षा कसरी होला ? अतः यस्तो विचार गरेर इन्द्रले अग्निलाई डाकेर-'हे अग्नि ! तिमी गएर महादेवलाई बाहिर ल्याउने काम गर' भनी अग्निलाई अह्राए । इन्द्रको वचन सुनी अग्निले 'हवस्' भनी कैलासपर्वतमा गएर भित्र जान लाग्दा द्वारपालले जान दिएन र वायुरूप भई ताल छिराउने प्वालबाट भित्र पसेर भिक्षुकरूप भई महादेव-पार्वती एकान्त गरिरहेका स्थानमा पुगे । त्यस्तो किसिमले भित्र आएका अग्निलाई देखेर महादेव रिसाई भस्म पार्न लाग्नुभयो । तब जगत्माता पार्वतीलाई दया लाग्यो र बिन्ती गरिन् - 'हे नाथ ! भिक्षा माँग्न आएका भिक्षुकलाई भस्म पार्नु अनुचित हो । नजानेर

आएछन्, बरु केही दिऔं र जाऊन्' भनिन् । अनि महादेवले आफ्नु हातमा आफ्नै वीर्य थापेर 'लौ भिक्षा ले' भनेर दिनुभयो । अग्निले पनि त्यो वीर्य निलिदिए । शिवको अमोघ वीर्यले अग्निलाई गर्भ रह्यो र अग्नि डराई यो अनर्थ हुन लाग्यो भनी त्यहाँबाट गंगाको किनारमा गएर कुशको झाङमा उकेलिदिए । त्यो वीर्य आगो बले-झैं झाङमा बलिरहेको थियो । सप्तऋषिका पत्नीहरू गंगा-स्नान गरेर फर्कदा आगो बलेको देखेर 'कसले आगो बालेर गएछ, ताप्न जाऔं' भनेर गए । यौटीले चाहिं 'अर्काले बालेको आगो ताप्नु हुँदैन' भनी गइनन् । छः जना मात्रै आगो तापेर घर गए । ती आगो ताप्ने जतिलाई गर्भ रह्यो र ऋषिहरूले थाहा पाई- 'तिमीहरूलाई कसरी गर्भ रह्यो ?' भनी सोधे । ऋषि-पत्नीहरूले केही उत्तर दिन सकेनन् र ऋषिहरू रिसाई श्राप दिए । अनि ती ऋषिपत्नी हरूले त्यो वीर्य गंगामा उकेली आकाशमा गएर षट्कृत्तिका तारा भई रहे । पछि त्यही वीर्यबाट षट्वक्त्र अर्थात् छः मुख भएका कुमार उत्पन्न भएर गंगाका पुत्र भई श्रीमहादेवकहाँ कैलासमै रहे । त्यसपछि कुनै दिन महादेवले गणेश र कुमार दुवैलाई डाकेर

आज्ञा भयो-'हे गणेश ! हे कुमार ! तिमी दुवै जना गएर सुमेरु परिक्रमा गरेर आओ । जो पहिले आउला त्यसलाई वरदान दिनेछु ।' यति श्रीमहादेवको आज्ञा सुनी कुमार मयूरमा चढेर सुमेरु परिक्रमा गर्न हिंडे । कुमार हिंडेको देखेर गणेश आत्तिई अब कसो गरूँ भन्दै आफ्नू वाहन मूसो-छेउ गए । मूसोले गणेशलाई चिन्तित देखेर- 'हे विनायक ! किन चिन्तित हुनुभयो ? के आपत् अइपऱ्यो ?' भनी सोध्यो । अनि विनायकले भने-सुमेरु परिक्रमा गरेर आओ भनी महादेवले आज्ञा भएको र कुमार हिंडिसकेको सारा कुरा सुनाइसकी- 'अब कसो गरूँ, तँ त्यस्तो, म यस्तो लामू सूँढ र ठूलो पेट भएको । म हिंड्नै सक्तिनँ, तँ उड्नै सक्तैनस् ।' यति विनायकले भनेको सुनी मूसो भन्दछ- 'हे गणेशजी, तपाईंलाई म केही ज्ञान दिन्छु, सुन्नुहवस् - महादेव, पार्वती र गंगा तीनै जना बसेको स्थानमा गएर अञ्जलि जोरी- 'हे पिता-माता ! मेरा सुमेरु पर्वत पनि हजुर, सम्पूर्ण देवताका देवता पनि हजुर' भनी तीन प्रदक्षिणा गरेर दण्डवत् गर्नोस्, अनि हजुरलाई अवश्य वरदान प्राप्त हुनेछ ।' आफ्नू वाहनको त्यस्तो अर्ति मानेर गणेशजीले त्यसै गरे । अनि महादेव

प्रसन्न भएर- 'हे गणेश ! तिमी धन्य रहेछौ, वरदान लेऊ । स्वर्ग, मर्त्य, पाताल तीनै लोकमा कसैले कुनै पनि काम गर्दा पहिले तिम्रो पूजा नगरेर गऱ्यो भने सिद्ध हुनेछैन ।' यस्तो वरदान दिनुभयो । उता सुमेरु परिक्रमा गर्न गएका कुमार आइपुगेनन् र गंगाले महादेवसित बिन्ती गरिन् - हे जगदीश्वर ! गणेशले वरदान पाए, तर मेरो पुत्र कुमार आइपुगेन । गङ्गाको यस्तो वचन सुनी महादेव भन्नुहुन्छ- 'हे गंगे ! तिमी स्वस्थानी परमेश्वरीको व्रत गर, अनि तिम्रा पुत्र कुमार आइपुग्नेछन् ।' यति शिवले आज्ञा भएको सुनी गङ्गा प्रसन्न भइन् र व्रत-विधि सोधिन् । अनि महादेवले स्वयं व्रत-विधि बताउनुभयो- 'हे गंगे ! पौषशुक्ल पूर्णिमाको दिनदेखि हात-खुट्टाका नङ काटी, स्नान गरी, पवित्र भई, एकभक्त रही, एकचित्त गरी मेरो पुत्र कुमार झट्ट आइपुगोस् भनी नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गर्न लागिन् । महीना दिन भयो र माघशुक्ल पूर्णिमाको दिन अष्टोत्तर सय रोटी, अष्टोत्तर सय बेली-पुष्प, अष्टोत्तर सय अक्षता, अष्टोत्तर सय पान, अष्टोत्तर सय कुड्का सुपारी र पञ्चामृत, वस्त्र, फल-फूल, धूप-दीप, नैवेद्य आदि समस्त

वस्तु तयार पारेर आर्शीमा ॐकार लेखी श्रीस्वस्थानी परमेश्वरीको पूजा गरिन् र अर्घ्य दिई स्तुति गरिसकेर प्रसाद झिक्न लाग्दा श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले कुमार टुप्लुक्क आइ-पुगे । अनि गंगाले धन्य श्रीस्वस्थानी परमेश्वरी भनी आफ्नू पुत्रलाई प्रसाद र आशीर्वाद दिइन् ।

कुमारले शिव-पार्वती र गंगाजीलाई प्रणाम गरेर वरदान माँगेको

अनि कुमारले महादेवकहाँ गई बिन्ती गरे- 'हे पिता ! म पनि वरदान पाऊँ ।' अनि महादेवले आज्ञा भयो- 'हे कुमार ! स्वर्ग, मर्त्य, पाताल तीनै लोकमा कसैले केही काम गर्दा पहिले तिम्रो पूजा नगरेर गरे भने त्यो कार्य सिद्ध नहोओस्' भनी वरदान दिनुभयो ।

यति कथा सुनिसकी अगस्त्य मुनि फेरि बिन्ती गर्दछन्- 'हे कुमार ! तारकासुर दैत्यले कसको

तपस्या गरेर वरदान पाई अमरावती समेत लियो । फेरि त्यसलाई कसले र कसरी मारे र इन्द्रले फेरि अमरावती प्राप्त गरे ? यो वृत्तान्त आज्ञा गर्नुहवस् ।' यति अगस्त्य मुनिको बिन्ती सुनी कुमारजी आज्ञा गर्नुहुन्छ- 'हे मुने ! कश्यप ऋषिको पुत्र तारकासुर एकदिन 'दुग्धप्रभा' तीर्थमा स्नान गर्न गएको थियो । त्यहीँ पेची मुनिले तपस्या गरेको देखेर उसलाई पनि तपस्या गर्न मन लाग्यो र पेची मुनिसँग सोध्यो- 'हे मुनीश्वर ! तिमीले तपस्या गरेको देख्दा मलाई पनि तपस्या गर्न मन लाग्यो। अतः कसरी त्यो गर्ने हो ?' मुनिले भने- 'हे तारकासुर ! तिमीलाई तपस्या गर्ने इच्छा भए यिनै दुग्धप्रभा नदीको सिह्रानमा हिमालय पर्वत छ, त्यहीँ गई यसरी-यसरी ब्रह्माजीको तपस्या गर ।' मुनिको त्यस्तो उपदेश सुनी त्यतैबाट सरासर हिमालय पर्वत पुगी, ठूलो कष्ट सहेर हजार वर्षसम्म ब्रह्माको तप र आराधना गर्‍यो । अनि ब्रह्माजी प्रसन्न भएर सामुन्ने आई आज्ञा भयो- 'हे तारकासुर ! तिम्रो तपस्याले म प्रसन्न भएँ, वरदान माँग।' अनि तारकासुरले ब्रह्मालाई दण्डवत् प्रणाम गरी बिन्ती चढायो- 'हे ब्रह्मन् ! हजुरले सृष्टि गरेका पाँच वर्ष नाघिसकेका कुनै पनि प्रणीले

मलाई संग्राममा मार्न नसकून् । फेरि जसले मेरो शिर भूमिमा खसाल्ला त्यसको पनि तत्काल शिर फुटेर मरोस् । फेरि म समस्त देवतालाई जित्न समर्थ होऊँ ।' यस्तो वर माँग्दा ब्रह्माजीले 'तथास्तु' भनी ब्रह्मास्त्र समेत दिई अन्तर्धान हुनुभयो । त्यसपछि तारकासुर उन्मत्त भएर कसैलाई तृण-बराबर पनि नठानी अनेक दानव साथ लिई अमरावती गयो । त्यसरी सैन्यसहित तारकासुर आएको देखी देवराज इन्द्र रिसाई सकल देवता साथ लिई आफाप्ना शस्त्रास्त्र लिई संग्राममा अगि सरे । दुवै पक्षको भयंकर युद्ध हुँदा देवताहरूले तारकासुरका कोटि-कोटि सैन्य मारिदिए । आफ्ना सेना त्यसरी नाश भएका देखी तारकासुरले आफ्ना गुरु शुक्राचार्यलाई बिन्ती गऱ्यो-'हे गुरो ! देवताहरूले मेरा कोटि-कोटि सेना मारिसके, म के उपाय गरूँ ? अब हजुरले हाम्रो उद्धार गर्नुपऱ्यो।' तारकासुरको त्यस्तो प्रार्थना सुनी शुक्राचार्यले संजीवनी विद्याको प्रयोग गरेर जल छर्किदिनासाथ मरेका दैत्य समस्त जीवित भएर फेरि युद्धमा अगि सरे । त्यसरी आफूले मारिसकेका दैत्यहरू फेरि शुक्राचार्यले बचाइदिएको देखी इन्द्र रिसाई ऐरावत हात्तीमा चढेर वज्र प्रहार

गरे। यसरी देवता र दैत्यको दश हजार वर्षसम्म घोर युद्ध भयो । त्यसमा दुवै पक्षका कोटि-कोटि सेनाको संहार भयो । दैत्यहरू मरे पनि शुक्राचार्यले बचाइदिने र देवताहरू मरेको मर्‍यै हुने भएर इन्द्रसमेत समस्त देवता हार मानी स्वर्गबाट भागी गुरु बृहस्पतिकहाँ गएर संग्रामको सारा स्थिति बताए । अनि गुरु बृहस्पतिले भने- 'हे सुरराज ! यस संग्राममा तिम्रो विजय हुन सक्तैन किनकि तारकासुर दैत्यले हजार वर्षसम्म कठोर तप गर्दा ब्रह्माजी प्रसन्न भई मैले सृष्टि गरेका पाँच वर्ष नाघेका प्राणीले तँलाई मार्न सक्नेछैनन् भनी यस्तो वर दिनुभएको छ । अतः तिमीहरू क्यै काल कतै बिताई महादेवका पुत्र भएपछि मात्र अनि तिमीहरू महादेवका शरणमा जाओ' भन्दा देवताहरू त्यहाँबाट आई मर्त्यमण्डलको मृगस्थलीमा लुकेर बसेका थिए । देवताहरू भागेपछि तारकासुर तीनै लोकको राज्य भोगी सुखपूर्वक रहेको थियो ।

हे मुने ! अमरावतीबाट लखेटिएका सुरेन्द्र धेरै कालसम्म त्यहीं लुकिरहे । पछि एकदिन समस्त देवतालाई डाकेर भने- 'हे देवता हो ! पापिष्ठ तारकासुरले अमरावती खोसेर हामीलाई दुःख

दिएको धेरै समय भइसक्यो । अब त्यसको संहार गरेर फेरि अमरावती लिनुपर्दछ । त्यो कसरी भने-महादेवका कुमार र गणेश दुई पुत्र भएका छन् । तिनले हाम्रो शत्रु तारकासुरलाई अवश्य मारिदिनेछन् । अब कैलासमा गई महादेवसित आफ्नो दुःख बिन्ती गरौं ।' यति सल्लाह गरेर सबै देवता-सहित इन्द्र शिवजीकहाँ पुगे । अनि-'हे जगदीश्वर ! पापिष्ठ तारकासुरले अमरावती खोसी हामीलाई दुःख दिएको धेरै काल भयो । अब त्यसको संहार गरी समस्त देवताको कल्याण गर्नुहवस् । इन्द्रादि देवताहरूको यस्तो प्रार्थना सुनी महादेवले भन्नुभयो-'हे देवता हो ! तारकासुरलाई मैले मार्नु हुँदैन । मेरा पुत्र कुमारले मारिदिनेछन् । अब समस्त देवता, यक्ष, गन्धर्व आदि सबैले कुमारलाई सेनापति बनाई युद्ध गर्न जाओ, पछि म पनि आउनेछु।' यति महादेवको आज्ञा सुनी इन्द्रादि तेत्तीस कोटि देवता, यक्ष, गन्धर्व, भूत-प्रेत, प्रमथगण समेत भई तारकासुरसँग युद्ध गर्न पिनाक धनु लिई प्रस्थान गरे । तर गणेशलाई भन्न बिर्सेछन् । अनि गणेशले आफ्नू वाहन मूसोसित भने- 'हेर, मलाई वरदान दिएर पनि हेलाँ गरे ।' गणेशजीको कुरा सुनी मूसोले

भन्यो- 'हे विनायक ! हजुरलाई अन्यथा गरेको होइन, भन्न बिर्सें । म अहिल्यै सम्झाएर आउँछु' भनी गएर प्रस्थान गरिराखेको पिनाक धनुको ताँदो काटेर आयो । त्यस्तो देखेर देवताहरूले यो प्रस्थान शुभ भएन, विघ्न पऱ्यो भन्न लागे । तब महादेवले आज्ञा भयो- 'हे देवता हो ! विघ्न परेको होइन, तिमीहरूले गणेशलाई भन्न बिर्सेछौ, उसलाई पनि लिएर जाओ।' यति महादेवले आज्ञा गरेपछि गणेश- सहित सबै देवता अमरावतीमा युद्ध गर्न गए । देवता र दैत्यको परस्पर भयंकर संग्राम भयो । तारकासुर दैत्यले कुमारको रथ घचेटी एक योजन पछि हटायो । त्यो देखेर कुमारले तारकासुरको रथ घचेटी चार योजन पछाडि हटाइदिए । अनि तारकासुरले खड्ग प्रहार गऱ्यो । कुमारले आफूतिर खड्ग आएको देखेर कानसम्म धनु खैंची तारकासुर दैत्यको घिच्रो ताकी चन्द्रबाण प्रहार गरे । त्यो चन्द्रबाण गएर दिनको सूर्य अस्ताई रातको तारा नदेखिँदै साँझको वेलामा पुगेर तारकासुर दैत्यको शिर च्वाट्टै छेदन गऱ्यो । त्यो देखेर श्रीमहादेव तत्काल त्यहाँ पुगेर तारकासुरको शिर भूमिमा पर्न नपाउँदै बीचैमा समाउनुभयो । गिंड युद्ध- भूमिमा ढल्यो । त्यसरी

तारकासुर मरेको देखेर अरू दैत्यहरूले संग्रामबाट भागेर आफाफ्नू प्राण-रक्षा गरे । अनि समस्त

कुमारले तारकासुरलाई मारेको

देवताहरूले 'धन्य धन्य कुमार !' भनी उनको गुण-गान गर्दै कैलास पुगे । उहाँ गै इन्द्रले बिन्ती गरे-'हे ईश्वर ! हजुरको कृपाले शत्रुको संहार गरेर आयौँ । अब आज्ञा पाए अमरावती जाने थियौँ ।' यति देवेन्द्रको प्रार्थना सुनी महादेवले- 'तिम्रो राज्य निष्कण्टक हवस्' भनी बिदा दिनुभयो र इन्द्रादि देवताहरू श्री महादेवलाई दण्डवत् प्रणाम गरी अमरावती गएर सानन्द राज्य गर्दा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां तारकासुरदैत्यवधवर्णनं नाम पञ्चदशोऽध्यायः ।।१५।।*

# अथ षोडशोऽध्यायः

## महादेवमृगरूप-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ-हे अगस्त्य मुनि ! ध्यानपूर्वक सुन-फेरि कुनै दिन शिवजीलाई वन-विहार गर्ने इच्छा भयो र कसैलाई पनि थाहा नदिई श्लेष्मान्तक वनमा मृग-स्वरूप भई अनेक मृग - मृगीहरूका साथ परम आनन्दले रहन लाग्नुभयो । यता पार्वतीले महादेवलाई नदेखी अनेक स्थानमा खोजिनु, तर कहीं भेट्टाउन नसकी महादेवले अघि पनि मलाई यसै गरी दुःख दिनुभयो, अब फेरि कहाँ जानुभयो होला ! भनी ध्यान-दृष्टिले विचार गर्दा श्लेष्मान्तक वनमा मृगरूप धरेर विहार गरिरहेको थाहा पाइन् र आफू पनि वाग्मती नदीको किनारमा गएर अनेक कष्ट खपी तपस्या गर्न लागिन् । कैलासमा शिव-पार्वती दुवैलाई नदेखी ब्रह्मादि देवताले स्थान-स्थानमा खोजी गरे, तर कहीं पनि पत्ता पाउन सकेनन् र हार मानी आफाफ्ना आश्रममा जान लाग्दा वाग्मती नदीको किनारमा पार्वतीलाई तपस्या गरिरहेकी देखेर सबै देवताहरूले प्रणाम गरी सोधे- 'हे जगत्माता ! कैलासमा हजुर र महादेव

नरहँदा संसारै शून्य जस्तो भयो र हामीहरू असहाय अनाथ जस्ता भयौँ, अब हामी-माथि दया गरेर महादेव कहाँ हुनुहुन्छ? आज्ञा हवस् । फेरि हजुर पनि यस्तो स्थानमा आएर एक्लै किन बस्नुभएको हो ? यी सबै कुरा हामीलाई आज्ञा हवस्।' यति देवताहरूको प्रार्थना सुनी पार्वती भन्नुहुन्छ-'हे देवता हो ! महादेव यतै आउनुभएको हुनाले म उनैको आराधना गरेर यहाँ बसेकी हुँ । श्लेष्मान्तक वनको नैर्ऋत्य कोणमा यौटा जंगल र सरोवर छ । महादेव त्यहीं मृगस्वरूप भएर वन-विहार गर्दै हुनुहुन्छ । कस्तो मृग भने सुवर्णको जस्तो वर्ण भएको, तीन नेत्र र एक सीङ भएको, मृगहरूको समूहमा सबैभन्दा ठूलो मृगस्वरूप धारण गरेर बस्नुभएको छ । अब तिमीहरू त्यहीं गएर खोजी गर, अनि महादेवको दर्शन पाउनेछौ ।' पार्वतीको वचन-अनुसार देवताहरूले त्यहीं गई खोजी गरे, तर पाउन सकेनन् । ब्रह्मा, विष्णु, इन्द्र तीनै देवताले अनेक स्तुति गर्दै खोज्न लागे। उसै वेला अकस्मात् लाखौं मृगको यौटा समूह देखे । त्यही फौजका माझमा अत्यन्त राम्रो, तीन नेत्र, एक सीङ र सुवर्ण झैं वर्ण भएको सबैभन्दा ठूलो मृगलाई परैबाट देखे । त्यस मृगलाई आफैतिर

आउन लागेको यी तीनै देवताले देखेर अलिक नगीच गई बिन्ती गरे- 'हे भगवन् ! कैलास शून्य भएको धरै दिन भयो । हे दयासागर ! हामी त्रिदेव ब्रह्मा, विष्णु, इन्द्रमाथि दया गरी दर्शन दिनुहवस् ।' यस्तै अनेक स्तुति गर्दै मृगरूप शिवका नगीचै गए । आफूतिर आउन लागेका देवतालाई देखेर रुद्र-मृग उफ्री-उफ्री भाग्न लागे । रुद्रमृगको त्यस्तो चाला देखेर विष्णु भगवान् भन्नुहुन्छ- 'हे देवेन्द्र ! हामीहरूको प्रार्थनाले महादेव चैतन्य हुने भएनन् । अब हामी तीन व्यक्तिले तीन तर्फबाट घेरा दिएर समातौँ ।' विष्णुको यस्तो वचन सुनेर 'हुन्छ' भनी तीन देवताले तीनतिर उभिई घेरा दिएर रुद्र-मृगको सीङको जरामा विष्णुले र माझमा ब्रह्माले, टुप्पामा इन्द्रले बलपूर्वक समाते । ती त्रिदेवले समाउनासाथ रुद्र-मृग अन्तर्धान भए । सीङ मात्र त्रिदेवका हातमा रह्यो । त्रिदेवले बेसरी समातेका हुनाले त्यो सीङ तीन टुक्रा भई तीनै देवताका हातमा एक-एक टुक्रा आयो । त्यस्तो भएको देखेर- 'यो हामीले ठूलो अपराध गर्‍यौँ, साह्रै अनर्थ भयो, अब के गर्ने ?' भन्दै तीनै देवताले 'हे शम्भो, हाम्रो यो अपराध क्षमा गरिबक्सियोस्' भनी स्तुति गर्न

लागे । ब्रह्मा, विष्णु र इन्द्रले त्यसरी स्तुति गरेको देखेर दयाका सागर महादेव प्रसन्न भई ज्योतिःस्वरूपको दर्शन दिनुभयो । अनि देवताहरू खुशी भई दण्डवत् प्रणाम गर्दा भए । अनि महादेव आज्ञा गर्नुहुन्छ- 'हे देवता हो ! तिमीहरूको स्तुतिले म प्रसन्न भएँ, वर माँग ।' महादेवको त्यस्तो आज्ञा सुनेर ब्रह्मा, विष्णु र इन्द्र बिन्ती गर्दछन् ! 'हे प्रभो ! हजुरको ध्यान कहिल्यै पनि नबिसौं, सदा हाम्रो हृदयमा रहिरहोस् । अरू हामी-लाई केही पनि वर चाहिन्न, केवल हजुरका चरणको भक्ति चाहन्छौं ।' देवताहरूको त्यस्तो वचन सुनेर महादेवले 'तथास्तु' भन्नुभयो । फेरि तीनै देवताले भने- 'हे ईश्वर ! यो हजुरको सीङ तीन टुक्रा पारेको हामीहरूको अपराध क्षमा गरी यी सीङका तीन टुक्रा के गर्ने हो ? आज्ञा हवस् ।' अनि शिवजीले आज्ञा गर्नुभयो- 'हे देवता हो ! मेरो सीङ तीन टुक्रा पारेको तिमीहरूलाई कुनै अपराध लाग्दैन र शंका मान्नुपर्दैन । बरु इन्द्रका हातको इन्द्रलोकमा, ब्रह्माका हातको मर्त्यमण्डल नेपालको गोकर्ण भन्ने स्थानमा र विष्णुका हातको पातालमा लगेर स्थापना गर्नू ।' यति शिवजीको आज्ञा सुनी ब्रह्मा, विष्णु र इन्द्र तीनै देवताले दण्डवत्

प्रणाम गरी बिदा भएर उपरोक्त तीनै स्थानमा लगी सीङ स्थापना गरेर आफाफ्ना आश्रममा गए । अनि महादेव सरासर गएर तपस्या गरिरहेकी पार्वतीलाई काखमा लिई त्यहाँबाट अन्तर्धान भएर कैलास पर्वतमा पुगी नन्दी, भृङ्गी, चतुःषष्ठी योगिनी, भूत-प्रेत पिशाच, प्रमथगण-सहित भई परम आनन्दसाथ रहनुभयो ।

हे मुने ! त्यसपछि नैर्ऋत्य कोणको लंकापुरीबाट दशशिर रावण नित्य गोकर्णमा आएर श्रीमहादेवका चरणमा दण्डवत् गरी नाच-गान गरी तपस्या गरेर जान्थ्यो । त्यही क्रमले निकै दिन बितेपछि एकदिन शिवजीले विष, भाङ, धतुरो खाई अचेत भइरहेको बेलामा रावण आएर दण्डवत् गरी नाच-गान र मृदङ्ग बजाई स्तुति गर्न लाग्यो र दिगम्बर शिव प्रसन्न हुनुभयो । अनि हे रावण ! तेरो तपस्या र सेवाले म प्रसन्न भएँ, वरदान माँग् । जे माँगे पनि दिन्छु । मेरो निम्ति संसारमा अदेय केही पनि छैन ।' महादेवको यस्तो वचन सुनी रावण भन्दछ- 'हे ईश्वर ! हजुरको कृपाले मसँग सबै वस्तु छ, मलाई केही पनि चाहिन्न ।' रावणको त्यस्तो कुरा सुनी महादेवले फेरि आज्ञा भयो- 'हे रावण ! केही एक थोक नमाँगी सुख

पाउन्नस्, लौ माँग्।' शिवको त्यस्तो इच्छा बुझी रावणले मनमा विचार गर्‍यो-'अब मैले माँग्ने कुरा के छ र माँग्ने ? महादेवका काखमा बसेकी सकल लक्षण-युक्त पार्वती नै माँग्दछु' यस्तो निश्चय गरेर बिन्ती चढायो-'हे प्रभो ! मलाई अरू केही पनि चाहिन्न, केवल यौटी पार्वती बक्सनुहवस्' भन्यो र महादेवले 'लौ लैजा' भनेर पार्वती जिम्मा लगाइदिनुभयो । रावण पनि जगत्माता पार्वतीलाई पीठमा बोकेर शिवजीसँग बिदा माँगी हिंड्यो । यो सबै कुरा वैकुण्ठनाथ विष्णुले थाहा पाई 'अनर्थ हुन आँट्यो' भन्दै तत्काल हावाभन्दा पनि शीघ्रगतिले मोहिनीरूप धारण गरी रावणकहाँ पुगेर भन्नुभयो-'हे महाशय ! तिमी को हौ ? कहाँबाट आइरहेका छौ ? पीठमा बोकेकी यी सुन्दरी को हुन् ? किन बोकेर ल्यायौ र कहाँ लैजाने विचार छ ?' रावणले भन्यो-'हे सुन्दरी ! लंकापुरीको राजा रावण भनेको मै हुँ । मेरो तपस्याले प्रसन्न भई महादेवले मलाई आफ्नी स्त्री पार्वती दिनुभयो र यी तिनै पार्वती हुन् । म यिनलाई बोकेर लंकापुरी जाँदै छु ।' यति रावणको कुरा सुनी मोहिनी भन्न लागिन्-'हे वीर रावण ! के तिमीलाई लाज लाग्दैन ? के ती पार्वती हुन् ?

तिमीलाई छलेर महादेवले मायाद्वारा रचेकी यी स्त्री दिएछन्, तिमी जस्ता राजा र वीर व्यक्तिले यस्ती स्त्री पीठमा बोकेर हिंडेको कसैले देखे भने के भन्लान् ? यी पार्वती होइनन् । तिमीलाई महादेवले झुक्याएछन् । बरु पार्वती लैजाने इच्छा भए म तिमीलाई पार्वती पाइने स्थान बताइदिन्छु, सुन । महादेवले आसन गरी राखेको बाघको छालाभित्र साँच्चिकी पार्वती लुकाई राखेका छन्, त्यही माँगेर लैजाऊ ।' यति भनी अनेक हाउ-भाउ कटाक्षले छोपी मोहिनीरूप विष्णुले कुरा गर्दा रावणको चित्त बुझ्यो र पार्वतीलाई त्यहीं छाडेर आफू फेरि कैलास पुग्यो । यता विष्णुले पार्वतीलाई वैकुण्ठ लगी पूजा र सत्कार गरेर राखे । उता महादेव कुचेष्टा भइरहेकै थिए, त्यसै वेला रावण पुगेर बिन्ती गऱ्यो- 'हे ईश्वर ! हजुरले मलाई छलेर पार्वती भनी मायाले यौटी स्त्री बनाई दिनुभएछ, त्यो कुरा थाहा पाई मैले बाटैमा फालेर आएँ । दिने इच्छा भए हजुरले आसन गरी राखेको बाघको छाला-भित्रकी पार्वती दिनुहवस् ।' रावणले यति भनेको सुनी महादेवले ध्यान-दृष्टिले विचार गर्दा पार्वतीलाई विष्णुले लगेछन् भन्ने थाहा पाई मायाले यौटी स्त्री उत्पन्न

गरेर आसन गरिराखेको बाघको छाला-भित्रबाट झिकेर 'लौ लैजा' भनी दिनुभयो । रावण अत्यन्त प्रसन्न भएर माया-रचित स्त्रीलाई पीठमा बोकी लंकापुरी गयो । यता विष्णुले पार्वतीलाई महादेवकहाँ पुऱ्याई वैकुण्ठ जानुभयो ।

कुमारजी भन्नुहुन्छ- हे अगस्त्य मुनि ! एकचित्त भएर सुन-एकदिन महादेवले पार्वतीसित सल्लाह गरी 'मानसरोवर' तलाउमा राजहंस भएर जल-क्रीडा गर्न जानुभएको थियो । त्यसै मौकामा 'अन्तःपुर' नामको नगरमा बस्ने यौटा जालन्धर थियो । त्यसकी वृन्दा नामकी अत्यन्त पतिव्रता स्त्री थिइन् । एकदिन ती दुवै पति-पत्नी बसेर ठट्टा गरिरहेका थिए, त्यसै बखत जालन्धर अकस्मात् बेसरी हाँस्यो र वृन्दाले सोधिन्- 'हे स्वामी ! किन यसरी हाँस्नुभयो ?' जालन्धरले भन्यो-' हे वृन्दा ! तिमी जस्ती सुन्दरी पत्नी अरू कसको होली भन्ने लागेर हाँसेको हुँ । अरू कुनै कारण होइन ।' वृन्दाले उत्तर दिइन् -'हे स्वामी ! म के राम्री छु र ? महादेवकी स्त्री पार्वतीलाई देखे के गर्नुहोला ?' वृन्दाको यस्ता कुरा सुनी जालन्धरले भन्यो- 'हे स्त्री ! यो कुरा साँचो हो ? त्यसो भए म पार्वतीलाई छल्न जान्छु ।' यति

कुरा गरी मायाले महादेवको रूप धारण गरी कैलास पुग्यो । पार्वतीले महादेव आउनुभयो भनी सुनको कमण्डलु लिई पाउ धुन ढोकामा आइन् त पार्वतीलाई देख्नासाथ महादेव-रूपधारी जालन्धर मूर्च्छा परेर लड्यो । अनि पार्वतीले ध्यान-दृष्टिले विचार गर्दा आफूलाई छल्न महादेवको रूप धारी जालन्धर आएको थाहा पाई द्वारपाललाई भनिन्- 'हे नन्दी, हे भृङ्गी ! यहाँ कोही आए पनि मलाई नसोधी भित्र पस्न नदिनू' भनी आफू कसैले नदेख्ने स्थानमा गएर लुकी रीसले चूर भई विष्णुको आराधना गरिन् । पार्वतीले क्रोधित भएर आराधना गरेको विष्णु भगवान्ले थाहा पाई गरुडमा चढेर तत्काल कैलास पर्वतमा पार्वतीकहाँ पुग्नुभयो । 'हे पार्वती ! मलाई किन आराधना गरेकी ?' भनी सोध्नुभयो । अनि पार्वती भन्दछिन् - ''हे विष्णु ! महादेव जल-क्रीडा गर्न मानसरोवर तलाउमा राजहंस भई आनन्द मनाउँदै हुनुहुन्छ । यही मौकामा मलाई छल्न महादेवको रूप धारण गरी पापिष्ठ जालन्धर आयो र मैले थाहा नपाई महादेव नै पाल्नुभयो भनी पाउ धुन बाहिर ढोकामा जाँदा मलाई देख्नासाथ मूर्च्छा परी भूमिमा ढलेको देख्दा महादेव

भए मलाई देख्नासाथ मूर्च्छित हुनु पर्दैनथ्यो, यो कुन पापी मलाई छल्न आयो होला भनी ध्यान-दृष्टिले विचार गर्दा जालन्धर रहेछ भन्ने जानी द्वारपाललाई 'यहाँ कोही आए पनि भित्र नपठाउनू' भन्ने आदेश दिएर यहाँ आई तपाईंको आराधना गरेकी हुँ । अब जे गर्नुपर्ने हो, तत्काल गर्नुहवस् ।" यति पार्वतीको वचन सुनी विष्णु भगवान् भन्नुहुन्छ 'हे पार्वती माता ! पापिष्ठ जालन्धरले तपाईंलाई दगा गर्न मायारूप धारण गरेर आएपछि म गएर त्यसकी पतिव्रता स्त्री वृन्दाको सत्य डगाएर आउँछु, यसमा कुनै शंका छैन । म पहिले मानसरोवर गएर महादेवलाई यहाँ पठाइदिन्छु ।' यति भनेर पार्वतीसित बिदा भई ठूलो वेगले मानसरोवरतिर जाँदा भए।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां विष्णुमानसरोवरगमनं नाम षोडशोऽध्याय: ।।१६।।*

काशी मंगलागौरीको गवस्तेश्वर महादेव

# अथ सप्तदशोऽध्यायः

## वृन्दाधर्महरण-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि महादेव राजहंसहरूका राजा भएर मानसरोवरमा अनेक हंसका साथ जल-क्रीडा गरिरहनुभएको थियो । त्यही अवसरमा विष्णुलाई ठूलो वेगले आएको देखी राजहंसरूप महादेव भन्नुहुन्छ- 'हे विष्णु ! यस्तो वेगले मकहाँ के काम परेर आयौ ? तिमीलाई के कष्ट आइलाग्यो ? भन ।' यति महादेवको वचन सुनी विष्णु गरूड़बाट ओर्ली दण्डवत् प्रणाम गरेर बोले- 'हे ईश्वर ! हजुर यता आएपछि हजुरको रूप धारण गरी जालन्धर पार्वतीलाई छल्न कैलास पुगेछ र पार्वतीले मलाई छल्न जालन्धर आएछ भन्ने थाहा पाई त्यहाँ नबसेर कसैले नदेख्ने स्थानमा लुकी मलाई डाक्नुभयो, अनि म गएर सारा विस्तार बुझी यहाँ आएको हुँ । अब म गएर त्यसकी स्त्री वृन्दाको पतिव्रता धर्म नाश पारेर आउँछु ।' यति विष्णुको वचन सुनी महादेव राजहंसको रूप छाडी आफ्नू रूप धारण गरी क्रोधले राता-राता आँखा पारी आज्ञा गर्नुभयो- 'हे विष्णु ! त्यसो हो भने म अब

कैलास जान्छु । तिमी वृन्दाकहाँ गएर त्यसको पतिव्रता धर्म नाश पारेर आऊ । त्यस पापिष्ठ जालन्धरलाई म नमारी छाड्नेछैन' भन्दै पाखुरा निमोठी क्रोधयुक्त भएर विष्णुलाई पठाई आफू कैलास पर्वतमा पार्वती लुकिरहेको स्थानमा पुग्नु-भयो । अनि महादेव आउनुभएको देखेर पाउ धोई दण्डवत् गरेर-'हे स्वामी ! भनी जालन्धर आएको सारा वृत्तान्त वर्णन गरिन् ।' अनि महादेव आज्ञा गर्नुहुन्छ- 'हे प्रिये ! म त्यो पापिष्ठ जालन्धरलाइ नमारी छाड्दिनँ, विष्णु वृन्दाको सत्य डगाउन गएका छन् । उनी आउनासाथ युद्ध गरेर त्यसलाई मार्नेछु' भनी गौरी-शंकर दुवै जना कुरा गरिरहे। उता विष्णु जालन्धरको रूप लिएर अन्तःपुर पुगे । जालन्धररूप विष्णु आएको देखेर वृन्दाले स्वामी आए भनी पाउ धोई भित्र लगेर बसालिन् अनि सोधिन् -'हे स्वामी ! पार्वतीलाई छल्न जानुभएको के गरेर आउनु-भयो ? पार्वती मभन्दा कत्तिकी सुन्दरी रहिछन् ? भन्नुहवस् ।' त्यति सुनी जालन्धररूप विष्णु भन्दछन्- 'हे वृन्दा ! पार्वतीलाई छल्न नसकिने रहेछ किनकि म पार्वतीको घरभित्र जान खोज्दा ढोकामा बसेका द्वारपाललाई देखी डराएर फर्कें ।'

यसरी कुरा गर्दागर्दै वृन्दाले यी मेरा स्वामी होइनन्, विष्णु मलाई छल्न मेरा स्वामीको रूप धारण गरेर आएका रहेछन् भन्ने जानी- 'अब मैले केही युक्ति गर्नुपर्‍यो' भनी हाउ-भाउ कटाक्षले विष्णुलाई वशमा पारेर भनिन् -'हे स्वामी ! म केही कुरा भन्दछु, हजुर मान्नुहुन्छ कि मान्नुहुन्न ?' यति सुनेर विष्णुले- 'जे भने पनि मान्नेछु' भन्ने वाचा गरेपछि उनले भनिन् - 'विशेष कुरा केही होइन, केवल म नआएसम्म यहीं बसिरहनुहोला' भनी विष्णुलाई कोठामा थुनी आफू अर्कै घरमा गएर बसिरहिन् । अहिले आउलिन्, भरे आउलिन् भन्दै प्रतीक्षामा चार दिन बिते, तैपनि वृन्दा फर्किनन् । अनि विष्णु चिन्ता गर्न लागे - 'अब म यसै गरी बसिरहूँ भने कति दिन बस्ने ! जाऊँ भने वाचा हारिएको छ । उता महादेव के भन्नुहोला भन्ने चिन्ता अलग्गै छ ! कसरी यहाँबाट उम्कने ! इत्यादि तर्क-वितर्क गरिरहे पनि केही गर्न समर्थ थिएनन् ।

उता महादेवले विष्णु गएको यतिका दिन भैसक्यो, तैपनि किन फर्केनन् भनी ध्यानदृष्टिले विचार गरी पार्वतीसित भन्नुभयो- 'हे गिरिजे ! वृन्दालाई छल्न गएका विष्णुलाई उसैले छली

कोठामा थुनिराखेकी रहिछ।' यति भनी मायाद्वारा यौटा अत्यन्त सुन्दर सोह्र वर्षको भिक्षुक उत्पन्न गरी उसलाई भन्नुभयो-'हे भिक्षुक ! तिमी अन्तःपुरको जालन्धरका घर गएर 'भिक्षां देहि' भनी वृन्दाले थुनिराखेका विष्णुलाई माँगेर ल्याऊ।' यति शिवजीको आज्ञा सुनी 'हुन्छ' भनी सरासर जालन्धरका घर पुगी 'भिक्षांदेहि' भने। अनि वृन्दाले झ्यालबाट हेरिन् र अत्यन्त राम्रो योगी देखी-यस्तो राम्रो र अलौकिक योगी मैले आजसम्म देखेकी थिइनँ, मेरो घरमा माँग्न पनि कहिल्यै आएको थिएन । यस्तो नवीन योगीलाई भिक्षा दिनैपर्दछ-इत्यादि विचार गरी भिक्षा लिएर गइन् -'हे योगिराज ! के माँग्नको इच्छाले आयौ ? भन'भनिन् । अनि योगीले भने-'केही माँग्ने इच्छाले आएको हुँ, दिने भए माँग्छु, नदिने भए व्यर्थ के माँग्नु ?' त्यति सुनी वृन्दाले भनिन् -'मैले दिन हुने वस्तु जे माँगे पनि दिनेछु' भनी वाचा (प्रतिज्ञा) गरेपछि योगीले भने-'अरू केही चाहिन्न, केवल तिमीले कोठामा थुनिराखेकोलाई माँग्दछु, त्यही यौटा देऊ ।' योगीको वचन सुनेर वृन्दा मनमनै विचार गर्न लागिन् - 'अब के गरूँ ? यस योगीले छल गरेर वाचा-बन्धन गराई माँग्यो।

नदिए वाचा हारिन्छ । जे भए पनि वाचा हार्नु अनुचित हो' यस्तो विचार गरेर कोठामा थुनिराखेका जालन्धर-रूप विष्णुलाई बाहिर ल्याई योगीको जिम्मा लगाइदिइन् । यसरी विष्णुलाई साथमा लिएर योगी बाहिर निस्की अन्तर्धान भई कैलास पुगेर शिवजीलाई सारा कुरा सुनाए । यता विष्णु बाहिर आएपछि मनमा तर्कना गर्न लागे-'म वृन्दाको सत्य डगाउन आएको, उसैले नै छली यतिका दिनसम्म थुनेर राखी, महादेवले के भन्नुभयो होला'इत्यादि चिन्तन गर्दै गरुडमा चढेर कैलास पुग्दा भए । विष्णु कैलास जाँदा गरुड़ उडेको चर्को शब्दले जालन्धर मूर्च्छाबाट जागेर केको शब्द हो भनी विचार गर्दा विष्णुले कैलासको चर्चा गरिरहँदा रहेछन्, अतः पार्वतीलाई छल्न कठिन मात्र होइन कि असम्भव पनि रहेछ, अब यहाँ नबसूँ, घरै जाऊँ भनेर जालन्धर आफ्नू घर गयो । उता विष्णु महादेवको सामुन्ने गएर प्रणाम गरी एकातिर उभिइरहे । विष्णुतिर हेरेर महादेवले आज्ञा भयो-'हे विष्णु ! तिमी वृन्दाको सत्य डगाउन गएका यतिका दिनसम्म त्यहाँ के गरि-रह्यौ ? आफ्नू काम अर्थात् उसको सत्य डगाउन सक्यौ कि सकेनौ ?' महादेवको यस्ता वचन

सुनी विष्णु बिन्ती गर्दछन् ! 'हे शम्भो ! हजुरको आज्ञाले म गएँ, तर वृन्दाले छली म फर्केर नआएसम्म कोठामै बसिरहनू भनी प्रतिज्ञा गराई मलाई थुनेर आफू बाहिर निस्की । ऊ आउली भनेर बस्ता-बस्ता कैयौं दिन बिते । वाचा हारेको र प्रतिज्ञा गरेको हुनाले त्यहाँबाट निस्कन नसकेर बसिरहेको थिएँ, पछि यौटा योगीको साथ लगाई छाडिदिई र हजूरको दर्शन गर्न हाजिर भएँ ।' विष्णुको यस्ता वचन सुनी महादेवले ब्रह्मा, इन्द्र आदि तेत्तीस कोटि देवता, यक्ष, गन्धर्व, किन्नर, नन्दी-भृङ्गी, चतुःषष्ठी योगिनी, भूत-प्रेत, पिशाच, राक्षस सबै जम्मा गरी आज्ञा भयो- 'हे देवता हो ! तिमीहरू गएर पापिष्ठ जालन्धरलाई मारेर आओ !' यति शिवजीको वचन सुनी देवताहरू 'हवस्' भनी तयार भए । अनि शिवजीले नारद मुनिलाई डाकी- ''हे मुने ! तिमी गएर जालन्धर लाई- 'तिमीसित लडाइँ गर्न समस्त देवताहरू आउन लागेका छन् । तिमी संग्रामको तयारी गर' भनिदेऊ ।'' शिवजीको आज्ञा अनुसार नारदजी तत्काल जालन्धरको घर जाँदा भए ।

हे मुने ! उता जब कैलासबाट जालन्धर आफ्नू घर गयो,तब वृन्दाले स्वामी आएको देखेर पाऊ

धुवाई भित्र लगेर बसेपछि सोधिन् - 'हे स्वामी ! पार्वतीलाई छल्न जानुभएको के कसो भयो ?' अनि जालन्धर भन्दछन् - 'हे प्रिये ! त्यस विषयमा विस्तारले भन्दछु, सुन-म महादेवको भेष धारण गरी कैलास पुग्दा पार्वतीले देखिन् र सुवर्णको कमण्डलुले मेरो खुट्टा धुन आइन् । त्यसै वेला मैले उनलाई देखेँ, ती-भन्दा सुन्दरी स्त्री तीनै लोकमा हुनु असंभव छ, अतः तिनको अनिन्द्य रूप देख्नासाथ मेरो होश हराई मूर्च्छा परेर भूमिमा ढलेको थिएँ । पछि चेत आयो र उठेर हेर्दा पार्वती कता गइन् केही जान्न सकिनँ र घर फर्केर आएँ ।' त्यति आफ्ना स्वामीको वचन सुनी वृन्दा भन्दछिन् - 'हे स्वामी ! तपाईं यहाँबाट हिंडेपछि विष्णुले तपाईंको रूप धारण गरी मलाई छल्न आएका थिए, तर मैले चिह्नेर निकै दिनसम्म कोठामा थुनिराखेकी थिएँ । पछि यौटा अनौठो भिक्षुक आएर माँग्दा विष्णुलाई दिई पठाएँ ।' यति आफ्नी स्त्रीको वचन सुनी जालन्धर रिसाई- 'हे प्रिये ! त्यस्तो हो भने म पार्वतीलाई नछली छाड्दिनँ । फेरि जान्छु' भन्दै जालन्धर घरबाट निस्कनु र शिवजीको आज्ञाले गएका नारद मुनि टुप्लुक्क पुग्नु एकसाथ भयो । अनि नारदजीले सोधे- 'हे जालन्धर ! तिमी कहाँ जान हिंडेका ?'

उसले भन्यो- 'म भिक्षा माँग्न हिंडेको हुँ ।' तब नारदजीले फेरि भने- 'हे जालन्धर ! मिथ्या कुरा किन भनिरहेका छौ ? तिमी जान लागेको मैले जानिसकें, पार्वतीलाई छल्न हिंडेका हौ । सुन-तिमीसित लडाइँ गर्न ब्रह्मादि सकल देवताहरू आउन तयार भई खबर दिन मलाई पठाएका हुन् । अब तिमी अन्त कतैतिर जानपट्टि नलागेर आफ्ना फौज र शस्त्रास्त्र लिई संग्रामको तयारी गर ।' यति नारदजीको कुरा सुनी 'त्यसो भए घरै फर्कन्छु' भनी आफ्नी पत्नीलाई नारदसित भएका सबै कुरा बुझाई-'अब म संग्राममा जान्छु, तिमी घरको सम्भार गरे' भनी हातमा त्रिशूल लिएर आफ्ना समस्त सेना जम्मा गरी देवताहरूसित लडाइँ गर्न कैलासतर्फ गयो । नादजीले कैलास पुगी जालन्धरसित भएको सारा कुरा शिवजीलाई बिन्ती चढाए । त्यसपछि महादेवले ब्रह्मा, विष्णु, इन्द्र, यम आदि सकल देवतालाई युद्ध गर्न जाओ भनी आज्ञा दिनुभयो । महादेवको आज्ञा पाउनासाथ समस्त देवताहरू नाना तरहका बाजा बजाई सिंहनाद गर्दै, प्रलयकालको मेघ झैं गर्जदै कैलासबाट हिंडे । बाटोमा दुवै तर्फका सेनाको

जम्काभेट भएर भयंकर संग्राम आरम्भ भयो । देवताहरूले बेसरी चिच्याई अनेकानेक शस्त्रास्त्र प्रहार गरे । तर तिनको प्रहारले जालन्धरलाई केही हानि गर्न सकेन । आफूले प्रहार गरेका शस्त्र-अस्त्रले शत्रुको केही हानि गर्न नसकेको देखेर देवताहरू मनमा दिक्क मानी आफाफ्ना शस्त्रास्त्र झिकी चुपचाप भए । तब वैकुण्ठनाथ विष्णु रिसाई पाञ्चजन्य शंख बजाई कौमोदकी गदा प्रहार गरे । त्यस गदाले जालन्धरलाई छुँदै छोएन । अनि देवराज इन्द्र रिसाई वज्र प्रहार गरे । त्यसले पनि केही गर्न सकेन । जालन्धरले नटेरी तृण-समान मानेर चुप लागिरह्यो । त्यति हुँदा पनि देवताहरूले शस्त्र प्रहार गर्न छाडेका थिएनन् । आखिरमा विष्णु भगवान्‌ले अब यस्तो चालले केही हुन सक्तैन भनी महादेवकहाँ गएर- 'हे जगदीश्वर ! हामीले जालन्धरलाई मार्न सकेनौं, तपाईं बिना त्यसलाई मार्न अरूको शक्ति पनि छैन । अब तपाईंले नै संग्राममा जानुपर्‍यो ।' यति विष्णुका वचन सुनी महादेव आज्ञा गर्नुहुन्छ- 'हे विष्णु ! जालन्धरकी स्त्री वृन्दाको पतिव्रता धर्मले गर्दा जालन्धरलाई कसैले पनि मार्न सक्तै-

न । अतः तिमी आफ्नो मायाले छोपी जालन्धरको रूप धारण गरी अन्तःपुरमा गएर वृन्दाको पतिव्रताधर्म नष्ट गराऊ । म गएर त्यस पापिष्ठलाई मार्दछु ।' यति शिवजीको आज्ञा सुनी विष्णु त्यहाँबाट बिदा भई तुरुन्त जालन्धरको रूप धारण गरेर बायाँ हातमा त्रिशूल लिई र दाहिने हातले डमरु बजाई आफ्नू मायाले छोपी अन्तःपुरमा जालन्धरको घर पुगे । भेषधारी जालन्धर आएको देखी वृन्दाले हात-पाउ धोइदिएर कोठामा लगेर आसनमा बसालेर सोधिन् - 'हे स्वामी ! महादेवसित युद्ध गर्न जानुभएको के गरेर आउनुभयो ?' त्यति सुनेर भेषधारी विष्णु आज्ञा गर्दछन् - 'हे प्रिये ! महादेवसितको युद्धमा थकाइ मारूँ भनी विश्राम गर्न आएको हुँ । भोक लागिरहेछ, केही खानेकुरा ल्याऊ ।' त्यति सुन्नासाथ वृन्दाले चौरासी व्यंजन तयार पारी भोजन गराइन् । अनि रात परेपछि वृन्दासँग अनेक तरहका वार्तालाप गरेर त्यसको पतिव्रता-धर्म नष्ट पारिदिए । रात बितेपछि जालन्धरको रूप छाडी आफ्नो स्वरूप चार बाहुमा शंख, चक्र, गदा, पद्म धारण गरी दर्शन दिए । त्यो देखेर वृन्दा रिसाई-'हे पापिष्ठ विष्णु !

तिमीले कपट गरेर मेरो पतिव्रता धर्म नष्ट गरिदियौ' भनिन् । अनि विष्णु आज्ञा गर्नुहुन्छ- 'हे वृन्दा ! जालन्धरलाई शिवजीले हिंजै मारिसके । अब तिमीले म वैकुण्ठको अधिपति भएको नारायण जस्तोलाई स्वामी पाएपछि तिमीलाई केको चिन्ता ? तिमी पत्याउन्नौ भने एकछिनमा समाचार पाउली' भनी नाना तरहसित वृन्दालाई बुझाउँदा भए ।

।।इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां वृन्दापतिव्रताधर्महरणं नाम सप्तदशोऽध्यायः ।।१७।।

काशी अन्नपूर्णा र सिद्धि विनायक (ढुण्डीराज)

# अथ अष्टादशोऽध्यायः

## नागिनी व्रतकृत-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि महादेवले विष्णुलाई बिदा दिई जालन्धरसित युद्ध गर्न लाग्नुभयो । महादेव र जालन्धरको भयंकर संग्राम भयो । वृन्दाको पतिव्रता धर्म विष्णुले हरण गरिसकेका हुनाले जालन्धर शक्ति-क्षीण भई महादेवसित युद्ध गर्न नसकी-आकाशमा गएर माया-युद्ध गर्न लाग्यो । महादेव पनि आकाशमै गएर युद्ध गर्न लाग्नुभयो । त्यसपछि जालन्धरको शक्ति क्षीण भएको जानी विष्णुले

महादेवले जालन्धरलाई मार्नुभएको

वृन्दाको सत्य डगाइसकेछन् भन्ने ठानी तेजिलो त्रिशूल लिई तीनै नेत्रबाट अग्निको ज्वाला निकाली

क्रोधपूर्वक जालन्धरको छातीमा प्रहार गर्नुभयो। त्यस त्रिशूलको चोटले जालन्धर मरी अन्तःपुरको चोकमा ठूलो शब्द गरेर पछारियो। त्यो चर्को शब्द सुनी वृन्दाले केको शब्द हो भनी हेर्न जाँदा आफ्नै स्वामी जालन्धर मरेको देखी अनेक प्रकारले विलाप गर्दै रुन लागिन् - 'हे स्वामी ! मलाई यस्तो अवस्थामा एक्ली पारेर कहाँ जानुभयो ? पापिष्ठ विष्णुले छल गर्दा तपाईंको यो गति भयो र मेरो यो अवस्था भयो । तपाई-बिना म प्राण राख्न सक्तिनँ । तपाईं जहाँ जानुभयो म पनि उहीं जान्छु' भन्दै केश फिंजाई विष्णुको मुखमा हेरेर भन्न लागिन् - 'हे पापिष्ठ विष्णु !

वृन्दाले आफ्नू स्वामी जालन्धर मरेको देखेर विष्णुलाई श्राप दिएकी

तिमीले छली मेरो पतिव्रता धर्म नष्ट गरिदिनाले मेरा स्वामीको यो गति भयो । अब म तिमीलाई

श्राप दिन्छु- झार हुनुपरोस् १, घाँस हुनुपरोस् २, कल्पवृक्ष भएर रहनुपरोस् ३, ढुङ्गा भएर रहनुपरोस् ४। यति चार थोक श्राप दिएँ भनी आफ्ना स्वामीसित सती गई वृन्दाले देह त्यागिन् ।

हे अगस्त्य मुनि ! पतिव्रताको श्राप विष्णुलाई लाग्यो र झार हुनुपरोस् भनेकोमा 'तुलसी' भएर रहनुपऱ्यो । घाँस हुनुपरोस् भनेकोमा 'कुश' भएर रहनुपऱ्यो । कल्पवृक्ष हुनुपरोस् भनेकोमा 'पीपल' भएर रहनुपऱ्यो । ढुंगा हुनुपरोस् भनेकोमा 'शालिग्राम' भएर रहनुपऱ्यो । यसैले तुलसी, कुश, पीपल र शालिग्राम नारायण-रूप हुन् भनेर सबैले पूजा गरेको कारण यही हो । हे मुनि ! पतिव्रता धर्म भनेको ठूलो धर्म हो । त्यसपछि वृन्दाको श्राप मोक्ष गर्न पृथ्वी-तलमा जान्छु भनी विष्णु भगवान् पृथ्वीमा शालिग्राम, तुलसी, कुश र पीपल भएर रहनुभयो ।

## *शालिग्राम—महिमा*

हे अगस्त्य मुनि ! 'ढुङ्गा हुनुपरोस्' भन्ने वृन्दाको श्रापले नारायण विष्णु भगवान् आफ्ना कुनै अंशले शाली नदीको बगरमा आएर शिला भएर रहनुभयो, तिनै शिलालाई मानिसहरू 'शालिग्राम' भन्दछन् ।

हे अगस्त्य मुनि ! जो जन सधैँ शालिग्रामरूप नारायणको श्रद्धाभक्तिपूर्वक पूजा गर्ने गर्दछन्, अनि निरन्तर 'ॐ नमो भगवते वासुदेवाय' यो ब्राह्न अक्षरी मन्त्र या 'ॐ वासुदेवाय नमः' यो आठ अक्षरी मन्त्र जपिरहन्छन् वा दिनहुँ एक सय आठपल्ट बिहान–बिहान जप्ने गर्दछन्, त्यस्ताले मरेपछि यमलोक वा यमराजका दूतहरूलाई देख्तै देख्तैनन्, किनकि ती भक्तहरू सरासर विष्णुलोक जान्छन् । अथवा मरेपछि मुक्ति चाहनेहरूले चक्र बनेको शालिग्राम–शिलाचक्रमा दिनहुँ 'ॐ वासुदेवाय नमः' भन्दै चन्दन र फूलले विष्णुको पूजा गर्ने गर्नू । किनकि त्यो शिलाचक्रमा सारा पापलाई नाश गर्ने, नित्य पूजा गर्नेहरूलाई पुण्य दिने, मरेपछि मुक्ति दिलाउने त्यो शालिग्रामशिला त्यस्ता शक्तिसम्पन्न विष्णुको वासस्थान हो ।

शालिग्राम

शालिग्रामशिलाको चक्रमा जो जन प्रतिदिन पूजा गर्ने गर्छ, त्यसले प्रत्येक दिन एक हजार राजसूय यज्ञ गऱ्यो भन्ने ठान्नुपर्दछ । ती जान्नयोग्य अविनाशी परब्रह्म विष्णुलाई नित्य नमस्कार गर्दा जो पुण्य प्राप्ति हुन्छ, मनुष्यहरूलाई त्यही पुण्य शालिग्रामशिलाको नित्य

पूजा गर्नाले पनि प्राप्त हुन्छ । जस्तै; ठूल्ठूला काठमा आगो रहन्छ र कुनै मौकामा उसको शक्ति प्रकट हुन्छ, त्यस्तै प्रकारले हरि भगवान् सर्वव्यापी हुनुहुन्छ तापनि शालिग्राममा उहाँको शक्तिप्रकाश प्रकट हुन्छ । हे अगस्त्य मुनि ! जसले ठूला–ठूला पाप गरेका छन्, जसलाई शुभकर्मको अनुष्ठान गर्ने अधिकार छैन, त्यस्ताले पनि शालिग्रामको पूजा गर्ने गरे भने ती जन नरक जाँदैनन् । विष्णु भगवान् लक्ष्मीमा रमण गर्दा पनि त्यति प्रमुदित हुनुहुन्न, अनि आफ्नू पुर वैकुण्ठमा पनि त्यति रमाउनुहुन्न, जति शालिग्राम-शिलाचक्रमा सदा उहाँ रमाउनुहुन्छ । जुन व्यक्तिले शालिग्रामको शिलामा बनेको चक्रमा हरिको पूजा गर्छ, मानौं, उसले अग्निहोत्रीको आचरण गर्दै सागर–पर्यन्तको भूमि दान गऱ्यो भन्ने ठाने हुन्छ। मनुष्यले एकैपल्ट पनि शालिग्रामशिलाको पूजा गर्छ भने त्यसका सबै पापहरू, जसरी सूर्योदय भएपछि अन्धकार नाश हुन्छ, त्यसै गरी नाश हुन्छन् ।

हे अगस्त्य मुनि ! जसले शालिग्राममा बनेका बाह्रओटा शिलाचक्रको विधिपूर्वक पूजा गरेको छ, अब म तिमीलाई त्यसको प्रभाव बताउँछु,

मन लाएर सुन-सुवर्णनिर्मित कमलहरूद्वारा बाह्र कल्प-पर्यन्त बाह्रकोटि शिवलिङ्गको पूजा गर्नाले जो फल मिल्छ, त्यो फल बाह्रओटा शालिग्राम-शिलाको पूजा गर्नाले एकै दिनमा मिल्छ । फेरि जो व्यक्ति भक्तिपूर्वक एक सय शालिग्राम-शिलाको पूजा गर्दछ, त्यो व्यक्ति हरिको लोक वैकुण्ठधाममा चिरकालसम्म बसेर पृथ्वीतलमा जन्मी चक्रवर्ती राजा हुन्छ । काम-क्रोध-लोभले व्याप्त भएको जो कोही सज्जनले पनि शालिग्रामशिलाको पूजा गर्ने गर्‍यो भने त्यसका प्रभावले त्यो पनि हरिको लोक वैकुण्ठधाममा जान्छ । जो मनुष्य सधैँ शालिग्राममा गोविन्दको पूजा गर्दछ, त्यस्तो जन निश्चय नै प्रलय नभएसम्म अधोगतिमा प्राप्त हुँदैन । मनुष्यहरू विना-तीर्थ, विना-दान, विना-यज्ञ, विना-बुद्धि पनि शालिग्रामशिलाको पूजा गर्ने गर्नाले मुक्तिमा प्राप्त हुन्छन् । शालिग्राममा हरिको पूजा गर्ने जन उग्र पापी नै भए पनि पछि उसको न नरकवास, न गर्भवास हुन्छ, न त उ कीरा-फट्याङ्ग्रा आदि कुत्सित योनिमा नै जन्मन्छ अर्थात् त्यस्तो तिर्यक् योनि यानि तेर्सो शरीर हुने योनिमा जान्छ । दीक्षा-विधान र मन्त्र जान्नेवाला जो जन सधैँ शालिग्राममा विष्णुको पूजा गर्दछ भने

त्यो जन वैष्णवधाममा जान्छ । शालिग्रामशिलाको जलले जो आफूलाई अभिषेक गर्दछ, मानौं, उसले सबै तीर्थहरूमा न्वाहेको हुन्छ र सबै यज्ञहरूमा दीक्षित भएको हुन्छ । गङ्गा-गोदाबरी-रेवा आदि जो मोक्ष दिने नदीहरू छन्, ती सब तीर्थ-सहित भएर शालिग्रामशिलाको जलमा निवास गर्दछन् । तसर्थ, नाना प्रकारका नैवेद्यहरूले, फूलहरूले, दीप हरूले, चन्दनहरूले र स्तोत्र-पाठ-बाजागाजा-गीत आदिहरूले शालिग्राम शिलाको पूजा गर्नुपर्दछ ।

कलियुगमा जो मनुष्य भक्तिपूर्वक शालिग्राम-शिलाको उक्त विधानले पूजा गर्दछ, त्यो मनुष्य हज्जारौं करोड़ वर्षसम्म हरिको निकटमा रमाउँदै रहन्छ । आफूले दर्शन गरिएका, पूजा गरिएका, स्तुति गरिएका करोड़ौं शिवलिङ्गहरूले जो फल मिल्छ, त्यो फल यौटै पनि शालिग्रामशिलामा गरिएको दर्शन, पूजन, स्तवनले प्राप्त हुन्छ । जो मनुष्यहरू शालिग्रामशिलाबाट उद्भव विष्णुलिङ्गमा एकपल्ट पनि पूजा गर्दछन् ती जन अध्यात्मज्ञान-रहित भएका भए पनि मुक्ति प्राप्त गर्दछन् । शालिग्राम-शिलारूपी केशव भगवान् जहाँ रहनुहुन्छ, त्यहीं यक्ष-देवता-सिद्ध

र चौथै भुवन रहन्छन् । जो मनुष्य शालिग्राम-शिलाको अगाडि रहेर पितृहरूको श्राद्ध गर्दछ, त्यसका पितृहरू तृप्त भएर सय कल्पसम्म स्वर्गमा निवास गर्दछन् । जो मनुष्य नित्यप्रति शालिग्राम-शिलाको जल पिउँछन्, त्यस्ताले हजारौँपल्ट पञ्चगव्य आचमन गर्नाले के प्रयोजन ? अर्थात् क्यै प्रयोजन छैन । जुन ठाउँमा शालिग्रामशिला रहन्छ, त्यहाँबाट चारैतिर तीन योजन अर्थात् बाह्र कोशसम्म त्यो स्थान तीर्थसमान मानिन्छ । त्यहाँ गरिएको दान, होम सबै करोड़गुना अधिक फलदायक हुन्छ । शालिग्रामशिलाको जल एवं गोमतीचक्रको जल यी दुवै जल मिलाएर जो मनुष्य रोजै पिउँछ र शिरमा-शरीरमा छर्कन्छ ता त्यसको शरीर नै चक्रले चिह्नित भएको जस्तै हुन्छ, यमसा कुनै संशय छैन । जो चक्र संसारमा गुप्त रहन्छ, त्यो चक्र यमलोकका धर्मराजलाई छोडेर अरू कसैले पनि देख्तैन । हरिभक्तहरूको चरणोदकको सेचनले यमराज भयभीत रहन्छन् । यसैकारण, वैष्णव हरूको उत्तम घरमा जान आफ्ना दूतहरूलाई निषेध गरेका छन्।

जो कोही नदीहरू सोझै समुद्रमा मिल्नेवाला छैनन्, माघमासमा तिनमा स्नान गर्नाले त्रिरात्रव्रतको

फल मिल्छ । सोझै समुद्रमै मिसिने नदीहरूमा स्नान गर्नाले एकपक्षे व्रतको फल मिल्छ । समुद्रमै स्नान गर्नाले एकमहीने व्रतको फल मिल्छ । गोदाबरीमा स्नान गर्नाले छः महीना व्रत गरेको फल मिल्छ । गङ्गामा स्नान गर्नाले एक वर्ष व्रत गरेको फल मिल्छ। तर शालिग्रामशिलारूपी भगवान्को चरणोदकले स्नान गर्नाले बाह्र वर्ष व्रत बसेको फल मिल्छ ।

यदि माघ महीनामा स्नानका लागि शालिग्रामको पवित्र जल मिल्यो भने करोड़ौं तीर्थको सेवाले क्यै प्रयोजन छैन । जो मनुष्य आमाका दूधका साथमै मिलाएर शालिग्रामशिलाको जल एक थोपो मात्रै पनि पिउँछ भने त्यो मनुष्य मोक्ष हुन्छ। शालिग्राम-शिलाको नजीकको एक कोश वरिपरिको भूमिमा कीरो पनि मऱ्यो भने त्यो पक्कै वैकुण्ठ लोकमा जान्छ । जो मनुष्य शालिग्राम-शिलाको उत्तम चक्र दान गर्छ, उसले पर्वत औ जङ्गल-सहितको भू-मण्डलको दान गरेको फल पाउँछ । जो जन शालिग्राम-शिलाको मोल लाउँछ, बेच्छ अथवा बेच्ने राय दिन्छ अथवा जो मनुष्य उसको जाँच-बुझ गर्छ, ती सबै नै मरेपछि प्रलय-पर्यन्त नरकमा जाकिन्छन् ।

यसकारण, शालिग्राम-शिलाको किनबेच गर्नु हुँदैन । पापसँग डराउने मान्छेहरूले सधैँभरि सारा पाप नाश गर्ने वासुदेव भगवान्को स्मरण गर्नुपर्छ । इन्द्रिय-दमनपूर्वक घोर जङ्गलमा तपस्या गर्नाले मनुष्य जुन फल पाउँछ, त्यो फल गरुड़ध्वज विष्णुको स्मरण गर्नाले नै पाउँछ । अज्ञानले वशीभूत भएर जानी-नजानी धेरै प्रकारको पाप गर्ने मनुष्यले पनि सारा पाप हर्ने हरिलाई सम्झेर नमस्कार गऱ्यो भने त्यो जन नरक जाँदैन । पृथ्वीमा जति तीर्थ छन्, अनि जति पुण्यस्थानहरू छन्, विष्णुको नामको कीर्तनले नै ती सबैमा गरिएको पुण्यफल प्राप्ति हुन्छ । शार्ङ्गधनुर्धारी, शरणागतवत्सल विष्णु भगवान्को शरणमा जो व्यक्ति पर्दछन्, तिनीहरूले न यमराजलाई देख्नुपर्छ, न त तिनीहरू नरकै जान्छन् ।

नारी जातिहरू त धोका दिई झुक्क्याई परनारीको सतीत्व डगाउने विष्णुको त्यो भडुवा अंश नै शालिग्राम भएको हो, तसर्थ, नारीजातिमात्रको अपमान गर्ने त्यो अंश हो भन्ने ठानी शालिग्राम-शिलालाई छुँदै-छुदैनन् र पूजा पनि गर्दैनन् । त्यस्ताले त केवल शालिग्राम धोएको वा शालिग्राम चोभेको जललाई नै उनै साक्षात् निर्दोष अंशका

त्रैलोक्यनाथ विष्णुको चरणोदक मानी 'ॐ नमो वासुदेवाय' भन्दै अचाएर शिरमा दिनहुँ छर्कने गरे पनि अथवा प्रत्येक एकादशीको व्रत बस्ने गरे पनि, तथा बाह्रै महीनामा आउने त्यस-त्यस पूर्णिमाको र मलमासमा पर्ने मलमासकै पूर्णिमाको कथा सुन्ने गरे मात्रै पनि सधैँ शालिग्रामको पूजा गरेको पुण्यफल पाउँछन् ।

## *तुलसी—महिमा*

हे अगस्त्य मुनि ! 'घाँस हुनुपरोस्' भन्ने सती वृन्दाको सरापले आफ्ना एक अंशले तुलसी भएका तुलसीका पातहरूले जो मनुष्य हरिको पूजा गर्दछ, त्यो मनुष्यलाई, —पानीमाथि पानीमै रहेको कमलको पातलाई पानीले नभिजाएझैँ-, कुनै पापले पनि छुन सक्तैन । एक तोला सुन या चार तोला चाँदी दान गर्नाले जो फल प्राप्त हुन्छ, त्यो फल कुनै पनि एकादशीको दिन तुलसी-पत्रले हरिको पूजा गर्दा प्राप्त हुन्छ । एकादशीका दिन तुलसीपत्रले पूजा गर्दा भगवान् विष्णु जस्तो प्रसन्न हुनुहुन्छ, त्यस्तो प्रसन्नता रत्न-मणि-वैदूर्यमणि अनि मूगा आदिले पूजा गर्दा पनि प्रसन्न हुनुहुन्न । एकादशीको दिन जुन जनले तुलसीका मञ्जरीहरूले केशव भगवान्-

को पूजा गर्दछ, त्यसले जन्मदेखि गरेका पापका घुरान सबै बढार्दछ । अनि जन्मजन्मान्तरका दश हजार वर्षदेखि गरि-आएका आफ्ना सारा पापकन खाक गरिदिन्छ । सधैँ दर्शन गरिएकी, सधैँ स्पर्शन गरिएकी, सधैँ ध्यान गरिएकी, सधैँ कीर्तन गरिएकी, सधैँ स्तुति गरिएकी, स्वयं रोपिएकी, स्वयं सेचिएकी, सधैँ पूजा गरिएकी र सधैँ ढोगिएकी तुलसी कल्याणकारी हुन्छिन् । यी उक्त नौ प्रकारले जो जन प्रतिदिन तुलसीको भक्ति गर्दछन्, त्यस्ता जन हजारौँ करोड़ युगसम्म हरिको घर वैकुण्ठमा वास गर्दछन् । हे अगस्त्य मुनि ! रोपिएकी तुलसीले जति जरा फैलाउँछिन्, त्यति हजार युगसम्म रोप्नेको पुण्य फैलाउँछिन् अर्थात् बढाउँदछिन् । हे अगस्त्य मुनि ! जुन जनद्वारा रोपिएको तुलसी जबसम्म आफ्ना हाँगाबिगा, शाखा-प्रशाखाहरूले र उनका बीयाँ, पुष्प र पत्रले पृथ्वीतलमा बढिरहन्छन्, ती पुरुषका कुलमा जो-जो जन्मिएका छन्, जो-जो पछि जन्मिनेछन् र जो-जो बितिसके ती सब जनको दुई हजार कल्प वर्षसम्म हरिको धाममा अर्थात् वैकुण्ठमा वास हुन्छ ।

तुलसी

हे अगस्त्य मुनि ! झाङ्का झाङ तुलसीको झाड़ी रोप्नेले यमराजको दर्शन गर्नुपर्दैन । किनकि तुलसीको बूटो सबै पापलाई नाश गर्ने, चिताएको कल्याणकारी कुरो पुऱ्याउने, पुण्य दिने हुन्छ । जुन घरमा झाङिएको तुलसीको मठ रहन्छ, त्यो घर पुण्यतीर्थ-समान हो, त्यहाँ यमराजका दूतहरू जाँदै-जाँदैनन् । जो जन आफ्ना घरको आङ्नमा तुलसी रोप्तछन्, ती जन त्यस तुलसीको बोटमा जति बीज र तुलसीदल हुन्छन्, अनि ती बीजका सन्तान-दर्सन्तान फैलिदै चलिरहन्छन्, त्यति हजार वर्षसम्म स्वर्गमा बस्तछन् । तुलसीको बास्ना सुँघेर प्रसन्न मन भएका पितृहरू गरुडमा चढेर चक्रपाणि विष्णुको भवन वैकुण्ठमा जान्छन् । नर्मदाको दर्शन, गङ्गाको स्नान तथा तुलसीका झाड़ीको स्पर्शन यी तीनै अर्थात् यी तीनैको पुण्य उत्तिकै कहिएको छ । तुलसी रोप्नाले-हुर्काउनाले-सेच्नाले-दर्शन गर्नाले मात्रै पनि मनुष्यहरूले आफ्ना मन-वचन-शरीरले सञ्चय गरिएको पापलाई डढाउँछ अर्थात् विनाश गर्छ । जो जन तुलसीका मञ्जरीहरूले नारायण हरिको पूजा गर्दछ, त्यो जन मरेपछि मुक्त हुन्छ, उसले फेरि गर्भवासको ओहोर-दोहोर गर्नुपर्दैन । पुष्कर आदि तीर्थहरू

तथा गङ्गा आदि नदीहरू अनि वासुदेव आदि देवताहरू सबै नै जो तुलसीको बोट रोपेर त्यसका पातले विष्णु भगवान्को पूजा गर्दछ, त्यो त्यस्तो जन जहाँ भगवान् चतुर्बाहु विष्णु रहनुहुन्छ, अन्तमा प्रसन्नतापूर्वक उहीँ रहन पाउँछ । यसकारण, आफ्नू सदा कल्याण चाहने नर-नारीले आफ्नै घर-आङ्गनमा गहिरोसम्म जरा पुग्ने गरी मलिलो माटो भरी बनाएको मठमा तुलसी रोपी तिनै तुलसीको सधैँ पूजा गर्नुपर्दछ र पूजाको अन्तमा भक्तिपूर्वक यो स्तुति गर्नुपर्दछ अनि नम्रतापूर्वक ती तुलसीलाई ढोग्नुपर्दछ-

> या दृष्टा निखिलाऽघसंघशमनी, स्पृष्टा वपुः- पावनी ,
> रोगाणामभिवन्दिता निरशनी, सिक्ताऽन्तकत्रासिनी ।
> प्रत्यासन्नविधायिनी भगवतः कृष्णस्य साऽऽरोपिता ,
> न्यस्ता तच्चरणे विमुक्तिफलदा तस्यै तुलस्यै नमः ॥

अर्थात् जसको दर्शनले समस्त पाप-समूह शान्त हुन्छ, जसलाई छुनाले शरीर पवित्र हुन्छ, जसलाई ढोग्नाले सारा रोगहरू नाशिन्छन्, जसको जल मस्तकमा सेचन गर्‍यो भने यमराज पनि डराउँछन्, जसको पत्र शिरमा चढायो भने भगवान् कृष्णको अत्यन्त नजीकै बस्न पाउने गराउँछिन्, भगवान्का चरणकमलमा चढायो भने मुक्ति दिलाउँछिन्, त्यस्ती

तुलसीलाई नमस्कार छ ।

## कुश-महिमा

'झार हुनुपरोस्' भन्ने सती वृन्दाको सरापले कुशरूपमा झार हुनुभएको कुशमा विष्णुका अधिकांश शक्तिशाली शक्ति रहेका छन् । भाद्रकृष्ण औँसी अर्थात् कुशेऔँसीका दिन जरैसमेत उखेलेर राखेको कुश फेरि अर्को कुशेऔँसी नआएसम्म पवित्रै रहन्छ, अरू दिन उखेलेको चाहिँ त्यसै दिनभरि मात्र पवित्र रहन्छ । कुश अत्यन्त पवित्र र पुण्यदायी झार हो । काँचो दूधमा दूधको मात्रा अनुसार दुई-चार बोट हरियो कुश हालेर राखिदियो भने त्यो दिनभरि त्यो दूध फाट्तैन । ग्रहण लागेको वेलामा घरमा राखेको पानीमा कुश हालेर राखिदियो भने ग्रहण लाग्दा हुने वातावरणको दूषित दोष त्यस पानीमा पर्दैन । समस्त देवकार्यमा तथा समस्त पितृकार्यमा अनि वेदमन्त्र र चण्डीमन्त्र जस्ता पवित्र मन्त्रहरूले कुनै वस्तुलाई मन्त्रने कार्यमा एवं वेदका मन्त्रहरू पढेर गरिने समस्त संस्कार एवं हवन कार्यहरूमा अनि प्रतिज्ञा गर्ने काममा,

कुश

दान गर्ने काममा, संकल्प गरिने काममा, दिएको दियै गरिने महादानहरूमा कुश नभै हुँदैन । तिल-जौ-जल यी तीन शक्तिसहितका ब्रह्मा-विष्णु-महेशस्वरूप तीन टुक्रा कुश हातमा लिएर गरिएको समर्पण कार्य उसैले वा उसका सन्तानले फर्कायो वा खोस्यो भने त्यस्तो खोस्ने जनको अप्ताली नै पर्छ या दुर्गति हुन्छ । कुश छोएर वा लिएर झुटो बोले या किरिया हाले त्यस्तालाई कोढ निस्कन्छ । वेदका मन्त्रहरूले मन्त्रेको कुशले मात्रै पितृहरूभाठौं पिण्ड- पानीको सारतत्त्व र समाचार पुऱ्याउँछ, देवताहरूलाई हविको भाग दिलाउँछ, मन्त्रिएको वस्तुमा विष्णुशक्ति-सम्पन्न गराउँछ अर्थात् हरेक पवित्र कार्यलाई सुसम्पन्न पार्दछ । कुश चोभेको जललाई विष्णुको चरणोदक नै मानिन्छ, यसैउसले कुशले जल छर्किएर अभिषेक गरिन्छ, अछूत कसैले छोइएर वा छोएर अशुद्ध भएको वस्तुलाई कुशजलले शुद्ध पवित्र पारिन्छ । यसकारण, सबैले कुशलाई साक्षात् विष्णुस्वरूप नै मान्दछन् र मान्नु पनि पर्दछ । पहिले-पहिलेका राजाहरूले देवी-देवताको पूजा-आजा चलाउन कुश समाती दान गरेको भूमि पछि-पछिकाले हड्पेर भोग गरे अथवा रैकरमा गाभे भने त्यस्ताहरूको पनि

चालीस वर्षभित्रै चिल्लीबिल्ली बिचल्ली हुन्छ । तसर्थ, कुशको अपमान गर्नु साक्षात् विष्णुको नै अपमान गर्नु जस्तै हुन्छ । किनकि प्रत्येक वनस्पतिमा सधैं- कुनै-न-कुनै गुण अवश्य रहेको हुन्छ त कुशमा साक्षात् विष्णु नै रहनुभएको हुन्छ । त्यसैले तिल-जौ-जलसहितको कुश पक्रेर संकल्प गर्दा पहिले 'हरिः ॐ तत्सत्' भनिन्छ । अर्थात् ॐ माने सत्त्व-रज-तम मिलेको शक्ति ॐ नै हरि यानि विष्णु हो, तत् माने त्यो विष्णु नै सत् यानि सत्य वस्तु हो । तसर्थ, त्यो कुशरूप विष्णुलाई समातेर म यो संकल्प गर्दै छु । त्यसरी संकल्प गरेको वस्तु जो हड्पन्छ, त्यो अवश्य नाशिन्छ ।

## पीपल–महिमा

सती वृन्दाको 'रूख हुनुपरोस्' भन्ने सत्य श्रापले गर्दा आफ्नू कुनै एक अंशले विष्णु भगवान् पीपलको रूख हुनुभयो । तसर्थ, पीपलको रूखलाई मान्छेहरू साक्षात् विष्णुरूप जस्तै ठानेर नर वा नारी सबैले प्रयत्नपूर्वक प्रत्येक

पीपल

शनिश्चरवार मात्र पूजा गर्ने गरून्, जीवनमा वार-

वार नसके पनि एकपल्ट त शनिवारको दिन-शनिवारको दिन पारेर यथाशक्ति गरी पीपलको प्रदक्षिणा एक लाख अवश्य पुऱ्याऊन् ।

पीपलको फल पाकेको महीनामा वन्ध्या नारीले यदि शनिवारको दिन पारी पीपलको रूखमनि विधिपूर्वक राधा-दामोदरको यानि लक्ष्मी-नारायणको पूजा गरून् र राधा-दामोदरको स्वरूप मानेर ब्राह्मण-दम्पतीलाई श्रद्धा-भक्तिपूर्वक यथेष्ट भोजन गराई दक्षिणा दिइसकेपछि नबोलीकन एकदम मौनतापूर्वक आफू पनि भोजन गरून् । त्यसपछि आउने कुनै दिन पनि पर सरेको चौथो रात बितेको भोलिपल्टको दिनमा गाईको दूधमा पीपलका पाकेका फल दुई तोला जतिको खीर पकाएर त्यो दिन त्यो खीर मात्र खाऊन् त एकदम वन्ध्या नारी पनि छोरै पाउने गरी सीधा अङ्गप्रत्यङ्गका पतिसंभोगले गर्भिणी हुन्छे हुन्छे भने अरू छोरी छोरी मात्र पाउनेको त कुरै छैन ।

त्यस्तै प्रतिशनिवार पीपलको पूजा गरेर फलामको दक्षिणा चढाउनाले साढेसातीका शनि-दशा हुनेलाई शनिश्चरले पिर्दैन । अनि पीपलको पूजन-दर्शन-स्पर्शन-प्रदक्षिणा यी सबै शनिश्चरवार मात्रै गर्नुपर्छ । किनकि पीपलको रूखमा मात्रै शनिश्चरले

टिक्ने ठाउँ पाएकाले अरू वार गर्‍यो भने शनि रिसाउँछ र त्यो पूजन आदि गर्ने मनुष्य सदा महादरिद्र रहन्छ । किनकि पीपलको वृक्षमा शनिश्चरको पनि वास छ र अरू-अरू भूत-प्रेत, पिशाच-राक्षस, शाकिनी-डाकिनी आदिको वास पनि छ । तिनीहरूलाई त्यहाँ बस्नका लागि भगवान् विष्णुले नै अभय दान दिनुभएको छ । यसैले पीपलको बोट-नजीकैको घरमा पिशाचदेखि डराउने पितृहरू जाँदैनन् । प्रातः-मध्याह्न-सायम्-आधारातमा भूत-प्रेत-पिशाच नाच्ने हुनाले 'त्यो लाग्छ' भनेर मानिसहरू पीपलको बोट भएको ठाउँमा त्यतिखेर जाँन्दैनन् र केटाकेटीलाई पनि जान दिदैनन्, निग्रानी राख्छन् । यसैकारण, भूतप्रेतादिको आश्रयस्थान भएको पीपलको रूख काट्नाले या उसको दाउरा बाल्नाले त्यो काट्ने वा बाल्ने व्यक्तिको अप्ताली नै पर्छ, किनकि पीपलको वृक्ष भूत—प्रेतादिको निवासस्थान हो र वृन्दाका श्रापले पिरिएका साक्षात् विष्णुको स्वरूप नै हो ।

हे अगस्त्य मुनि ! त्यसरी वृन्दाको सत्य डगाउने काम सकी शिवजीसँग बिदा भई विष्णु भगवान् वैकुण्ठधाम गएपछि शिवजी आफ्नू काम फत्ते

पारी हर्षले साँढेमा चढी सकल देवता अघि-पछि लगाई अनेक खुशीका बाजा बजाई, अप्सराले नाची, गन्धर्वले गाना गरी, पुष्प-वृष्टि गर्दै कैलासमा प्रवेश गर्नुभयो। अनि प्रमथगणसहित शिव-शक्ति-स्वरूपले रहनुभयो । त्यसपछि सबै देवताहरू महादेवसित बिदा माँगेर आफाफ्ना आश्रममा गई आनन्दपूर्वक रहन लागे ।

हे अगस्त्य मुनि ! अब पातालका कुरा कहन्छु, तिमी ध्यानपूर्वक सुन-पार्वतीको आज्ञाले अश्वत्थामा ऋषि सप्त-पातालको मूल रसातलमा पुगे । कस्तो पाताल भने-सूर्यको प्रकाश झैं प्रकाशमान भएको, अनेक प्रकारका रत्नहरू जडेर बनाइएको सुवर्णको पुरीमा असंख्य सम्पत्ति भएका शेषनाग, तक्षकनाग, कर्कोटकनाग, पद्मनाग, शंखनाग, कुलिकनाग र करुणनाग बसेका र नागिनीहरू पनि हीरा-मोती, मणि-माणिक्य आदिका गहना एवं उत्तम-उत्तम वस्त्रालंकार पहिरी ऊभन्दा ऊ राम्री, ऊभन्दा ऊ राम्री भएर बसेका त्यस्तो स्थानमा पुगेपछि अश्वत्थामाले- 'हे शेषनाग ! पार्वतीको आज्ञाले श्रीस्वस्थानी परमेश्वरीको व्रत गराई जो दुःखी छन्, जो दरिद्री छन्, तिनको उद्धार गर्न म यहाँ आएको हुँ । यहाँ कोही दुःखी छन् कि ?' भनी

सोधे । अश्वत्थामाको वचन सुनी शेषनागले भने- 'हे ऋषे ! यहाँ उस्ता दुःखी र दरिद्री कोही पनि छैनन् । त्यहाँ त्यस वनको नगीचै शंखचूडनाग, रत्नचूड़नाग, कृपादत्तनाग र धार्तराष्ट्रनागको घर छ । तिनका स्त्रीहरू साह्रै कष्टमा छन् । त्यहीं गएर सुध्याऊ ।' यति शेषनागले भनेपछि अश्वत्थामा तिनै नागिनीहरूकहाँ गए । त्यहाँ शंखचूड़नागकी स्त्री हीरावती, रत्नचूड़नागकी स्त्री रत्नावती र कृपादत्तनागकी स्त्री मृगावती एवं धार्तराष्ट्रनागकी स्त्री मदनावती थिए । यति ती नाग-नागिनी परस्पर अनन्य प्रीतिले बस्दा दैव-संयोगले दुःख पाई घरमा बस्न नसकी ती चारै जना नागहरू परदेश गएका रहेछन् । अनि नागिनीहरू पनि पति परदेश गएपछि, चारै जनाले सल्लाह गरी घर छाडेर वनमा बसी दुःखका दिन बिताउन लागेका रहेछन् । ती नागिनीहरू दुःखमा परे पनि महासत्यवादिनी थिए । नागहरू परदेश लागेको बाह्र वर्ष बित्दा पनि नागहरूले नागिनीहरूको र नागिनीहरूले नागहरूको केही समाचार पाउन सकेका थिएनन् । अश्वत्थामा ऋषि त्यस्ता दुःखका सिन्धुमा डुबिरहेका ती नागिनीहरूलाई हपार्दै उहीँ पुगे । ती नागिनीहरूले

सुनेर 'को हपार्दछ' भनी गुफाबाट निस्केर हेरे। अनि अश्वत्थामा ऋषिलाई देखेर सोधे-'हे अश्वत्थामा ऋषि ! आज हामी पापिनी, दुःखिनीका घर के कामले आउनुभयो ?' तब अश्वत्थामा भन्दछन् -'हे नागिनी हो ! पार्वतीको आज्ञाले श्रीस्वस्थानी परमेश्वरीको व्रत गराई जो दुःखी छन्, जो दरिद्री छन्, जसका पुरुष छैनन्, जो सन्तानहीन छन् तिनको उद्धार गर्न आएको हुँ ।' यति अश्वत्थामाको वचन सुनी नागिनीहरूले मनमा आनन्द मानी-'हे ऋषीश्वर ! हामी दुःखी पनि छौँ, दरिद्री पनि छौँ, पापी पनि छौँ, हाम्रा सन्तान पनि छैनन्, पुरुष पनि छैनन् । अतः हामीलाई त्यो व्रत अवश्य गराउनुहवस्' भनी नागहरू परदेश गएको र आफूले दुःख पाएको सबै विस्तार गरिसकी आदरपूर्वक उनलाई आसनमा बसाले । अनि अश्वत्थामा भन्दछन् -"हे नागिनी हो ! ध्यानपूर्वक सुन-सत्ययुगमा हिमालय पर्वतकी पुत्री पार्वतीले श्रीमहादेव स्वामी पाउन भनी श्रीस्वस्थानी परमेश्वरीको व्रत गरेको विधि भन्दछु-पौषशुक्ल पूर्णिमादेखि हात-गोड़ाका नङ काटेर स्नान गरी पवित्र भई, एकभक्त रही, एकचित्त गरी मेरो फलानू कामना सिद्ध हवस् भनी नित्य मध्याह्न

कालमा श्रीस्वस्थानी परमेश्वरीको पूजा गर्नू र उनैको कथा सुन्नू । माघशुक्ल पूर्णिमाको दिन १०८ रोटी, १०८ अक्षता, १०८ बेलीपुष्प, १०८ यज्ञसूत्र, १०८ पान, १०८ कुड्का सुपारी, जौ, तिल, फल-फूल आदि सबै एक सय आठ एक सय आठ, सगुन समेत नाना उपचार तयार पारेर आर्सीमा ॐकार लेखी गंगाजलले स्नान गराउनू र श्रीखण्ड, रक्तचन्दन, सिन्दूर, अबीर, पुष्पमाला चढाई धूप-दीप, नैवेद्य, वस्त्र, भेटी, अर्पण गर्नू । यसरी पूजा सकेर अर्घ्य दिनू । अनि प्रसाद झिकेर अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ पुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुन-समेत आफ्ना पुरुषलाई दिनू, पुरुष नभए छोरालाई र छोरा नभए मीत छोरालाई तथा मीतछोरा पनि नभए 'मेरो फलानू कामना पूर्ण हवस्' भनेर गंगामा बगाउनू र सय रोटी आफूले फलाहार गर्नू, अनि रात्रिमा जाग्राम बस्नू । यति गरेपछि तिमीहरूको दुःख नाश होला । यसमा अन्यथा नमाने ।''

यति अश्वत्थामाले भनेको सुनी नागिनीहरू खुशी भई भन्न लागे - 'हे अश्वत्थामा ऋषि ! हामी स्त्री जातिलाई त्यस्तो ज्ञान कहाँबाट प्राप्त हुनु ! तपाईं

बसेर त्यो व्रत गराई हामी अभागिनीहरूको उद्धार गरिदिनुहवस् ।' यति भनी ऋषिलाई सम्मानपूर्वक घर लगेर बसाई राखे ।

त्यसपछि पौषशुक्ल पूर्णिमा आयो र विधिपूर्वक व्रत आरम्भ गराई महीना दिन पुगेपछि माघशुक्ल पूर्णिमाको दिन समस्त सामग्री तयार गराई स्वस्थानी परमेश्वरीको पूजा गराए । पूजा सकिएपछि अश्वत्थामा ऋषिले भने- 'हे नागिनी हो ! अब अर्घ्य दिई जप-पाठ, ध्यान, स्तुति गर ।' अनि नागिनीहरूले अंजलि जोरी- 'हे ईश्वरी ! हामी दुखियाहरूको पूजाले प्रसन्न भई यो दुःखको समुद्रबाट पार लगाउनुहवस्' भनेर स्तुति गर्दागर्दै पूर्व दिशाबाट हजार सूर्यको जस्तै तेज भएकी श्रीस्वस्थानी परमेश्वरी प्रकट भएर दर्शन दिई- 'हे नागिनी हो ! तिमीहरूको श्रद्धा-भक्तिले म अत्यन्त प्रसन्न भएँ, वरदान माँग' भन्नुभयो । अनि ती नागिनीहरूले बिन्ती गरे- 'हे ईश्वरी ! हामी दुःखिनीहरूको दुःख हरण हवस् । हाम्रा स्वामीहरू चाँडै आइपुगून्' भनी वर माँगे, अनि ईश्वरीले 'तथास्तु' भनी वरदान दिइन् । त्यसपछि प्रसाद झिक्न लाग्दा श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले परदेशबाट नागहरू आइपुगे र

नागिनीहरूले मनमा आनन्द मानी धन्य-धन्य, स्वस्थानी परमेश्वरी ! भनी प्रसाद झिकेर आठ रोटी, आठ अक्षता, आठ बेलीपुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुन-समेत आफाफ्ना पतिलाई दिएर दण्डवत् प्रणाम गरे । अनि अश्वत्थामा ऋषिलाई भोजन गराई दक्षिणा दिई बिदा गरे। त्यसै दिनदेखि ती नाग-नागिनीहरू असंख्य सम्पत्ति पाएर आनन्दले रहँदा भए।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां नागिनीव्रतकरणं नाम अष्टादशोऽध्यायः ।।१८।।*

•

धापाख्मा शिवभट्टले लगाएको बगैंचा

# अथ एकोनविंशोऽध्याय:

## माघमासमहिमा-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! तिमी ध्यानपूर्वक सुन । यति पातालका कुरा सुनाएँ । अब मर्त्यमण्डलको कुरा भन्दछु । पूर्वकालमा मर्त्यमण्डलको हिमालयको दक्षिण-भागमा ब्रह्मपुर नामको यौटा नगर थियो । त्यहाँका कर्मिष्ठ ब्राह्मणहरू प्रशस्त सम्पत्ति पाई वेद-पुराणादि शास्त्र अध्ययन गरेर आफाफ्ना धर्म-कर्मको पालन गरेर बसेका थिए । त्यहीं यौटा शिवभट्ट नामका अत्यन्त दीन-दरिद्र ब्राह्मण पनि थिए । गरीब भए पनि तिनी लोभ, मोह त्यागेका र आफ्नू सत्कर्मको पालन गर्दथे । तिनकी सती नामकी ब्राह्मणी थिइन् । ती विप्र-दम्पती अनन्य प्रीतिले बसेका थिए । घरमा धन-सम्पत्ति नहुनाले निकै कष्ट पाए र एकदिन शिवभट्टले आफ्नी पत्नीसित भने-'हे प्रिये ! हाम्रो घरमा सम्पत्ति छैन। त्यसै हुनाले बराबर कष्ट भोगिरहेका छौँ । अब सम्पत्ति प्राप्त गर्न सिद्धिगणेशको सेवा गरौँ' भन्ने सल्लाह गरी दुवै पति-पत्नी आठ-आठ दिनको मंगलवार बिहानै उठी कष्टपूर्वक सिद्धिगणेशको

सेवा गर्न लागे । यही क्रमले निकै दिन बितेपछि सिद्धिगणेश प्रसन्न भई दर्शन दिए र-'हे शिवभट्ट ब्राह्मण ! हे सती ब्राह्मणी ! तिमी दुवैको सेवाले म प्रसन्न भएँ । जे इच्छा छ सो वरदान माँग' भने र शिवभट्टले सिद्धिगणेशलाई दण्डवत् प्रणाम गरी अंजलि जोरेर-'हे गणनाथ ! अरू के वर मागौँ ! पूर्वजन्ममा नकमाएको हुनाले यस जन्ममा दरिद्री भएर कष्ट भोगिरहेछौँ, अब सम्पत्ति पाउने इच्छाले हजुरको सेवा गरेका हौँ । सम्पत्ति दिई कष्ट निवारण गरिदिनुहवस्' भनी बिन्ती चढाए । अनि सिद्धिविनायकले आज्ञा भयो-'हे शिवभट्ट! आजको आठ दिनमा मंगलवार बिहानै आई मेरो पूजा गर्नू । उसै वेला मेरो मुखेञ्जी जो देखौला त्यो घर लगी तसलामा राखी माथिबाट तसलैले छोपिदिनू । चार दिनपछि छोपेको तसला झिकी हेर्नू, सुन होइरहला । अनि त्यसका प्रभावले प्रशस्त सम्पत्ति पाई सुखी हुनेछौ । तिमीलाई सम्पत्ति हुने वरदान दिएँ । अब आफ्नू घर जाऊ ।' यति गणेशजीको वचन सुनी शिवभट्ट ब्राह्मण र सती ब्राह्मणीले सिद्धिविनायकलाई दण्डवत् प्रणाम गरे । अनि विनायक अन्तर्धान भएपछि उनीहरू घर फर्केर आए । आठ दिन बित्यो र मंगलवार

बिहानै पूजा-सामग्री लिएर ती विप्र- दम्पती सिद्धिविनायकको मन्दिरमा गए र उनको अगाड़ि यौटा लड्डू देखे । अनि दुवै पति-पत्नीले नित्य-जस्तै विनायकको पूजा गरे र त्यो लड्डू घर लगी तसलामा राखी माथिबाट तसलैले छोपिदिए । चार दिनपछि छोपेको तसला झिकी हेर्दा सुनको लड्डू भइरहेको देखी प्रसन्न भएर सुरक्षित गरी

शिवभट्ट ब्राह्मण र सती ब्राह्मणीलाई सिद्धिविनायकले वरदान दिनुभएको

राखे । उसै दिनदेखि शिवभट्ट ब्राह्मण उसै सुनका प्रभावले असंख्य सम्पत्ति पाई सुखी भए । दश घर डुली भिक्षा माँगेर खाने शिवभट्टले सम्पत्ति पाएपछि एकदिन आफ्नी स्त्रीसित भने- 'हे सती ! पूर्वजन्ममा दान-धर्म गर्न नसकेकोले यस जन्ममा कष्ट भोग्यौं । अब सिद्धिविनायकको कृपाले सम्पत्ति भयो । अब यस जन्ममा दान-धर्म नगरे

अर्को जन्ममा फेरि दरिद्री भई कष्ट पाउनेछौं । अत: दान-धर्म गरौँ'भनी दुवै पति-पत्नी नित्यै नारायणी गंगास्नान गरी उहीँ हरि-हरको पूजा गरेर सुवर्णादि अनेक द्रव्य दान गरी घर आउँथे । यसै दानका तानमा उनले विष्णुको मन्दिर बनवाए, शिवको मन्दिर तयार गराए, सिद्धिविनायकको मन्दिरलाई जगमग तुल्याए, धेरै नै बड़ा-बड़ा पोखरी खनवाए, वापीहरू र इनारहरू खनाए, बरका-पीपलका-पाकड़का-शमीका-आँपका-कटहरका-बडहरका-कटुसका- ओखरका-डुम्रीका-खस्रेताका-चिउरीका-लप्सीका वृक्षहरू रोपाए । निबुवाका-कागतीका-लिचीका-पेडारका बगैचा लगवाए । ठाउँ-ठाउँमा नाना भाँतिका फूलका फूलबारी सजवाए, गरीब-गुरुवाहरूलाई दान दिन दिन-भरिभरि धेरै-धैरै अन्न बाँड़े, जतातते राम्रा-राम्रा पाटी-पौवा, सत्तल-चौतरा बनवाए, बाटा-बाटामा अनेक ठाउँ पौशालाहरू रखवाए, ती पौशालाका नगीचै छायादार पाकड़का-चाँपका रूखहरू रोपाए । ती वृक्षका फेदमा बिसाउन चौतारा चिनवाए, चौघाटका वरिपरि साधु-सन्त, फक्कड़-तीर्थयात्रीहरूलाई वास बस्न धर्मशाला बनवाइदिए,अनेक कुटीहरू बनवाए,तीर्थयात्रीहरूका

लागि सदावर्त खोलिदिए, पाठशाला खोलेर विद्यार्थीहरूलाई पढ़ाउनका लागि गुरु तथा बस्नका लागि छात्रावास अनि खानका लागि भोजनालयको व्यवस्था गरे र त्यस्तै अरू-अरू पनि अनेक दान-धर्मका कार्य गरे । त्यसरी दान-धर्म गर्नाले शिवभट्ट ब्राह्मणको सम्पत्ति झन् झन् बढ्दै गयो । त्यो देखेर एकदिन शिवभट्टले आफ्नी पत्नीसित भने 'हे स्त्री ! सम्पत्ति मात्र भएर के गर्ने, हामी वृद्ध भयौं । हाम्रा सन्तान छैनन्, पछि यो सम्पत्तिको रक्षा को गरिदेला ? अतः संतानको निम्ति फेरि सिद्धिविनाकको सेवा गरौं ।' यस्तो सल्लाह गरेर अघि-जस्तै आठ-आठ दिनमा मंगलवार बिहानै सिद्धिविनायकको सेवा गर्न लागे । तिनका निष्कपट सेवाले विनायक प्रसन्न भई दर्शन दिएर-'हे शिवभट्ट ब्राह्मण ! तिम्रो सेवाले म प्रसन्न भएँ, वरदान माँग' भन्नुभयो । त्यस्तो कृपा सुनी शिवभट्ट र सतीले अंजलि जोरी बिन्ती गरे-'हे गणनाथ ! हजुरका कृपाले सम्पत्ति पायौं, तर संतान छैनन् । त्यो सम्पत्तिको रक्षा पछि कसले गरिदेला ! अतः सन्तान पनि दिनुहवस् ।' तिनको यस्तो प्रार्थना सुनी सिद्धि-विनायकले आज्ञा भयो-'हे शिवभट्ट ! सन्तान पाउनका लागि तिमीले तीन वर्षसम्म लगालग

माघस्नान गर्नुपर्छ अनि मात्र तिमीलाई म सन्तान दिन सक्छु । मकर राशिमा सूर्य सरेको दिनदेखि त्यस राशिमा सूर्य रहेसम्मका तीस दिनलाई माघ महीना भन्दछन् र ती तीस दिनमा गरिने नियमपूर्वकको नित्यस्नानलाई नै माघस्नान या मकरस्नान भन्दछन् । जस्तै प्रत्येक दिन सूर्य उदाउँदा रातभरि चिसिएको वातावरणमा पूर्वतिरबाट आइरहेका सूर्यका ताता किरण मिसिएर उत्पन्न भएको ओसिलो तुवाँलोले छेकिएर सूर्य राता देखिउञ्जेलको चिसो-तातो मिसिएको वातावरणीय समय अति पुण्यदायी र स्वास्थ्यबर्धक हुन्छ, त्यस्तै सूर्य दक्षिणायन भएका वेलाको अन्तिम चिसो वातावरणबाट सूर्य उत्तरायणतिर सर्दाको तातो वातावरण प्रारम्भ हुँदा चिसोमा बढ्दो तातो मिसिदै गएको माघ महीना पनि अतिपुण्यदायी हुन्छ ।अरू प्रत्येक राशिमा सूर्य सर्दा प्रकृतिका भिन्न-भिन्न वस्तुहरूमा सूर्यका भिन्न-भिन्न प्रभाव परे-झैं मकर राशिमा सूर्य सर्दा सूर्यको पुण्यदायी प्रभाव पानीमा परेको हुन्छ । यसैले माघ महीनाको माघस्नान-माघदान अति पुण्यदायी हुन्छ, त्यस पुण्यले चिताएको चीज पुर्‍याउँछ । जस्तो ग्रहहरूमा सूर्य सर्वश्रेष्ठ छ, अनि नक्षत्रहरूमा चन्द्रमा सर्वश्रेष्ठ

छ, त्यस्तै महीनाहरूमा माघ अतिश्रेष्ठ छ । तसर्थ, हे शिवभट्ट ब्राह्मण ! यस मनुष्यलोकमा जो जन कामिनीहरूको कटाक्षवाणले एकदम विद्ध भएका छैनन् अर्थात् जो जन स्त्रीलम्पट छैनन्, त्यस्ता ती जन मात्रै मकरमा सूर्य रहँदा तलाउमा वा नदीहरूमा वा पुण्यतीर्थहरूमा श्रद्धा-विश्वासपूर्वक स्नान गर्न चाहन्छन् । जो जन विना-आगो, विना-यज्ञ, विना-पाटीपौवा निर्माण गरी सद्गति पाउन चाहन्छन्, त्यस्ताले माघमा बस्ती-बाहिरको भरसक बहँदो जलमा बिहानै न्वाहुने गरून् ।

हे शिवभट्ट ! जो जन गाई, भूमि, सुन, माणिक्य आदि दान नगरीकन नै सुन, गाई आदि दान गरेको फल प्राप्त गर्न चाहन्छन्, तिनीहरूले पक्कै पनि माघस्नान गर्नुपर्छ । एक्काईसदिने व्रत, कृच्छ्रव्रत र पराकव्रतले आफ्नू शरीरलाई नसुकाईकन जो स्वर्ग जान चाहन्छन्, तिनीहरूले माघभरि अवश्यै नदी वा सरोवर यानि ठूला पोखरीहरूमा न्वाहून् । वैशाखमा हरिको पूजा, कार्तिकमा तपरूपी पूजा र माघमा चाहिं तपस्या, होम तथा दान तीनोटै गरिन्छ । बराबर अर्थात् हरसाल यस्तो गर्ने व्यक्ति अवश्य नै अर्को जन्ममा लक्ष्मीपति राजा हुन्छ । उसलाई कैवल्यधाम प्राप्त गर्ने अर्थात् मुक्ति हुने

बुद्धि सुझदछ र फेरि मृत्युलोकमा ओर्लनि हुँदैन । दिव्यदृष्टि हुनेहरूले तन-मन-वचनले भगवान्को सेवा गर्नू भनी बताएका छन् । हे शिवभट्ट ! यो-भन्दा कता हो कता बेसी पुण्दायी माघमा गरिएका तप-दान-स्नान हुन्छन् । इच्छासिद्धिका लागि वा सन्तानप्राप्तिका लागि वा हरिको दर्शनका लागि वा अरू नै कामना यानि चाहनाका लागि कायशुद्धि गरेको व्रती भएर न्वाहुनेले ती चारै प्रकारको फल पाउँछ । अदितिले माघभरि खाँदै नखाई बाह्र वर्षसम्म माघस्नान गरिन् । त्यसै-उसले उनले तीनै लोक झल्काउने सूर्य जस्ता तेजिला बाह्रओटा पुत्र पाइन् । माघस्नानको प्रभावले नै रोहिणी सुभगा अर्थात् सौभाग्यवती अनि अरुन्धती दानशीला तथा शची साततले महलमा रूपराशिले झकिझकाउ भएर रहेकी छिन् । जसले मकरमा सूर्य रहँदा नदी वा तलाउमा स्नान गर्ने गरेको छ, तिनीहरू यस संसारमा सफा स्वच्छताको शोभाले भरिएको, सुन्दरी-सुन्दरी नर्तकीहरू आङ्नमा नाचिएको, दीयाका ताँतीले झल्झलाकार, सुन्दरी स्त्रीहरूले खचिखचाउ भएको, गीत-बाजाका स्वरध्वनि भइरहेको, मङ्गलकार्यहरूको विधि-विधानले शोभिएको, वेदका ध्वनिले पवित्र

पारिएको, विद्वान् ब्राह्मणहरू विराजिएको, देवताहरूको पूजाले आनन्ददायक तथा सधैँ पाहुनाको लर्को लागिरहने घरमा प्रसन्नतापूर्वक बस्न पाउँछन् ।

प्यारो वस्तुको त्याग र नियमको पालन गरेर जसले माघ महीनामा प्रशस्त दान दिएको छ, जसले मुरारि भगवान्को पूजा गरेको छ, त्यो जन अति उत्तम अति श्रेष्ठ हो । माघ महीना सत्कर्मीलाई सधैँ धर्म दिन्छ र उसको पाप पखाल्छ । सदा इच्छापूर्ति चाहनेलाई उसले चाहेको फल दिन्छ । त्यो नचाहनेलाई ज्ञान दिन्छ । जुन लोक ज्ञानीहरूलाई, जुन लोक वनमा बसेर तपस्या गर्नेहरूलाई, जुन लोक विष्णुका भक्तहरूलाई मिल्छ, ती लोक माघमा नित्य स्नान गर्ने जनहरूलाई सदाका लागि मिल्छन् । हे शिवभट्ट ! अरू पुण्यहरूले त पुण्य-भोग सकिएपछि स्वर्गबाट फर्कनुपर्छ, तर माघस्नान गर्ने मनुष्यहरूले त कहिल्यै पनि स्वर्गबाट फर्कनुपर्दैन । जो जन माघमा स्नान गरेर दुधालु गाई वैदिक ब्राह्मणलाई दान दिन्छ, त्यस गाईका सर्वाङ्गमा जति रौँ छन्, त्यति हजार वर्षसम्म त्यो जन स्वर्गमै रमाइरहन्छ । जो माघस्नान गर्ने मनुष्य गुड़ सक्खर मुछेका तिल दान गर्छ,

त्यसका सबै पाप पखालिएर निश्चय नै त्यो जन निर्मल भएर शोभिन्छ, किनकि सबै धान्यहरूमध्ये तिल जो छ त्यो पाप नाश गर्नेवाला हो। त्यसकारण, हे शिवभट्ट ! माघमा प्रयत्नपूर्वक सकेसम्म तिल दान गर्नुपर्छ । नियमपूर्वक माघस्नान गर्नेले ब्राह्मणभोजन पनि गराउनुपर्छ । अनि ब्राह्मणभोजनद्वारा आफ्ना पितृहरूलाई तृप्त पारेर शुद्ध आत्मा भएको त्यो जन विष्णुको परमपदमा प्राप्त हुन्छ । त्यसकारण, प्रयत्नपूर्वक पनि माघ महीनाकन दानैदानले बिताउनुपर्छ । कसैले पनि माघ महीनालाई विना-दानले बिताउनु हुँदैन । आफ्नू सावगास-अनुसार विचारेर पक्कै पनि माघमा सधैँ दान गर्ने गर्नुपर्छ । जो जन माघ-स्नान गरेर ब्राह्मणहरूलाई जुत्ता, कमण्डलु दान दिन्छ, त्यो जन अवश्यै स्वर्गमा गएर रहन्छ । माघस्नानरूपी उत्तम तपस्या गर्ने जन कदापि दान-विना माघ बिताउँदै नबिताओस्, किनकि त्यो दानले स्वर्ग प्राप्त हुन्छ । दानले नै स्वर्ग मिल्छ, दानले नै सुख मिल्छ, दानले नै पाप नाश हुन्छ र यो आश्चर्यको कुरो छ कि महापातक पाप पनि माघमा गरेका दानले नाश हुन्छ । जस्तो सूर्यको विना आकाश, जस्तै सन्तान-विना कुल, आचार-विना

घरको शोभा हुन्न, त्यस्तै विना-दानको तपस्या शोभिदैन । दानभन्दा अर्को पाप नाश गर्ने पवित्र वस्तु क्यै छैन ।

हे शिवभट्ट ! तिमीलाई मैले माघ महीनाको महिमा बताएँ, अब माघस्नानको गरिमा बताउँछु । माघस्नान समस्त यज्ञभन्दा श्रेष्ठ वा उत्कृष्ट छ, सबै प्रकारको दानको फल दिनेवाला छ र माघस्नान सबै प्रकारका व्रत र तपस्याको समान पुण्यदायक छ । माघस्नानको प्रभावले अति शुद्ध मन भएका मानिसहरू पितृ-कुल, मातृ-कुल दुवै कुलका पितृहरूलाई स्वर्गमा थन्क्याएर अनि उज्ज्वल-उज्ज्वल चेहरा भएका आफूहरू चाहिं अत्यन्त राम्रा, जता चितायो उतै चल्ने श्रेष्ठ विमानहरूमा चढेर स्वर्ग जान्छन् । जो मनुष्यहरू सधैं पाप गर्दछन्, सधैं दुराचार गर्दछन् र कुमार्गमा चल्दछन्, त्यस्ता जन पनि जो माघस्नान गरेर हरिको पूजा गर्दछन् भने ती पनि यहाँ पापहरूबाट छुट्छन् । जो कहिल्यै साँचो बोल्दैनन्, जो सधैं आमा बाबुलाई सताउँछन्, जसको स्थिति कुनै पनि आश्रममा छैन, जसले आफ्नू कुलधर्म त्यागेका छन्, अनि जो पाखण्डी छन्, त्यस्ता जन पनि सज्जनको गति पाउँछन् र माघमा गरेका स्नानका पुण्यहरूले

भवसागर तर्दछन् । पृथ्वीतलका पुण्यतीर्थहरूमा माघस्नान गर्न पाउनु मनुष्यहरूलाई अति दुर्लभ छ । किनकि त्यस माघस्नानको प्रभावले मनुष्यहरूले ब्रह्मज्ञानीले पाउने पद पाउँछन् । यसबारेमा विचार्नुपर्ने कुनै काम छैन ।

हे शिवभट्ट, माघमहीनामा कल्पवास बस्नु, दान गर्नु, हरिको मन्दिरमा जानु, हरिको पूजा गर्नु यी सब कामका पुण्य अक्षय अर्थात् ननाशिने हुन्छन्। त्यसकारण, यथाशक्ति यानि सावगास-अनुसार मनुष्यहरूले प्रयत्नपूर्वक माघस्नान गरेर लुगा, भर्भराउँदो मकल, सुवर्ण आदि दान गर्नुपर्छ। माघमा जो अन्न दान गर्छ, उसलाई देवलोकमा अमृत पान गर्न मिल्छ; जो सुन दान गर्दछ, उसले इन्द्रको समीपमा बस्न पाउँछ; दीयो, अग्नि अर्थात् सल्काएको मकल, सुन्दर वस्त्र दान गर्ने मनुष्य सधैँ तेजस्वी भएर सूर्यलोकमा बस्न पाउँछ । यज्ञहरूले, उत्तम-उत्तम दानहरूले, उज्ज्वल तपस्याहरूले, ब्रह्मचर्यको धारणले, शुभयोगमा गरिएको पूजाले पापीहरू यस लोकमा त्यति शुद्ध हुँदैनन्, जति पुण्यतीर्थहरूमा माघ महीनामा गरिएका स्नानले शुद्ध हुन्छन् । जो मनुष्य माघ महीनामा आधा सूर्य उदाएको वेलामा पुण्यतीर्थहरूमा स्नान

गर्दछन्, तिनीहरू पाप गर्ने नै भए पनि तिनले नरकमा दुःख-समूहको सन्ताप, अनि सहि नसक्नुको यातना भोग्न जानुपर्दैन । जो जन माघ महीनामा न्वाहेर विष्णुको पूजा गर्दछन्, ती जन स्वर्ग-भोग सकिएर फेरि पृथ्वीतलमा फर्केपछि कल्याणमूर्ति, राम्रा, भाग्यमानी, प्रिय बोल्ने, धर्मात्मा, धनाढ्य, शतायु राजा हुन्छन् । दन्केको आगोमा हालेको काठ-समूह जसरी तुरुन्तै भस्मावशेष हुन्छ, त्यसै गरी माघस्नानले सानू वा ठूलो पापहरूको राशि बिलाउँछ । मनुष्यहरूले शरीरले, वाणीले, मनले पनि जानेर वा नजानेर जो पाप गरेको छ,त्यो पाप-समूह पुण्यतीर्थमा गरेको माघस्नानले, -हृदयमा झल्केका विष्णुले अज्ञान नाशेझैं-, सबै डढ्दछन् अर्थात् नाशिन्छन्। यदि कुनै मनुष्य आफूले गरेका पाप-समूहको भोग भोगिरहेको छ र संयोगवश पनि कुनै वेला कुनै पुण्यतीर्थमा एकाएक पुगेर त्यस मनुष्यले माघस्नान अचानकै गरियो भने पनि तुरुन्तै त्यसको त्यो पाप-समूह नाश भइहाल्छ, यसबारे तिमी आफ्नू मनमा कत्ति पनि संशय नलेऊ ।

हे शिवभट्ट ! विशेष गरेर यो कर्मभूमि भारतवर्षको पुण्यभूमि आर्यावर्तमा अर्थात् साढे

सात सय कोश पूर्व-पश्चिम लामो हिमालय र त्यस्तै पाँच सय कोश लामो विन्ध्याचलको बीचको भूमिमा रही माघस्नान नगर्ने मनुष्यहरूको जन्म बेकारको कहिएको छ । जस्तै, सूर्यविनाको आकाश, चन्द्रमा-विनाको नक्षत्र-मण्डल शोभित हुँदैन, त्यस्तै हे शिवभट्ट ! विना-माघस्नानको सत्कर्म शोभित हुँदैन । माघस्नान मात्रले पनि जस्तो केशव भगवान् प्रसन्न हुनुहुन्छ, अरू व्रत-दान-तपस्याले हरि भगवान् त्यस्तो प्रसन्न हुनुहुन्न । जस्तै, सूर्यको तेज जस्तो तेज अरू कुनै तेज छैन, त्यस्तै माघस्नानको बराबर अरू कुनै यज्ञ-यागादि क्रिया छैन । तसर्थ, वासुदेवलाई प्रसन्न पार्नका लागि, सारा पापहरूलाई हटाउनका लागि र अन्तमा स्वर्ग-प्राप्तिका लागि मानिस माघस्नान गर्ने गरोस् ।

खूब स्याहार गरिएको हृष्ट-पुष्ट बलियो, तर माघस्नान नगरिएको अशुद्ध र अनित्य निन्द्य शरीरले के हुन्छ र ? हड्डीहरूको ढाँचा, नसाहरूले कसिएको, मासुले लिपिएको, छालाले मढिएको, दुर्गन्धिले भरिएको, दिसा-पिसाबको पात्र; बुढ्याइँ-शोक-विपत्तिले व्याप्त, रोगको घर, आतुर, रगत बग्ने, क्षणभङ्गुर, सबै दोषको आश्रय, अर्काको

उन्नतिले दुःखी हुने, अर्काको द्रोह गर्ने, छुचो, लोभी, चुगुलखोर, क्रूर, कृतघ्न, घमण्डी; त्यस्तै क्षणिक अर्थात् क्यै दिन मात्रको, कहिल्यै तृष्णा पूरा नहुने, उद्धत, दुष्ट, तीनै दोष कफ-वात-पित्त भरिएको, अपवित्र वस्तु निकाल्ने प्वालयुक्त, तीनै ताप दैविक-दैहिक-भौतिकले मोहित, स्वभावैले अधर्ममा रत, सयकडौँ तृष्णाले आकुल, काम-क्रोध-लोभ यी नरकका द्वारले व्याप्त, परिणाममा कीरा पर्ने-भस्म हुने वा कुकुरहरूको भोजन हुने यस्तो यो लाछी शरीर यदि माघस्नान गरएिको छैन भने व्यर्थ छ । पानीमा फोका जस्तै, जन्तुमा पुतली वा धमिरा जस्ते ती माघस्नान नगर्ने मनुष्यहरू केवल मर्नका लागि मात्र जन्मन्छन् । विष्णु भगवान्‌लाई नमान्ने ब्राह्मण धिक्कार हो; जोगीहरूको श्राद्ध धिक्कार हो, ब्राह्मण नभएको ठाउँ धिक्कार हो, आचार नभएको कुल धिक्कार हो, घमण्डले युक्त धर्म धिक्कार हो, क्रोधले युक्त तपस्या धिक्कार हो, विना- दृढताको ज्ञान धिक्कार हो, अल्छीको शास्त्र धिक्कार हो, आफ्ना मान्यजनको श्रद्धा-भक्ति नगर्ने नारी धिक्कार हो; त्यस्तै नै गुरुको सेवा नगर्ने ब्रह्मचारी धिक्कार हो, नदन्केको आगोमा गरिएको होम धिक्कार

हो, साक्षी-विनाको निर्दोषता धिक्कार हो, उपजीविका अर्थात् शरीर-व्यापारले जीवन चलाउने कन्या धिक्कार हो, आफ्ना लागि मात्रै पकाइएको भोजन धिक्कार हो, शूद्रका घरको भिक्षा यानि चन्दाले गरिएको यज्ञ धिक्कार हो, कृपणको धन धिक्कार हो, अभ्यास नगरिएको विद्या धिक्कार हो, प्रजासँग विरोध गर्ने राजा धिक्कार हो, जिउनका लागि गरिएको तीर्थ धिक्कार हो, केवल जीवन चलाउनका लागि गरिएको व्रत धिक्कार हो, झुठो तथा चुगुलखोरी वाणी धिक्कार हो, सन्देहास्पद मन्त्रजप धिक्कार हो, चञ्चलचित्तको वा अन्यमनस्कको जप धिक्कार हो । अवैदिकलाई दिएको धन धिक्कार हो, ईश्वर नमान्ने नास्तिक जन धिक्कार हो, जो अश्रद्धाले गरिएको पारलौकिक अर्थात् परलोक-सम्बन्धी काजक्रिया छ त्यो सब धिक्कार छ ।

हे शिवभट्ट ! जस्तै यस मृत्युलोकमा दरिद्र मनुष्यहरूको जन्म धिक्कार छ, त्यस्तै नै अरू मनुष्यहरूको पनि माघस्नान-बिनाको जन्म धिक्कार छ । जो जन मकरमा सूर्य रहँदा सूर्य नउदाउँदै भोरैमा स्नान गर्दैन, त्यो जन पापबाट कसरी छुट्ला र कसरी स्वर्ग जाला ? बाहुनमारा,

सुनचोरुवा, जाँड-रक्सी धोकुवा, गुरुको खाटमा सुतुवा अनि पाँचौँ त्यस्ताको सङ्गतगरुवा जस्ता पापीले पनि प्रत्येक माघमा दिनहुँ मकरस्नान गर्ने गर्नाले उ पापरहित हुन्छ । माघ महीनामा सूर्य केही उदाएपछि जो जन पानीमा डुबुल्की मार्छन्, ती चाहे ब्रह्महत्यारा हुन्, चाहे रक्सी घुट्क्याहा हुन्, वा महापतित हुन् त्यस्तालाई पनि माघस्नान पवित्र पार्छ । अरू सारा छिटफुट पापहरू र ठूला- ठूला महापातक अर्थात् ब्रह्महत्या, चोरी, मद्यपान, गुरुपत्नीगमन र यस्ताको संसर्गरूप पाप पनि यी सबै नै माघस्नान गर्ने मनुष्यका भस्मीभूत हुन्छन् । माघ महीना आउन लागेको वेलामा सारा पापहरू थर-थर काँप्न थाल्छन् । यदि कसैले बहँदो पानीमा माघस्नान गर्‍यो भने तब उसका सारा पापहरू नाशिन्छन्, हामी उसका शरीरबाट बाहिरिन्छौँ, अनि हामीहरू कहाँ बस्ने ? यो माघ महीना त हाम्रो नाशकाल हो भनिठानेर माघ महीनामा स्नान गर्न लागेको मान्छेलाई देखेर दुःखी हुन्छन् । माघस्नानले पाप खारिएका उत्तम मनुष्यहरू आगो झैँ चहकिन्छन् । माघस्नानले सारा पाप छुटेका मनुष्यहरू मेघबाट मुक्त भएको चन्द्रमा झैँ चम्कन्छन् । गिलो, सुकेको, सानू,

ठूलो वा वाणी-मन-कर्मले गरिएको सबै पापलाई माघस्नानले नै, -आगोले समिधालाई झैं-, डढाइदिन्छ । जो पाप 'देखाजाला' भनेर प्रमादवश गरिएको छ र जो पाप जानेर वा नजानीकन गरेको छ, ती सब पापहरू मकरमा सूर्य रहेको वेलामा गरेको माघस्नानले नै नाशिन्छन् । माघस्नानले निष्पापीहरू स्वर्ग जान्छन्, पापीहरू पाप खारिएर पापरहितका पवित्र हुन्छन् । हे शिवभट्ट ! माघस्नानका प्रभावले यी सब कुरा हुनमा कुनै सन्देह छैन । जसरी विष्णुभक्तिमा सबैको अधिकार छ, उसै गरी माघस्नान गर्नमा पनि सबैको अधिकार छ । माघ सबैलाई स्वर्ग दिने र सबैको पाप नाश गर्नेवाला हो । यही ठूलो मन्त्र हो र यो नै ठूलो तपस्या हो । यो माघस्नान नै पाप निखार्ने अति उत्तम ठूलो प्रायश्चित्त हो । मनुष्यहरूको जन्मजन्मान्तरको अभ्यासले मात्र माघस्नानमा श्रद्धाभक्ति हुन्छ । हे शिवभट्ट ! जसरी जन्मजन्मान्तरको अभ्यासले मात्र अध्यात्मज्ञानको प्राप्ति हुन्छ, त्यसै गरी संसाररूपी हिलाको लेप पखाल्न निपुण यो श्रेष्ठ माघस्नान पवित्रहरूलाई पनि अझ पवित्र पार्ने हो ।

हे शिवभट्ट ब्राह्मण ! हिमालयको दक्षिणी पहाड़ी प्रान्तमा रहेको त्यस द्यौघाटमा गरिएका माघ-

स्नानहरूले सारा पाप हर्दछ, सात जन्मदेखि थुप्रिएको पाप र वर्तमान जन्ममा गरिएका भयङ्कर पापकन पनि नाश पारिदिन्छ । मुनिहरू जुन पापको प्रायश्चित्तै छैन भन्दछन्, त्यस्तो पाप पनि पुण्यतीर्थहरूमा गरिएको माघ-स्नानले नाश हुन्छ । जो जन श्रद्धाले मानसरोवरमा माघभरि बसी त्रिकालस्नान गर्दछ, त्यो जन त मुक्त नै हुन्छ । अच्छोदमा माघभरि स्नान गर्नाले इन्द्रलोक प्राप्त हुन्छ । बदरीकाश्रममा माघभरि स्नान गर्नाले निष्पाप होइन्छ । नर्मदामा माघभरि न्वाहुनाले सकल पाप नाश हुन्छ, दुःख नाश हुन्छ, चिताएको फल पाइन्छ, मरेपछि शिवलोकको वास पाइन्छ । यमुनामा माघभरि स्नान गर्नाले सारा पाप नाशी सूर्यलोक प्राप्त गर्दछ । सरस्वतीमा माघभरि न्वाह्यो भने सारा पाप नाशिएर मरेपछि ब्रह्मलोकको वास पाउँछ । विशालामा माघभरि स्नान गर्नाले चिताएको कुरो प्रशस्त पाइन्छ र त्यस स्नानले पापरूपी दाउराको खलियोलाई, -डढेलोले जङ्गललाई झैं-, भस्मीभूत पार्छ र गर्भवासको ओहोर-दोहोरको फेरोलाई पनि समाप्त पारेर मुक्ति नै दिलाउँछ । गङ्गाजीमा गरिएको माघस्नानले विष्णुलोक मिल्छ अथवा धेरै वर्षसम्म स्नान गरिरहे

मुक्ति नै पनि मिल्छ भनिएको छ । सरयू, कोशी, वाग्मती, कमला, रापती, तिनाउ, कर्णाली, शारदा वा महाकाली, सिन्धु, सिन्ध, चन्द्रभागा, तापी, गोदाबरी, गोमती, गण्डकी, भीमा, पयोष्णी, कृष्णावेणिका, काबेरी, तुङ्गभद्रा, ब्रह्मपुत्र, महानदी, तिस्ता, मेची र अरू-अरू पनि जो सोझै समुद्रमा मिसिने नदीहरू छन्, तिनमा पनि प्रत्येक माघस्नान गर्ने मनुष्यहरू तबसम्मका सकल पाप विनाशिएर पछि स्वर्गलोकको वास पाउँछन् । नैमिषारण्यमा प्रतिवर्ष माघस्नान गर्नाले विष्णुको समीपको वास र पुष्करमा माघभरि स्नान गर्नाले ब्रह्माको नजीकमै बस्न पाइन्छ। कुरुक्षेत्रमा माघभरि स्नान गर्नाले इन्द्रका लोकमा वास पाउँछ र देवदहमा माघभरि माघस्नान गर्नाले योगसिद्धिको फल पाइन्छ । मकरमा सूर्य रहुन्जेल प्रभास तीर्थमा गरिएको माघस्नानले रुद्रको गण हुन पाइन्छ । देवकी अर्थात् द्यौकीमा गरिएको माघस्नानले देवताको जन्म पाइन्छ । त्रिशूलीमा गरिएको माघस्नानले कैलासको वास पाइन्छ । गोमतीमा माघभरि गरिएको मकरस्नानले फेरि जन्मनुपर्दैन । हेमकूटमा, महाकालमा, ओङ्कारमा, अमरेश्वरमा, नीलकण्ठको जलमा माघभरि-भरि माघस्नान गर्नेले रुद्रको

लोकमा ऐश्वर्यशाली भएर बस्न पाउँछ । कुनै पनि तीन नदीहरूको सङ्गममा माघभरि न्वाहुने गरे आफाप्ना इच्छापूर्ति हुन्छन्, जीवनमा दुःख आइपर्दैनन् । तर हे शिवभट्ट ! गण्डकी-द्यौकी-त्रिशूलीको सङ्गम भएर नारायणी बनेको द्यौघाटको त्रिवेणीमा र गङ्गा-यमुना-सरस्वती मिलेको सङ्गमस्थान प्रयागको त्रिवेणीमा त भाग्यमानीहरूले मात्र माघभरि मकरस्नान गर्न पाउँछन् । किनकि त्यहाँ-त्यहाँको त्रिनदी-मिश्रित स्थलको जल मुक्तिदाता र स्वर्गदाता, अनि कल्याणदाता पनि छ ।

हे शिवभट्ट ब्राह्मण ! स्वर्गमा रहने देवताहरू पनि द्यौघाटको त्रिवेणीको र प्रयागको त्रिवेणीको महिमा बखानिरहन्छन्, जहाँ मकरभरि स्नान गर्ने मनुष्यहरूले अन्तमा विष्णुलोकको वा देवलोकको वास पाउँछन् । जो-जो मनुष्यहरू यी दुवै त्रिवेणीमध्ये एकमा रहेर माघभरि नै सङ्गम-स्नान गर्दछन् भने ती जन धेरै-धेरै पापी भए पनि तिनले नर्क देख्नुपर्दैन, तिनीहरू सरासर वैकुण्ठ वा स्वर्ग जान्छन् । किनकि हे शिवभट्ट ! उहिल्यै ब्रह्माजीले तराजूको एकापट्टिको पलडामा समस्त तीर्थहरू, व्रतहरू, दानहरू, तपस्याहरू, यज्ञहरूका पुण्यफललाई र अर्कापट्टिको पलडामा द्यौघाटमा

गरिएका माघस्नानहरूको पुण्यफललाई राखेर तौले ता माघस्नानको पुण्यफल नै भारी भयो। फेरि त्यसै गरी एकापट्टि देउघाटको त्रिवेणीको पुण्यफल र अर्कोपट्टि प्रयागको त्रिवेणीको पुण्यफललाई राखेर तौलदा पनि द्यौघाटकै माघस्नानको पुण्यफल क्यै भारी नै भयो । यस्तो पुण्यदायी ती त्रिवेणीमा जो—जो जन माघे संक्रान्तिको अघिल्लै दिन उहाँ पुगेर उहीँ महीनैभरि कल्पवास बसी लगातार बीस वर्षसम्म माघस्नान गर्छन्, तिनले सधैंको लागि कैलासको वास पाउँछन् । त्यस्तै गरी चालीस वर्ष लगातार माघस्नान गर्नेले निरन्तर स्वर्गको वास र सधैं बाह्रै महीना त्यहीँ-त्यहीँ रहेर विष्णु भगवान्‌को मन्त्र निश्चल मनले जप्तै साठी वर्षसम्म लगालग जो-जो जन स्नान गर्छन्, तिनले त कैवल्यधामको आनन्दमय लोकमा सदाका लागि वास पाउँछन् । अनि हे शिवभट्ट ! कहिले सृष्टि भो र कसरी भो, अनि कहिले अन्त हुन्छ र कसरी हुन्छ ? भन्ने आदि र अन्तको निधो नभएकोले अनादि अनन्त कहिने चौबीस हजार कोशको गोलाइ भएको धकधकाउँदो रापिलो आगोको गोला सूर्य र त्यसभन्दा साढे चार करोड़ कोश तल रहेको चिसो-न-चिसो पानीको बाह्र

हजार कोश गोलाइको अविनाशी दह समुद्र यी दुवैलाई निराधार निरालम्ब आकाशमा आआफ्नै धूरी र वृत्तमा नियमित रूपले नियममा राखी अड्याइराख्ने त्यो कुन शक्ति हो ? भन्ने सोची त्यो शक्तिलाई ठम्याई त्यसलाई जान्नु नै ज्ञान हो र त्यो सत्य शक्तिलाई जान्न वेदविहित सत्मार्गमा चल्नु नै सनातन प्रमुख धर्म हो । हाम्रा चालू आँखाले प्रकाशलाई र प्रकाश परेका तर नछेकिएका वस्तुलाई भ्याएसम्म देखे-झैं यिनै सूर्य र समुद्रका बीचको आकाशमा रहेका, तर यी आँखाले नदेखिने, किन्तु, मनुष्य मात्रको नाकको

श्रीकृष्णबाट दिव्यदृष्टि पाई अर्जुनले विराट्रूप हेरेको

फेदमा भएको भृकुटीको भित्र शक्तिरूपले रहेको त्यो दिव्यदृष्टि, जुन विराट् स्वरूपको दर्शनका लागि एकछिन मात्र श्रीकृष्णाले आफ्नू योगबलले अर्जुनको

दिव्यदृष्टिकन उघारिदिएझैं आफ्नै तपस्याले उघारिएका दिव्यदृष्टिले मात्रै देखिने स्वर्ग—नर्क आदि लोक देख्नलाई चाहिने,—कहिलेकाहीं यिनै आँखामा झिलिक्क गर्ने-,दिव्यदृष्टि उघार्न गरिने स्वप्रयास नै तपस्या हो र त्यस तपस्यामा चाहिने साधन सूर्यतिजमा अविचल मन अड्याइराख्ने ध्यान नै योग हो । यी सबै सत्प्रयास सिद्धिका लागि आवश्यक पर्ने पहिलो प्रयास शरीर-शुद्धि हो र शरीर-शुद्धिका लागि चाहिने प्रारम्भिक प्रयास त्यों नियम-पूर्वकको मकर-स्नान नै हो । अर्थात् ज्ञानरूपी चोटामा चढ्न चाहिने लिस्नोको पहिलो खुड्किलो मकर-स्नान हो । तसर्थ, हरसाल गरिएको विष्णुभक्तिपूर्वकको माघस्नानले जसरी ती माघस्नान गर्नेहरूलाई मरेपछि शिवलोक—इन्द्रलोक—सूर्यलोक पुर्‍याउँछ र त्यहीं चिरस्थायी वासस्थान दिलाउँछ, त्यसरी नै यसै लोकमा पनि सन्तान चाहनेहरूलाई सन्तान अनि सुख शान्ति पनि दिलाउँछ । जसरी उहिले पाँचोटी गन्धर्व-कन्याहरू आपसका सरापासरापले प्राप्त भएको कठिन पापको फल,-पिशाच भएर-, भोगिरहेका थिए । पछि लोमश- ऋषिको उपदेशरूपी वाणीले नै माघ-महीनामा गरिएका त्रिवेणी-स्नानका प्रभावले

ती गन्धर्वकन्याहरू सरापबाट आश्चर्यसित छुटे र अनि उसै बटुक प्रसीद बेटासँग बिहे भयो। बिहे भएको सात वर्षसम्म पनि सन्तान नभएर पिरिएका तिनीहरूलाई पछि फेरि लोमशले नै तीन वर्षसम्म तीनछाडे दह अक्षोदमा लगालग नियमपूर्वक मकरस्नान गराए त, तब तिनीहरूले तीन-तीन वर्ष बिराएर घ्याल्घ्याल्ती छोराछोरी पाएका थिए । यो आश्चर्यलाग्दो कथा पनि सन्तान चाहने तिमीलाई अर्को मङ्गलवार म सुनाइदिनेछु ।।

*।।इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमाराऽगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां माघमासमहिमा–वर्णनं नाम एकोनविंशोऽध्यायः।।१९।।*

धापाटका नारायणी कौडिलमाथीको दृश्य

# अथ विंशोऽध्यायः

## गोमाजन्म - उपाख्यान

हे अगस्त्य मुनि ! अर्को मङ्गलवारको बिहान पूजा-प्रार्थना सकिएपछि सिद्धिविनायकको मूर्ति भन्न थाल्यो— 'हे शिवभट्ट ब्राह्मण ! अघि कुनै समयमा गन्धर्वलोकमा सुखसङ्गीति नामको गन्धर्व थियो, त्यसकी प्रमोदिनी नामकी छोरी थिई । त्यस्तै सुशील गन्धर्व की सुशीला अनि स्वरवेदीकी सुस्वरा तथा चन्द्रकान्तकी सुतारा एवं सुप्रभकी चन्द्रिका नामका छोरी थिए । ती गन्धर्वकन्या अप्सराहरूको यिनै शुभ नाम थिए । फेरि ती सबै पाँचै कुमारीहरू उमेरमा पनि बराबरीका थिए । मानों, ती चन्द्रमाबाट निस्किएका चाँदनी जस्तै प्रकाशमान थिए । ती पाँचै चन्द्रमा जस्तै मुख भएका, अति राम्रो केश भएका थिए र चन्द्रमाको अमृतरूपी रस भरिएका जस्ता उनका ओठ थिए । जसरी चन्द्रमाको चाँदनी सेता कमलहरूमा प्रफुल्लता सञ्चार गर्दछ, त्यस्तै गरी उनको दर्शनले हेर्नेका आँखाहरूमा आनन्दको सञ्चार हुन्थ्यो । मानों, उनीहरू सुन्दरताको डल्लोबाटै पैदा भएका जस्ता अति राम्रो रूप

भएका, हेरिरहौँ जस्ता थिए । उनका कुचकुम्भ गोल-गोल र उठेका ठाडा थिए, मानौं, ती वैशाख महीनाका कमल जस्तै लाग्दथे । नयाँ पालुवारूले शोभिएको लहरो झैं नयाँ यौवन छचल्किएर ती अत्यन्तै सुन्दर थिए । तिनीहरू पहेंलो मिसिएको सुन जस्तै गोरा थिए, यसैकारण, उनको चमक पनि सुनको जस्तै थियो । ती सुनकै अलङ्कारले शोभिएका थिए । तिनीहरूले सुनले बनेका चम्पाका फूलको माला लगाएका थिए, अनि सुनकै वर्णका गुनकेशरीका फुलेका लहराले चुल्ठो सजाएका थिए, अनि सुन जस्तै चम्कने सुन्दर वस्त्र धारण गरेका थिए । ती सबै सातै स्वर-समूहमा, हावभावमा, नाना प्रकारका मूर्च्छना यानि स्वर-विशेषमा, ढोलकमा ताल दिने विनोदमा, बाँसुरी मुरली वीणा बजाउनमा, भिन्न-भिन्न स्वरमा मादल बजाउनमा, नाना भाँतीका नाच नाच्नमा, विविध प्रकारका चित्र बनाउने लहडमा, त्यस्तै; अनेक किसिमका कलाहरूमा निपुण थिए । त्यस्ता प्रकारका ती कन्याहरू कुनै वेला वनक्रीडामा मुग्ध थिए । ती कन्या आफाफ्ना पिताहरूले पालिएका भएर पनि कुबेरका बगैंचाहरूमा डुलफिर गर्थे । यस्तैमा, एकासमयमा लहड़ले नै ती पाँचै

कन्या मिलेर वैशाख महीनामा यौटा वनबाट अर्को वनमा जाँदै पारिजातका फूलहरू टिप्ने बटुल्ने गर्थे ।

यस्तैमा कुनै एकदिन ती सुन्दरी कन्याहरू गौरीको आराधना गर्नका लागि कुनै स्वच्छ सरोवरमा गए । फेरि तिनीहरूले त्यस तलाउ यानि सरोवरबाट राम्रा-राम्रा सुनका कोस जस्ता कमलका फूलहरू टिपेर, ती राम्रा फूलहरू लिएर, वैदूर्यमणि तथा शुद्ध स्फटिक र सफा स्वच्छ मूगा जस्तो जल भएको तलाउमा न्वाहेर, अर्को वस्त्र पहिरेर अनि चुपचाप त्यहाँको सुन मिलेका बालुवाहरूको भूइँमा सानो ढिस्को उठाएर पार्वतीको मूर्ति बनाउँदा भए । अनि केशर मिलेको सेतो चन्दनले सिंगारिएकी ती पार्वतीलाई राम्रा-राम्रा कमलका फूलहरूले र नाना प्रकारका उपचार धूप-दीप-नैवेद्य आदिले पूजा गरेर, अत्यन्त भक्तिभावले भरिएका ती कुमारीहरू नाना प्रकारका ताल यानि बाजाको ध्वनिपूर्वक त्यतिखेर त्यहाँ नाच्ता ती मृगनयनीहरूले गान्धार स्वरको आश्रय अर्थात् उत्थान गरेर खूब राम्रो स्वरले तीखो ध्वनि भएको मूर्च्छना नामको ध्वनिपूर्वक गीत गाए । त्यस गीतको वाक्यविन्यासः राम्रो प्रबन्ध भएको सुरिलो स्वरको अति उत्तम थियो । हर्षको रस बर्साउने

त्यो सुरिलो स्वर भएको ठाउँमा ती कन्याहरू नाचमा अत्यन्त मस्त रहेको वेलामा तब त्यो अच्छोद नामको उत्तम तीर्थमा स्नान गर्नका लागि वेदनिधि मुनिका छोरा प्रसीद बेटा उहाँ आए । उनको रूपले रूपको सीमालाई नाघेको थियो, उनको मुखमण्डल अत्यन्त राम्रो थियो, उनका आँखा कमलका फूलको पात जस्ता विस्तृत थिए, उनी युवा अवस्थाका थिए, उनको छाती चौड़ा थियो, उनका हात लामा-लामा अति सुन्दर थिए, उनी क्यै श्याम वर्णका थिए, मानों, उनी दोस्रो कामदेव नै हुन् कि जस्ता थिए ।

उनी ब्रह्मचारी थिए, उनको शिरमा यामानको टुप्पी शोभायमान थियो, हातमा दण्ड लिएका उनी मानों धनुष लिएका कामदेव जस्तै थिए। उनले मृगचर्मका वस्त्र धारण गरेका थिए, जनै पहिरिएका थिए, सुन जस्तो चम्किने मूजको मोटो कन्धनी पनि कम्मरमा धारण गरेका थिए । त्यहाँ त्यस तलाउको तटमा ती बालाहरूले ती ब्रह्मचारी बटुकलाई एकाएक देखेर आश्चर्यले चकित भएका छँदा अत्यन्त रमाए र हाम्रो आँखाको अतिथि-समान यो को होला ! भनिठानेर टोहलाउँदै सोच्न थाले । अनि ती बालाहरूले आफ्नू नाचगान छोडेर तिनैलाई एकटकले हेर्दाहेर्दै व्याधाले

हरिणीहरूलाई वाणले वेधे- झैँ तिनीहरू पनि कामका वाणले बेधिए । उनलाई देखेर लट्ठ भएका ती पाँचैओटी कन्या ती जवान ब्राह्मण 'कामदेव' पो हुन् कि भन्ने भ्रममा परे र हड़बड़ाउँदै 'हेर–हेर' यस्तो भन्न थाले । अनि आफ्ना कमल-कोस जस्ता बड़ा-बड़ा आँखाले बारम्बार तिनलाई मनमनै पूजा गरेर अर्थात् हेरिरहेर त्यसपछि ती कन्याहरूले परस्परमा विचार गर्न लागे- । यदि यो पुरुष कामदेव नै भएको भए रतिलाई साथमा नलिई किन घुम्थे ! यदि यी अश्विनिकुमार दौंता भएका भए निश्चय नै ती दुवै भाइ साथैमा रहन्थे । त्यसकारण, कि त यी गन्धर्व हुन् अथवा कुनै किन्नर हुन् अथवा इच्छानुसारको रूप धारेका कुनै सिद्ध हुन् अथवा यी कुनै ऋषिपुत्र हुन् अथवा कुनै उत्तम पुरुष नै हुन् अथवा यो कोही होस्, पक्कै पनि ब्रह्माजीले हाम्रै लागि सृष्टि गरेका हुन् । जस्ता प्रकारले भाग्यमानीहरूको लागि पूर्वजन्मका कर्मानुसार खजाना प्राप्ति हुन्छ, त्यस्तै प्रकारले, हामी कुमारीहरूका लागि कल्याणरूपी जलको तरङ्गको लहरले चित्त पग्लेकी पार्वतीले यो उत्तम वर पठाइएको हो । त्यसकारण, यस वरलाई मैले वरेँ, तैँले वरिस् त मैले पनि वरेँ, तिमीहरूले

मात्रै वर्ने ? मैले पनि वरेँ, म किन छोडूँ ? मैले पनि वरेँ, तिमीहरूभन्दा म के कम छु ? लौ, मैले पनि वरेँ भन्दै यस्ता प्रकारले ती पाँचैओटीले परस्परमा बोलिरहेको वेलामा त्यहाँ तिनीहरूको त्यस्तो कुरो सुनेर ती महर्षिकुमारले आफ्नू मध्याह्नको नित्यक्रिया सकेर, अनि ती बटुक प्रसीदले पनि तिनको कुरो आफ्नू हृदयमा विचारेर 'यो विघ्न आइलाग्यो' भन्ने ठाने । किनकि ब्रह्मा-विष्णु-महादेव आदि देवताहरू, पहिलेका जो सिद्ध मुनिहरू अनि ती योगबल भएका योगीहरू पनि अबला युवतिहरूको त्यो अद्भुत लीलाद्वारा मोहित गरिइसकेका छन् । धनुषधारी कामदेवले आँखीभुइँरूप बलियो धनुबाट छाडेका युवतिहरूको नेत्ररूपी तीखा वाणले हानिएपछि कसको मनरूपी मृग ढल्दैन र ! नीतिपूर्वकको धैर्य तबसम्म मात्रै रहन सक्छ, तबसम्म मात्रै जनताको भय भइरहन्छ, तबसम्म मात्रै चित्त अत्यन्त दृढ रहन्छ, तबसम्म मात्रै कुलको ख्याल रहन्छ, तबसम्म नै तपको तुजुक रहन्छ, तबसम्म मात्रै मनुष्यले यम-नियम आदिको पालन गर्न सक्छ जबसम्म अत्यन्त नसिला ती वनिता युवतिहरूको कर्के हेराइरूपी वाणले मनुष्य मोहमा पर्दैन अर्थात् बेहोशिदैन । युवतिहरूको

मीठा मनोहर नखराले विषयमा हिरिक्क हुने जनहरूको मनलाई मोहित गराउँछन्, एकदम उन्मत्त बनाउँछन् । तसर्थ, यी अहिले मलाई पनि मोहमा पार्दछन् र पक्कै पनि उन्मत्त बनाउँछन् । तसर्थ, अब कुन उपायले मेरो यो आश्रमधर्मको रक्षा हुन सक्छ ? मासु-रगत-मल-मूत्रले बनेको अति अपवित्र घिनलाग्दो स्त्रीहरूको शरीरमा सुन्दरता-को कल्पना गरेर एकदम मूर्ख मूढ़ चित्त भएका कामुकहरूले झैँ संयमी धीर विचारवान् जनले तिनमा लट्ठिएर रमण गर्नु हुँदैन । किनकि निर्मल बुद्धि भएका विद्वान्हरूले स्त्रीहरूको संसर्ग नै आश्रमधर्ममा रहनेहरूका लागि भयङ्कर हुन्छ है ! भनेर बताएका छन् । त्यसकारण, जबसम्म यी मेरा समीपमा आइपुग्दैनन्, तबतकैमा म घर गइहाल्छु भन्ने विचार आफ्नू मनमा खेलाउँदै थिए कि उत्लिखेरै ती कन्याहरू ती प्रसीद ब्रह्मचारीको नगीचै गएर आफाफ्ना दायाँ-बायाँ हातको बन्धनले अँगालो हाले, अनि विनयपूर्वक बिन्ती गरे- 'हे सुन्दर ! हामीहरूद्वारा निश्चय नै तपाईं वरिनुभयो, यसकारण, यस विषयमा तपाईंको विपरीत विचार नहोस् ।

ती कन्याहरूले यस्ता प्रकारले विनय गरिएका

तथा तिनका बाहुपाशमा बाँधिएका ती प्रसीद ब्राह्मणले मुस्कुराउँदै भने- 'तिमीहरू शुभ, अनुकूल र प्रियवचन भनिरहेका छौ, किन्तु गुरुकुलमा ब्रह्मचर्याश्रममा रहेको अनि वेदको अभ्यासमा तल्लीन भएको मेरो नियम अझै समाप्त भएको छैन, जुन आश्रममा जो धर्म छ, त्यसलाई पण्डितहरूले रक्षा गर्नुपर्दछ । यसकारण, हे कन्या हो ! अहिले यो विवाह गर्नु मेरो धर्म हैन भन्ने म ठान्दछु ।' ती ब्रह्मचारी बटुक प्रसीदको यस्तो कुरो सुनेपछि तब ती कन्याहरूले वैशाखमा साफ गलाले मीठो ध्वनि बोल्ने कोइलीहरूले बोले-झैँ तिनलाई मीठो बोलीले भने- धर्मले धन, धनले गृहस्थाश्रम, गृहस्थाश्रमले धर्मका फलको उदय हुन्छ भन्ने शास्त्रहरूको यही नै निश्चय छ भनी विद्वान्‌हरूले ठोकुवा गरेका छन् । धर्मको अधिकताको उही गृहस्थाश्रम जमाउने काम तपाईँका सम्मुख उपस्थित भएको छ । यसकारण, विविध प्रकारका भोगहरूले उसको उपभोग गर्नुपर्छ, तब यो भूमि नै स्वर्गभूमि जस्तै हुन्छ ।

तिनीहरूको त्यस्तो वचन सुनेर ती प्रसीद ब्रह्मचारीले गम्भीर वाणीले भने-तिमीहरूको कुरो साँचो हो, किन्तु म गुरुकुलको आफ्नू नियम

समाप्त गरेर, गुरुको आज्ञा पाएर मात्रै अनि सबै विवाह आदि कर्म गर्नेछु, त्यसै बीचमै आफै बाठो भएर विवाह म गर्दिनँ । उनले यति भनेपछि फेरि ती कन्याहरूले 'हे सुन्दर ! तपाईं सचमुच मूर्ख प्रतीत हुनुहुन्छ'- भने । दिव्य औषधि, दिव्य रसायन, खानीको सिद्धि, उत्तम कलाहरू, सुन्दरी स्त्रीहरू, मन्त्र तथा धर्मबाट प्राप्त भएको धर्मको रस पनि जब यी स्वयं प्राप्त हुन्छन् त बुद्धिमान्ले यस्ता कुराहरूलाई छोड्नु हुँदैन । संयोगले नै यदि कार्यको सिद्धि प्राप्त भयो भने नीति जान्ने व्यक्तिले त्यसमा उपेक्षा गर्नु हुन्न, किनकि उपेक्षा गर्नाले फेरि फलको लाभ हुँदैन । त्यसकारण, दीर्घसूत्री बनेर आलस्य वा टाल-मटोल गर्नु राम्रो ठानिन्न । गाढा प्रेम गर्नेवाला, निर्मल कुलमा जन्म लिएका, स्नेहले चित्त पग्लिएका, बोलीचाली र चालचलन राम्रो भएका, स्वयं वर वरण गर्न तम्सिएका, राम्रा अनि रूपले धप्प बलेका कुमारी कन्याहरूलाई त यस ब्रह्माण्डमा भाग्यशाली मनुष्यहरू मात्रै प्राप्त गर्दछन्, अरूले पाउन सक्तैनन् । विचार्नुहोस् त, कहाँ हामी अति सुन्दरीहरू, कहाँ तपाईं तपसी बटुक, अर्थात् तपाईंमा र हामीमा परस्परमा ठूलो फरक छ ।

साँचै हो; यस्तो नहुने कुरालाई पनि हुने गराउनमा विधाता अति पण्डित यानि जान्ने छ भन्ने कुरो हामी मान्दछौँ । त्यसकारण, जसरी हुन्छ यतिखेर तपाईँ हामीलाई गान्धर्व विवाहद्वारा स्वीकार गर्नुहोस्, यसैमा हाम्रो कल्याण छ, हैनभने आकुलिएका हामी अब जीवित रहन सक्तैनौँ ।

तब तिनीहरूको त्यस्तो कुरो सुनेका, धर्म जान्नेहरूमा श्रेष्ठ ती प्रसीद ब्राह्मणले भने-'हे मृगनयनी हो ! धर्म नै धन भएका मनुष्यहरूले धर्मलाई कसरी त्याग्ने ? धर्म-अर्थ-काम-मोक्ष यी चारैलाई यथोक्त विधिले सेवन गरे मात्र यी सफल हुन्छन्, हैनभने निष्फल हुन्छन् । यतिखेर म व्रती छु, यसकारण, व्रत पूरा नगरीकन विना-समयमा स्त्रीको पाणिग्रहण या स्त्रीग्रहण गर्दिनँ । किनकि जो मनुष्य क्रियाको समय जान्दैन, उसले क्रियाको फल पाउँदैन । त्यसकारण, यस समयमा मेरो मन धर्मको विचारमा लागेको छ, तसर्थ, हे कन्या हो ! सुन, यतिखेर म स्वयंवर गर्न चाहन्नँ । किनकि यस विश्वमा कति मनुष्यहरू द्रव्य-धनी, कति विद्या-धनी, कति सिद्धि-धनी, कति योग-धनी, कति कीर्ति-धनी हुन्छन् त कति संयम-धनी, कति धर्म-धनी हुन्छन् । ती-मध्ये म धर्म-

धनी हुँ, आफ्नू धर्म छाडेर, आफ्नै मनले, गुरुजनको आज्ञा नपाईकन म कसैको पाणिग्रहण गर्दिनँ ।

यस्ता प्रकारको ती प्रसीद बटुकको आशय जानेर उनको हातबाट आफ्नू हात छुटाएर अनि उनीहरूले आफ्ना परस्परमा हेराहेर गरे । तब प्रमोदिनीले ती बटुकको गोड़ो पक्री, त्यसै गरी सुशीला र सुस्वराले उनको हात पक्रे, सुताराले अँगालो हाली र चन्द्रिकाले उनको मुख चुमी । तथापि त्यस स्थितिमा पनि ती ब्रह्मचारी जस्ताका तस्तै कामविकारले रहित भै, निर्विकार नै रहे र प्रलयकालको अग्नितुल्य अत्यन्त क्रोधले चूर भएका ती ब्रह्मचारीले अटेरी ती कन्याहरूलाई यस्तो सराप दिदा भए- "जसरी पिशाचिनी जस्तै भएर तिमीहरू ममा टाँसियौ, त्यसरी नै तिमीहरू पिशाचिनी भए ।" यस्ता प्रकारले प्रसीद ब्रह्मचारीले सरापिएका ती कन्याहरू तुरुन्तै उनलाई त्यागेर ती ब्रह्मचारीका सामु खड़ा भएर भने- "हे पापी ! हामी निरपराधिनी जनमा तिमीले यो के गर्‍यौ ? प्रिय कार्यको बदला अप्रिय कार्य गर्‍यौ, तिम्रो यो धर्मज्ञानलाई धिक्कार छ । जो मनुष्य आफ्ना अनुरागी भक्तजनहरूमा, मित्रजनहरूमा द्रोह गर्दछन्, त्यस्ता पुरुषहरूको दुवै लोकमा सुख

नाश हुन्छ भन्ने कुरो हामीले सुनेका छौं। त्यसकारण, तिमी पनि हामीहरूको श्रापले तुरुन्तै पिशाच होऊ।"

यति भनेर चुप लागेका ती बाला कन्याहरूले 'खुय्य-खुय्य' गर्न लागे तथा भोक-प्यासले आकुल-व्याकुल भए। हे शिवभट्ट ब्राह्मण! तब परस्परमा श्रापाश्राप गरेर त्यसै तलाउका तीरमा ती कन्याहरू र त्यो प्रसीद ब्रह्मचारी पनि सबै छःवै जना पिशाच भएर रहँदा भए। तब उस पिशाचका साथै ती पिशाचिनीहरू पनि पहिले गरेका पापकर्मको त्यो भयङ्कर फललाई रुँदै कराउँदै बिताउन लागे। हे शिवभट्ट! पूर्वजन्ममा अर्जित गरिएको शुभ वा अशुभ कर्मको फल समय आएपछि भोग्नैपर्छ, त्यसलाई देवताहरूले पनि आफ्नू छायालाई झैं निवारण गर्न यानि हटाउन सक्तैनन्। त्यसपछि ती कन्याहरूका र उस ब्रह्मचारीका आमा-बाबु रुँदै तड्पदै हिड्थे। प्रारब्धको भोग अमिट हुने हुनाले ती बालाहरूलाई र उस ब्रह्मचारीलाई पनि चैन थिएन।

पिशाच भएपछि ती पिशाचहरू आहाराका लागि अत्यन्त दुःखी भएर त्यसै तलाउको किनारमा यताउति भट्कँदै बस्तथे। यस्तै प्रकारले धेरै

समय बितेपछि मुनिहरूमा श्रेष्ठ लोमशजी पूस महीनाको शुक्ल चतुर्दशीको दिन अच्छोद तालमा स्नान गर्नका लागि त्यहाँ आए । तब ती ब्राह्मण लोमशलाई देखेर भोकले आकुल भएका ती सबै पिशाचहरू एकजुट भएर उनलाई मार्ने इच्छाले उनीतिर दौडे । किन्तु लोमशजीका अति कडा तेजले भत्भत पोलिएका ती उनको अगाडि नगीचै रहन असमर्थ भएर सबै टाढै रहे । त्यसै वेला त्यहाँ वेदनिधि नामका ब्राह्मण टुप्लुक्क आइपुगे । हे शिवभट्ट जी ! अनि उनले लोमशजीलाई देखेर साष्टाङ्ग प्रणाम गरेर यानि उनका पाउमा ढोगेर उभिई हात जोडेर शिर झुकाएर मीठो बोली बोले- 'हे ब्राह्मण ! हे महर्षि ! ठूलो भाग्य उदाएपछि नै सज्जनहरूको सङ्गति यानि भेट हुन्छ । गङ्गा आदि गरिएका सबै तीर्थमा जो मनुष्य सधैँ न्वाहुँछ, अनि जो मनुष्य सज्जनहरूको सङ्गत गर्छ, ती दुवैको सत्सङ्गत गर्नु बड़ो उत्तम ठानिन्छ । हे ब्राह्मण ! गुरु अर्थात् महात्माहरूको समागम पृथ्वीतलमा दृष्ट वा अदृष्ट फल दिनेवाला हुन्छ, अर्थात् स्वर्ग दिनेवाला या रोग हर्नेवाला हुन्छ, किन्तु त्यसमा धेरै विघ्न-बाधा पनि हुन्छन् ।'

यति भनेर वेदनिधिले ती पिशाचहरूको पहिले

घटेका उनीहरूको अद्‌भुत वृत्तान्त बताए । यी उभिएका सबै तिनीहरू गन्धर्वकन्या हुन् र त्यो उभिएको यो बटुक चाहिँ मेरो छोरो हो । यी सबै नै परस्परमा सरापासराप गरेर, पिशाचरूपले मलिन अनुहार पारेर, हे मुनिहरूमा श्रेष्ठ लोमशज्यू ! तपाईँका अगाडि उभिएका छन् । अब आज तपाईँका दर्शनले यी कुमारीहरूको र त्यस कुमारको पनि उद्धार हुनेछ । के सूर्योदय भएपछि पनि अन्धकारको राशि गुफामा घुस्तदैन र ?'

हे शिवभट्ट ! त्यो कुरो सुनेर दयाले मन पग्लिएका अत्यन्त तेजस्वी लोमश ऋषिले पुत्रको दुःखले दुःखित ती मुनि वेधनिधिलाई भने- 'मेरा कृपाले यी बाला कन्याहरूलाई र त्यस बटुकलाई पनि तुरुन्तै पूर्वस्मृति प्राप्त हुनेछ र जसले तिनको परस्परको श्राप नाश हुन्छ, त्यो त्यस्तो धर्म पनि म बताउँछु' भनी लोमशले भन्नुभयो-'अब यिनीहरू मेरा साथ रहेर विधिपूर्वक माघभरि नै माघस्नान गरून् । माघभरिको स्नानले मात्र माघको अन्तमा श्रापबाट छुट्न सक्तछन्, हैनभने, अरू उपायले यिनको उद्धार हुन सक्तैन । हे वेदनिधि ! श्रापरूपी पापको फल र मनुष्यहरूको पापको नाश तीर्थमा माघस्नान गर्नाले मात्रै हुन्छ, मेरो यस्तो निश्चित

बुद्धि यानि निश्चय छ । सात जन्मदेखिको पाप र वर्तमान जन्ममा गरिएको महापाप पनि विशेष गरेर पुण्य-तीर्थमा गरिएको माघस्नानले सारा डढ्छ अर्थात् नाश हुन्छ । मुनीश्वरहरू जुन पापको कुनै प्रायश्चित्त देख्दैनन्, त्यस्तो पाप पनि पुण्यतीर्थमा माघस्नान गर्नाले नाश हुन्छ भन्दछन् । जानी-जानीकन आफ्नै मनले कोही जन माघस्नान गर्छ भने त्यस स्नानले त्यो मोक्षफलको भागी हुन्छ । हिमालयको पर्वतीय प्रान्तमा रहेको तीर्थमा अर्थात् देउघाटको त्रिवेणीमा गरिएको माघस्नान सारा पाप नाश्ने हुन्छ । त्यसकारण, अब यी कन्याहरू र तिम्रो त्यो छोरो तथा तिमी पनि सबै सद्गति चाहनेहरू मेरा साथ देउघाटको त्रिवेणीमा हिंड़ । त्यहाँ देउताहरूलाई पनि दुर्लभ हुने माघस्नान माघभरि सबै एकैसाथ गरौं, त्यहीं नै पापबाट उत्पन्न भएको यो पिशाचत्वबाट यिनीहरू तुरुन्तै छुट्कारा पाउनेछन् ।

यति भनी भोलिपल्टै ती सबै अत्यन्त खुशी हुँदै लोमशका साथ उनका कृपाशक्तिले आकाशमार्गद्वारा देउघाटका लागि अच्छोदबाट प्रस्थान गरे र उसै दिन, दिन क्यै बाँकी छँदै, उहाँ पुगी तीर्थयात्रीहरूलाई बनाइराखिएको छाप्रोमा

डेरा जमाए । लौ अब, पिशाचत्वबाट मुक्ति चाहने यी कन्याहरू र तिम्रो यो छोरो पनि अनि तिमी पनि सबैले मेरो भनाइ-अनुसार यस त्रिवेणीमा मेरा साथै सधैँ मकर राशिमा सूर्य रहुञ्जेल न्वाहो । यस त्रिवेणीका जलका प्रभावले पहिले-पहिलेका सारा पाप नष्ट हुन्छन् भनी तिनीहरूलाई माघभरि त्रिवेणीमा न्वाहुन लाए त माघको अन्तमा ती सबै पिशाचत्वबाट छुटेर पहिलेकै रूपमा अर्थात् पहिले जस्ता थिए उस्तै रूपमा, उस्तै भेषमा प्राप्त भए । तब वेदनिधिले आफ्नू छोरोलाई र ती दिव्य रूपका कन्याहरूलाई देखेर भित्रैदेखि प्रसन्न चित्त भएका छँदा श्रद्धापूर्वक लोमशको स्तुति गरे र भने- 'तपाईँको कृपाले मात्रै पापरूपी समुद्रबाट यिनीहरूले पार पाए । हे ऋषिहरूमा श्रेष्ठ प्रभु ! अब यी बाल-बालिकाहरूलाई के गर्ने ? यसबारे उचित कुरो आज्ञा होस् ।' तब लोमशले भन्नुभयो- 'यो कुमार वेद पढिसकेको र आश्रमको नियम पनि पूरा गरिसकेको पट्ठो छ । तसर्थ, अब यो केटो आफूमा प्रेम गर्ने यी पाँचैओटीको करकमल पक्रोस् अर्थात् पाणिग्रहण गरोस् ।'

त्यसपछि लोमशका आज्ञाले र अनि आफ्ना बाबुको वचनले विवाहका लागि चाहिने आवश्यक

शुभ वस्तुहरूले र त्यहाँका रैथाने ऋषिहरूद्वारा पढ़िएका वेदमन्त्रका ध्वनिहरूले मङ्गलाचार गरिएको त्यो धर्मात्मा ब्रह्मचारीले विवाहको विधिले तुरुन्तै त्यहीँ धर्मपूर्वक ती पाँचैओटी कन्याहरूको हात पक्रियो अर्थात् तिनीहरूसित विवाह गर्‍यो । तब आफाफ्नू मनोरथ पूरा भएका ती सबै कन्याहरू आनन्दले मस्त हुँदा भए । त्यो पट्ठो कुमार पनि प्रसन्न भयो । त्यसपछि ती वर-वधूलाई गार्हस्थ्य धर्मको शिक्षा र परस्परमा सरापासरापका कारणले मात्रै प्राप्त भएको यो संयोगको फल र मेरा आशीर्वादले प्राप्त भएको सारा ऐश्वर्य प्राप्त गर अनि यस्तै रूप-रङ्ग उमेरमै रहेर यस्तै रहिरहेको यस पतिका साथ आउने प्रलयकालसम्म रहिरहो भन्ने आशीर्वाद दिएर हिड्न लाग्दा ती वर-वधूहरूद्वारा र वेदनिधिले श्रद्धा-भक्तिपूर्वक नमस्कार-प्रणाम-ढोग गरिएका ती लोमश ऋषि पनि द्यौताहरूले निवास गरिएको मेरु पर्वतको आफ्नू आश्रममा जाँदा भए । अनि वेदनिधि पनि पाँचोटी बुहारी र छोरोलाई अगि लाएर हर्षित हुँदै कुबेरको नगरी अलकापुरीमा गए ।

विवाह भएको सात वर्षसम्म पनि ती परीहरूमा सन्तान नभएकोले तब फेरि अच्छोदमा मकरस्नान

गर्न आएका लोमश ऋषिभाठैँ ती पाँचै परीहरू पतिसहित गएर उनलाई ढोगी आफ्नू दुःख-हवाल बिन्ती चढाए त लोमश ऋषिले उनीहरूलाई भन्नुभयो-सन्तानका लागि अब तिमीहरू सबैले पतिका साथै यसै अच्छोदमा लगालग तीनोटा माघका मकरस्नान विधिपूर्वक गर्नुपर्छ, अनि मात्रै तिमीहरूलाई सन्तान हुनेछन् ।

लोमशका आज्ञा-अनुसार उनले बताएबमोजिम उनीहरूले तीनोटा मकरस्नान गरेपछि तिनले घ्याल्घ्याल्ती छोराछोरी पाए । तसर्थ, हे शिवभट्ट ब्राह्मण ! तिमी पनि यो देउघाटको त्रिवेणीमा विधि-नियमपूर्वक पत्नी-सहित भई लगालग तीनोटा माघभरिभरि मकरस्नान गर त अनि म तिमीलाई आकाशमा सूर्य-चन्द्र रहुञ्जेल नाउँ चलिरहने सन्तान दिनेछु । यति भनी सिद्धिविनायक चुप लागे ।

हे अगस्त्य मुनि ! तब सिद्धिविनायकले बताएबमोजिम शिवभट्टले विधि-विधानसहित मकर राशिमा सूर्य सरेको दिन माघेसंक्रान्तिदेखि माघमासान्तसम्म नियममा रहेर तीनोटा माघस्नान पूरा गरे । देउघाटमा माघस्नान गर्दा प्रत्येक माघका तीसै दिनसम्म नै दिनहुँ कुनै-न-कुनै वस्तु दान गर्नें गर्थें । माघको पहिलो दिन माघेसंक्रान्तिमा

बिहानै त्रिवेणीमा न्वाहीध्वाई घर आई तिलका झिक्राले जीउ सेकाई, ब्राह्मण-दम्पती बोलाई, तिनलाई तिलका लड्डू, भुटेको तिलमा सक्खर घिउ हाली मुछी मुकुन्याएको तिल, भुङ्ग्रोमा पोलेको वा आगो-माथिको पानीमा उसिनेको तरुलका टुक्रा; त्यस्तै सखरखण्ड, सुथुनी, आलु, पिडालु एवं बुहोतामा भरि घिउ तथा सक्खरका डल्ला, अनि ती दम्पतीलाई नै खिचड़ी खान प्रशस्त पुग्ने गरी एक माना वा बेसी नै मसिना नयाँ चामल, त्यति नै दलेको माषको खोष्टे दाल, त्यस खिचड़ीमा हाल्न चामलको आधा नापको घिउ, अनि अरू तर्कारी अचारका लागि चाहिने सरसामानले टञ्च भएको सिधा र लाउने तयारी ऊनी कुनै लुगा वा ओढ्ना वा सूती धोती उपर्ना आदि दान दिन्थे । गरीब-गुरुवालाई पनि तिलका लड्डू र गुड़का डल्ला बाँडिदिन्थे । आशाले आउनेहरूको पनि पोल्टो भरिदिन्थे । अनि अरू प्रत्येक दिन चाहिँ दाउरा-कम्बल-वस्त्र-जुत्ता-घिउ-तेल-डस्ना-तकिया-दोलाइँ-पाखी-अन्न-सुन-कमण्डलु-अखण्डदीप तथा कङ्गालहरूलाई भोजन-लुगाफाटा-भर्भराउँदा मकल-तात्तातो दूध-हलुआ-पुरी-तयारी खिचड़ी-जुलेबी एवं जाडोले

थुर्थुराइरहेका कङ्गालहरूलाई कम्बल र खाना आदि गुप्तदान; अनि चटाई-गुन्द्री-बर्का-काने टोपी-तयारी लाउने लुगाहरूमध्ये कुनै-न-कुनै यौटा चीज बाहुनहरूलाई दान दिने र गरीबहरूलाई बाँडिदिने गर्थे ।

यसै गरी तीनोटा माघभरि-भरि मकरस्नान गरिसकेपछि लगत्तै आउँदो मङ्गलवार सिद्धिविनायकको पूजा गर्न गएका शिवभट्ट-दम्पतीले पूजा गरिसकेपछि सन्तान प्राप्तिका लागि प्रभुको आज्ञा-अनुसार तीनोटा मकरस्नान विधिपूर्वक हामीले पूरा गऱ्यौँ, हे प्रभो ! अब हामीलाई प्रभुको करार अनुसार सन्तान दिनुहओस् भन्ने प्रार्थना गरिरहेका ती भक्त शिवभट्ट-दम्पतीलाई सिद्धिविनायकले भने-'हे शिवभट्ट- दम्पती ! आजको आठौँ दिनमा बिहानै आई यसै गरी मेरो पूजा गर्नू र उसै बेला यौटी गाई आएर तिम्रो मुख हेरिरहनेछन् । तिमीले पनि गाईको मुख हेरेर पूजा गर्नू, अनि गाईले गोब्याउनेछन्, त्यो गोबर भूमिमा खस्न नपाउँदै हातमा थापी घर लैजानू र तसलामा राखी माथिबाट तसलैले छोपिदिनू । चार दिन भएपछि हेर्नू, कन्या उत्पन्न भइरहेकी हुनेछन् । छोरो भने तिमीले पूर्वजन्ममा

राखेका छैनौ ।' यति विनायकको आज्ञा सुनी शिवभट्ट ब्राह्मण र सती ब्राह्मणी सिद्धिविनायकलाई दण्डवत् प्रणाम गरी घर फिरे । उता सिद्धिविनायक पनि अन्तर्धान हुनुभयो । त्यसको आठ दिनपछि मंगलवार बिहानै समस्त पूजा-सामग्री लिई दुवै स्त्री-पुरुष सिद्धिविनायकको मन्दिरमा गई पूजा गर्न लाग्दा यौटी गाई आएर हेरिरहिन् । अनि शिवभट्टले सिद्धिविनायकको पूजा सकेर गाईको पनि पूजा गरे । तब गाईले गोब्याइन् र शिवभट्टले त्यो गोबर भूमिमा खस्न नपाउँदै हातमा थापेर सिद्धिविनायकलाई दण्डवत् प्रणाम गरी सानन्द घर आए । अनि त्यो गोबर तसलामा राखी माथिबाट तसलैले छोपिदिए । चार दिन भयो र माथिको तसला झिकी हेर्दा कन्या उत्पन्न भइरहेकी देखे । कस्ती कन्या भने-मध्याह्न कालका सूर्य जस्तै तेज भएकी, पूर्णचन्द्र जस्तै मुख-मण्डल भएकी, वासुकिनाग झैं हात-पाउ भएकी र बाघको जस्तै कम्मर भएकी, सावित्रीका जस्तै पैताला भएकी त्यस्ती परमसुन्दरी कन्या देखेर शिवभट्ट र सती अत्यन्त हर्षित भई तसलाबाट झिकेर निदान गरी (राम्रो सुरक्षा गरी) पाले । त्यस बालिकालाई खान दूध भएन र फेरि सिद्धि-

विनायकको मन्दिरमा गई पूजा गरे । अनि गणनाथ प्रसन्न भई- 'हे शिवभट्ट ब्राह्मण, हे सती ब्राह्मणी ! के भन्ने इच्छा छ भन ।' यस्तो आज्ञा भएको सुनी शिवभट्ट बिन्ती गर्दछन्-' हे गणनाथ ! हजुरको कृपाले सन्तान पाएँ, तर त्यस बालिकालाई खान दूध भएन, त्यही बिन्ती गर्न आएको हुँ ।' यति सुनेर 'त्यस बालिकालाई दूध दिएँ, जाऊ' भनेर सिद्धिविनायक अन्तर्धान हुनुभयो । अनि सतीले आफ्ना स्तन निचोरी हेर्दा दूध आयो र त्यस बालिकालाई खान दिई बढाइन् ।

जस्तै; सीताजी उत्पन्न हुँदा राजा जनकलाई आनन्द भएथ्यो, त्यस्तै ती बालिका उत्पन्न हुनाले शिवभट्ट र सतीलाई आनन्द भयो । त्यसपछि योग्य ब्राह्मणहरू डाकी नामकरण संस्कार गराए । ती ब्राह्मणहरूले भने- 'हे शिवभट्ट ! गाईको गोबरबाट उत्पन्न भएकी हुनाले यी बालिकाको नाम 'गोमा' भयो र यी बालिका भाग्यमानी हुनेछन् । सम्पूर्ण लोकले सम्मान गर्नेछन् ।' यति ब्राह्मणहरूले भविष्यवाणी गरेपछि शिवभट्टले यथेष्ट भोजन र दक्षिणा दिई बिदा गरे । आगन्तुक सबै ब्राह्मणहरू आफाफ्ना आश्रममा गए । त्यसपछि ती गोमा नामकी कन्या शुक्लपक्षका चन्द्रमा झैं प्रतिदिन

बढेर पाँच वर्षकी भइन् । अनि शिवभट्ट ब्राह्मण र सती ब्राह्मणीले एकदिन कन्यालाई भने- 'हे पुत्री ! हामी गंगास्नान गरेर आउँछौं, तिमी पूजाको निम्ति अक्षता केलाइराखे' भनी अह्राएर दुवै दम्पती नित्य गंगास्नान गरेर हरि-हरको पूजा गरी सुवर्णादि नाना द्रव्य दान गरेर आउँथे । त्यही क्रमले दान गर्दा-गर्दा अमरावती थक्र्यो र देवराज डराई समस्त देवता साथमा लिई कैलासमा श्री महादेवकहाँ गएर बिन्ती गरे- 'हे ईश्वर ! मर्त्यमण्डलको हिमालयको पर्वत-शृङ्खलाको दक्षिण भागमा यौटा ब्रह्मपुर भन्ने नगर छ । त्यहाँ शिवभट्ट नामका ब्राह्मण र सती नामकी तिनकी पतिव्रता स्त्री छन् । ती दुवै स्त्री-पुरुषले हजुरका पुत्र सिद्धिविनायकको सेवा गरे र सिद्धिविनायक खुशी भई असंख्य सम्पत्ति दिए । ती शिवभट्टले सम्पत्ति पाएपछि नित्य गंगास्नान गरेर हरि-हरको पूजा गरी सुवर्णादि नाना द्रव्य दान गर्नाले अमरावती थर्कियो । हे शम्भो ! म अरू पनि बिन्ती गर्दछु- ती शिवभट्टले सम्पत्ति पाएपछि सन्तान भएनन् भनी फेरि सिद्धिविनायकको सेवा गरे । तब सिद्धिगणेशजी खुशी भएर सकल लक्षणाले युक्त भएकी परम सुन्दरी यौटी कन्या

पनि वरदान दिए । हे प्रभो ! हामीहरूको रक्षा गरिबक्सियोस् । हजुरले रक्षा नगरे अमरावतीबाट हामीले च्युत हुनुपर्नेछ ।

यति इन्द्रको प्रार्थना सुनी महादेव आज्ञा गर्नुहुन्छ- 'हे देवेन्द्र ! नडराऊ, म रक्षा गर्नेछु । अब सबै अमरावती जाओ ।' शिवजीको त्यस्तो आज्ञा सुनी उहाँलाई दण्डवत् प्रणाम गरी सुरराज इन्द्र अमरावती फर्के । त्यसपछि महादेवले भिक्षुकरूप धारण गरी देवताको रक्षाका निमित्त जटाको मुकुट बनाई, बायाँ हातमा त्रिशूल र दाहिना हातमा डमरु लिई भस्म लेपन गरी शिवभट्ट ब्राह्मणको घर पुगी भिक्षा माग्नुभयो । गोमा आफ्ना पिताको पूजाका लागि अक्षता केलाइ-रहेकी थिइन् । निकै बेरपछि- 'हे भिक्षुक ! मेरा माता-पिता गंगास्नान गर्न गएका छन्, म अक्षता केलाउँदै छु, एकैछिन पर्ख, भिक्षा दिने अरू कोही छैनन् ।' यति भनेर पर्खाइराखिन् । अनि अक्षता केलाइसकेर भिक्षा लिई भिक्षुकरूप श्री महादेवछेउ आई - 'हे भिक्षुक ! मेरा माता-पिता घरमा छैनन्, म अक्षता केलाउँदै थिएँ, त्यसैकारण विलम्ब भयो, दुःख नमान, भिक्षा लेऊ' भनिन् । गोमाको यति कुरा सुनी भिक्षुकरूप महादेव भन्नुहुन्छ- 'हे

ब्राह्मणी ! यतिका बेर पर्खाई बल्ल अब भिक्षा दिन आइस्, म त्यो भिक्षा लिन्नँ, दिने भए तेरा बाबाको पूजा गर्न केलाइराखेको अक्षता दे !' यति भिक्षकरूप महादेवको वचन सुनी गोमाले-

भिक्षुकरूप श्रीमहादेवले गोमालाई श्राप दिनुभएको

'लिने भए भिक्षा लेऊ, नलिने भए अक्षता त म दिने होइन' भनिन् । गोमाको त्यस्तो वचन सुनेर रिसाएका महादेवले- 'हे पापिनी ब्राह्मणी ! तैँले अहंकार गरेर मलाई भिक्षा दिइनस्, अतः तँलाई श्राप दिन्छु- तँ सात वर्षकी हुँदा सत्तरी वर्षको बूढोसित तेरो विवाह होस् । फेरि तेरा माता-पिताले महाकष्ट सही सिद्धिविनायकको सेवा गरेर पाएको सबै सम्पत्ति पनि नाश होस् । फेरि तँलाई पनि अनेक थरिका दुःख आइपरून् । फेरि तेरा माता-पिता पनि चाँडै नै मरिजाऊन् । यति चार थोक

तँलाई श्राप दिएँ ।' यति भनी त्यो भिक्षा पनि नलिई त्यहाँबाट अन्तर्धान भई कैलासमा पुग्दा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां गोमोत्पत्तिर्नाम विंशोऽध्यायः ।।२०।।*

काशी उत्तर वाहिनी गंगामा पंचगंगा स्नान

# अथ एकविंशोऽध्यायः

## गोमाविवाह-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! त्यसपछि भिक्षुकरूप महादेवको श्राप पाएकी गोमा चिन्तित भएर रुन लागिन् । केही बेरमा नारायणी गंगास्नान गर्न गएका माता-पिता हरि-हरको पूजा गरी सुवर्णादि अनेक द्रव्य दान गरी घर आए । अनि गोमालाई रोइरहेकी देखेर- 'हे गोमा ! किन रोएकी ? के भयो ?' भनी सोधे । तब गोमाले भनिन् - हे माता-पिता ! हजुरहरू नारायणी गंगास्नान गर्न गएपछि म अक्षता केलाइरहेकी थिएँ, अकस्मात् यौटा भिक्षुक आएर भिक्षा माँगे, म अक्षता केलाइसकेर भिक्षा दिन्छु भनी एकछिन पर्खाएँ । अनि अक्षता केलाइसकेर भिक्षा दिन गाएँ । तब ती भिक्षुकले- 'हे ब्राह्मणी ! यतिका बेर पर्खाई अहिले भिक्षा दिन आइस् ,त्यो भिक्षा म लिन्नँ । दिने भए तेरा बाबाको पूजा गर्ने, तैँले केलाइराखेको अक्षता भिक्षा दे !' भने । अनि मैले 'लिने भए यो भिक्षा लेऊ, नलिने भए अक्षता त म दिन सक्तिनँ' भनेँ र भिक्षुक रिसाई-'हे ब्राह्मणी तैँलेअहंकार गरेर मलाई भिक्षा दिइनस् !

अब म तँलाई श्राप दिन्छु- तँ सात वर्षकी हुँदा सत्तरी वर्षको बूढोसित तेरो विवाह होस् । फेरि तेरा माता-पिताले ठूलो कष्ट सही सिद्धिविनायकको सेवा गरेर पाएको सम्पत्ति सबै नाश हवस् । फेरि तँलाई पनि अनेक थरिका कष्ट आइपरून् । फेरि तेरा माता-पिता पनि चाँडै नै मरिजाऊन् । यति भनी डमरु बजाएर श्राप दिए' भनी सारा वृत्तान्त सुनाइन् । छोरीको त्यस्तो वचन सुनी शिवभट्टले भने- 'हे गोमा ! ती भिक्षुक श्रीमहादेव हुन् र तिनले दिएको श्राप लाग्छ कि लाग्दैन ? ती भिक्षुकले त्यति भने भन्दैमा रुनुपर्दैन, नरोऊ' भनी बुझाए । त्यसपछि गोमा छः वर्षकी भइन् र शिवभट्ट ब्राह्मणले आफ्नी स्त्रीसित सल्लाह गरी गोमा कन्यादान दिन भनी अनेक स्थानमा ब्राह्मण केटो खोज्न पठाए, तर जगदीश्वर महादेवले श्राप दिएको हुनाले कुनै पनि योग्य ब्राह्मण केटो पाउन सकेनन् र शिवभट्टले आफैं पनि सकेसम्म खोजी गरे, तर खोजे-जस्तो वर पाउन सकेनन् । अनि नारायणी गंगामा स्नान गर्न लागेका ब्राह्मणहरूलाई पनि हेरे, तर त्यहाँ पनि आफूले खोजे -जस्तो वर पाएनन् र हार मानी घर फर्कन लाग्दा कान नसुन्ने, कुप्रो, डेरो, आँखीभुइँ कैलो

र जोरिएको, केश सेतै फुलेको, दाह्रा निस्केको, कालो, मुखबाट तरतरी र्याल चुहुने, सत्तरी वर्षको उमेरका शिलासन गरेर सन्ध्या गर्न बसेका शिवशर्मा नामका वृद्ध ब्राह्मणलाई देखेर निकै बेरसम्म तिनैलाई हेरिरहे। शिवशर्माले सन्ध्या सकेर-'तिमी को हौ ? कहाँबाट आयौ ? मलाई किन धेरै बेरसम्म हेरिरह्यौ ?' भनी सोधे । अनि शिवभट्टले भने-'म शिवभट्ट नामको ब्राह्मण हुँ । मेरो घरमा यौटी कन्या छ, त्यसैको विवाह गर्न भनी ब्राह्मण खोज्दै हिंडेको, तर भनेजस्तो केटो कहीँ पाउन सकिनँ र घर जान लागेको हुँ । यहाँ तिमीलाई देखेर हेरेको हुँ । तिमी को हौ ?' यति शिवभट्टले भनेको सुनी शिवशर्मा भन्दछन् - 'म शिवशर्मा नामको ब्राह्मण हुँ । सोह्र वर्षको उमेरदेखि कसैले कन्यादान दिए लिन भनेर हिडेको हुँ । मलाई कन्यादान दिने आजसम्म कोही मिलेन । आज मेरो सौभाग्यले तिमीलाई भेटेँ । ईश्वरको कृपाले हामी दुवैको काम बन्ने भयो । हे पिता ! ममाथि कृपा गरी ती कन्या मलाई देऊ, सहस्र बिन्ती छ । ब्राह्मण भएर मेरो यो उमेर भयो र पनि अझसम्म विवाह भएको छैन । अब तिमीले कृपा गरे कन्यादान पाउनेछु ।' यति शिवशर्माको कुरा

सुनी शिवभट्ट भन्दछन् - 'हे शिवशर्मा ! यस्तो उमेरका तिमीलाई मेरी बालक पुत्री कसरी दिने ? फेरि तिमी यस्ता कुरूपलाई कामदेवकी स्त्री रति जस्ती मेरी कन्या अयोग्य छ ।' यति सुनेर शिवशर्मा भन्न लागे- 'हे शिवभट्ट ! त्यसो नभन, ती कन्या मलाई देऊ, तिमीले कन्या नदिए हत्या गरेर मर्नेछु ।' शिवशर्माको त्यस्ता कुरा सुनी शिवभट्ट मनमनै विचार गर्छन्- त्यसको कर्ममा त्यस्तै लेखेको रहेछ, म के गर्न सक्तछु ! उस दिन श्राप दिने भिक्षुकरूप श्रीमहादेव नै रहेछन्, उनको श्राप लङ्घन गर्न को सक्ला ? इन्द्र जस्ताले सकेनन्, रावणले पनि सकेनथ्यो भने म जस्ताले कसरी सक्ने ? यस्तो विचार गरी मनमा व्याकुल भए पनि ती शिवशर्मालाई साथै लिई घर गए । सती

शिवभट्ट ब्राह्मण शिवशर्मालाई लिएर घर आएका

ब्राह्मणीले शिवशर्मालाई साथमा लिएर आफ्ना स्वामी घर आएको देखेर प्रसन्न भई-'त्यो कसलाई डाकेर ल्याउनुभयो ?' भनी सोधिन् र शिवभट्ट भन्दछन् - 'हे सती ! यी शिवशर्मा नामका ब्राह्मण हुन् । गोमा कन्यादान दिन वर खोज्दै हिँडेको कहीँ पाउन सकिनँ र घर आउन लाग्दा यी नारायणी गंगा-किनारमा बसेर सन्ध्या गर्न लागेका रहेछन् । मलाई आएको देखेर सन्ध्या गरिसकी- 'तिमी को हौ ? कहाँबाट आयौ ?' भनी सोधे । मैले मेरो घरमा यौटी कन्या छ, कन्यादान दिन ब्राह्मण खोजी हिडेको, कहीँ पाउन सकिनँ र घर जान लागेको हुँ भनेँ । फेरि तिमी को हौ ? भनेर सोधेँ र यिनले-'म पनि ब्राह्मण हुँ, सोह्र वर्षको उमेरदेखि कसैले दिए कन्यादान लिन भनी हिँडेको, मलाई कन्यादान दिने कोही भएनन् । आज मेरो भाग्यले तिमीलाई भेटेँ । तिम्री पुत्री मलाई कन्यादान देऊ' भने । अनि मैले-'हे शिवशर्मा ! यस्ता उमेरका तिमीलाई मेरी बालक पुत्री कसरी दिने ? फेरि तिमी यस्ता कुरूपलाई कामदेवकी पत्नी रति जस्ती मेरी कन्या अयोग्य छ, यस्ता कुरा नगर भनेँ । अनि यिनले- त्यसो आज्ञा नगर, ती कन्या मलाई देऊ, नदिए

हत्या गरी मर्नेछु भनी साथ लागेर आए । यो अनर्थ हुन लाग्यो । अब गोमा कन्यादान दिऊँ कि ब्रह्महत्या लिऊँ ।' आफ्ना स्वामीको यस्ता कुरा सुनी सती भन्दछिन् - 'हे स्वामी ! यस्तो कुरा नगर ! त्यो कस्तो भने-बूढो, कान नसुन्ने, डेरो, कैला आँखा भएको, दाह्रा निस्केको, आँखीभौँ जोरिएको, केश पाकेको, र्‍याल चुहाउने र कालो यस्तालाई मध्याह्न-कालका सूर्य झैँ तेज र पूर्णचन्द्र जस्तै मुख भएकी, हात्तीको सूँढ जस्तै हात-पाउ भएकी, बाघको जस्तै कम्मर भएकी तथा सावित्रीका जस्ता पैताला भएकी, सुवर्ण जस्तो शरीर र राजहंसको जस्तै हिँडाइ भएकी, अमृत झैँ मीठो र नरम वाणी भएकी मेरी पुत्री त्यस्तालाई कसरी दिऊँ ? कसैले कन्यादान दिएन भनेर जति हत्या गरेर मर्नेछन्, के त्यो हत्या हामीलाई लाग्दछ ? कदाचित् तपाईँलाई त्यस कुराको डर छ भने, त्यो हत्या गरी मरोस् । त्यो पाप म आफ्नो कपालमा थाप्नेछु । त्यसका घुर्कीमा डराउनुपर्दैन । त्यसलाई त हजार ब्रह्महत्या लागे पनि म मेरी बालख छोरी दिनेछैन । पृथ्वीमा अरू कोही योग्य ब्राह्मण केटो छैनन् कि क्या हो ? तपाईँले खोज्न नसके म आफै

गएर खोजी ल्याउँली ।

शिवभट्टकी पत्नी सतीका त्यस्ता कुरा सुनी शिवशर्मा भन्दछन् - 'हे माता ! यस संसारमा बालक पनि छन्, वृद्ध पनि छन्, राम्रा पनि छन्, नराम्रा पनि छन्, कसैका धेरै सन्तान छन्, कसैका यौटा पनि छैनन्, कुनै पुरुषका आफूभन्दा उमेर बर्ता भएका स्त्री छन्, कुनै स्त्रीका आफूभन्दा उमेर पाकेका पति छन्, कसैका स्त्री छैनन्, कसैका पुरुष नै छैनन्, कोही निर्धन छन् त कोही धनी छन् । कुमालेको चक्र जस्तै घुमिरहेको यस संसारमा बूढो को हुँदैन र कसले मर्नुपर्दैन ? यसकारण, ती कन्या मलाई देऊ । नदिए म दुवै स्त्री-पुरुषलाई श्राप दिई प्राण त्याग्नेछु' भनी प्राण-वायु ब्रह्माण्डमा खिंची मर्न तयार भए । अनि शिवभट्ट डराई भन्दछन् - 'हे शिवशर्मा ! त्यस्तो नगर, मेरी कन्या तिमीलाई नै दिन्छु' भनी सम्झाई-बुझाई गोडा धोएर माथि लगी बिछ्यौनामा बसाले । तर सतीले भने मानेकी थिइनन् । तब शिवभट्ट सम्झाउन थाले-'हे सती ! उस दिन गोमालाई श्राप दिने भिक्षुकरूप श्रीमहादेव नै रहेछन् । अब तेत्तीस कोटि देवता हाम्रो सहाय भएर आए पनि त्यो श्राप टार्न सक्नेछैनन् । दैवले यस्तै पारेर

ल्यायो, ढिपी नगर, गोमा यिनैलाई कन्यादान गरेर दिऔँ । सामग्री तयार पार' भने । पतिको त्यस्ता कुरा सुनी सती मनमा चिन्ता र तर्क गर्न लागिन् - 'हरे ! यो के आश्चर्य ! बालक र बूढाको विवाह देख्नुपर्‍यो । निर्विवेकी विधाताले मेरी छोरीको भाग्यमा कस्तो लेखिदिएका रहेछन् ! न्वारान गर्दा सबै ब्राह्मणहरूले यी बालिका भाग्यमानी हुनेछन् र सम्पूर्ण लोकले मान्नेछन् भनेका थिए, त्यो पनि मिथ्या भयो। हामीले सकेसम्म सबैको भलो नै गरेका हौँ, आज कुन पापले यस्तो भयो ? मेरी पुत्रीलाई श्राप दिने श्रीमहादेव नै रहेछन् । यस बालकले के जान्दथी र श्राप दिएका होलान्' भन्दै साह्रै रुन लागिन् र शिवभट्ट भन्दछन् - 'हे सती ! नरोऊ, दैवको सामु कसैको बल पुग्दैन । दैवले आफ्नू इच्छानुसार सबै काम गर्दछ । अब शिवशर्मालाई खान-पिन दिई सुत्ने स्थान खटाइदेऊ, विस्मात नगर ।' यति आफ्ना स्वामीले भनेपछि सतीले अनेक उपचार तयार पारी खान दिइन् । शिवशर्मा सुत्न गएपछि सतीले छोरी गोमालाई डाकेर काखमा राखी प्रीतिपूर्वक भन्न लागिन् - 'हे गोमा ! तेरो विवाह हुन लाग्यो । तेरा पिताले ती वृद्ध ब्राह्मणलाई दिन आँटे ।

किनकि उस दिन तँलाई श्राप दिने भिक्षुकरूप श्रीमहादेव नै रहेछन् । तँलाई त्यो श्राप लाग्यो, हामीलाई दोषी नठानेस् र तँ पनि चिन्ता नगरेस् । तेरो कर्मले पारिल्याएको कुरा अन्यथा गर्न कसको सामर्थ्य छ ? हे गोमा !' भनी आँखाबाट बलिन्द्र आँसुका धारा बगाई ठूलो स्नेहले काखमा राखिन् । यति आफ्नी माताको वचन सुनी गोमा भन्न लागिन्- 'हे माता ! यसमा तपाईँहरूको केही दोष छैन । मेरो भाग्यमा यस्तै लेखेको रहेछ । फेरि महादेवको श्राप लङ्घन गर्न को सक्ला ? मैले अहंकारले भिक्षुकरूप महादेवको अनादर गरेँ र त्यसको फल पनि पाएँ । जो मनुष्य भिक्षा माँग्न आएका भिक्षुकलाई भिक्षा नदिई अनादर गरी पठाउला त्यसले यस लोकमा र परलोकमा पनि सुख पाउनेछैन । फेरि जसले भिक्षा माँग्न आएका भिक्षुकलाई आदर गरी भिक्षा दिई पठाउला त्यसले यस लोकमा र परलोकमा पनि सुख सन्तोष पाउला । हे माता ! सन्देह गर्नु व्यर्थ छ । बूढो भए पनि, लंगडो भए पनि, दरिद्र अथवा रोगी भए पनि, पापी अथवा क्रोधी भए पनि मलाई दैवले पारिल्यायो । रामचन्द्र जस्तालाई त दैव लागेर वनवास जानुपऱ्यो । वनवासमा पनि सीतालाई

रावणले हरण गरेर लगिदियो । फेरि महादेव जस्तालाई दैव लागेर कालकूट विष कण्ठमा राखी नीलकण्ठ भई रहनुपऱ्यो । फेरि युधिष्ठिर जस्ता धर्मात्मालाई पनि दैव लागेर जूआमा राज्य हारी वनवास र गुप्तवास समेत जानुपऱ्यो । फेरि द्रौपदीलाई दैव लागेर दुर्योधनका सभामा बेइज्जत हुनुपऱ्यो । फेरि राजा बलि जस्ता दानीलाई दैव लागेर पातालमा बस्नुपऱ्यो । फेरि मायाका अधिपति श्रीकृष्ण जस्तालाई दैव लागेर आफ्नै अगाडि आफ्नू नाति अनिरुद्धलाई बाणासुरले नागपाशले बाँधेको र छप्पन्न कोटि यदुवंशीहरू नाश भएको देख्नुपऱ्यो । फेरि सम्पूर्ण संसारमा प्रत्येक जीवको सृष्टिकर्ता ब्रह्मालाई पनि दैव लागेर आफ्नू शिर कटाई रहनुपऱ्यो । फेरि देवताका राजा इन्द्रलाई दैव लागेर स्वर्ग छाडेर भाग्नुपऱ्यो । अतः हे माता ! दैवको गति लङ्घन गर्न कोही पनि सक्तैनन् । पूर्वजन्ममा आफूले गरेका कर्मको फल अवश्य भोग्नुपर्दछ । फेरि जस्तै ठूलो घड़ा लिएर कस्तै बर्ता पानी भएको नदी वा तलउमा गए पनि जल घड़ाभरि मात्र आउँछ । त्यस्तै आफ्नू भाग्यमा लेखेको मात्र हुन्छ । सन्देह नगर्नुहोस्, तपाईंहरूले दिएको ठाउँमा म खुशीसाथ जानेछु ।' पुत्री गोमाका

त्यस्ता कुरा सुनी सतीले प्रसन्न भएर भनिन् - 'हे गोमा ! तँ धन्य रहिछस् । यस्तो सानै अवस्थामा पनि यस्ता ज्ञानका कुरा गर्ने भनी दुवै आमा-छोरी रातभरि त्यस्तै गन्थन गरिरहे । प्रातःकाल भयो र शिवभट्टले शिवशर्माको कपाल खौरन नाउ डाकी हात-खुट्टाका नङ काट्न लगाई, मनपरेको खन-लाउन दिई पालिराखे । शिवशर्मा पनि मनपरेको खान-लाउन पाई हृष्ट-पुष्ट भई मोटाए । त्यसपछि शिवभट्टले लग्न ठहराई कन्यादानको सामग्री तयार पारी अनेक मंगल यात्रा गरेर आफ्नू मर्यादा-अनुसार गोमालाई हीरा, मोती, मणि-माणिक आदि रत्न र वस्त्रालंकार पहिराई शिवशर्मा ब्राह्मणलाई गोमा कन्यादान दिए । गोमाले फूलको माला लिई शिवशर्मालाई पहिराइन् र प्रणाम गरिन् । कन्यादान सकिएपछि अन्य ब्राह्मणहरूलाई श्रद्धासाथ भोजन दक्षिणा दिए र सबै जना आफाफ्ना घर गए । गोमाले आफ्ना स्वामी शिवशर्मालाई प्रीतिपूर्वक सेवा टहल गरेर राख्दी भइन् ।

फेरि कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! यस्तै प्रकारले जब त्यहाँ बसेको निकै वर्ष बितिसक्यो तब एकदिन शिवशर्माले आफू हृष्ट-

पुष्ट भएको देखेर घर सम्झी अब यहाँ कति बस्ने, बरु घर जानुपर्‍यो भन्ने विचार गरी शिवभट्ट र सतीकहाँ नगीचै गएर भने- 'हे माता-पिता ! तपाईंहरूको कृपाले कन्यादान पाई म कृतार्थ भएँ । म यहाँ आएको धेरै दिन भयो । घरमा हेरचाह गर्ने कोही छैन । आज्ञा दिए घर जाने थिएँ ।' ज्वाइँको यस्ता कुरा सुनी शिवभट्ट भन्दछन्- हे ज्वाइँ ! यो पनि तिम्रै घर हो, हाम्रो पो को छ र ? हामी पनि तिम्रै हौँ, सम्पत्ति पनि तिम्रै हो, अतः जान्छु नभन । त्यति सुनेर शिवशर्मा भन्दछन्- हे पिता ! एकपल्ट जान देऊ, नरोक, घरको हेर-विचार गरेर बरु म छिटै आउनेछु । मेरो पनि को छ र ! माता-पिता सबै तिमी, इष्ट-मित्र पनि तिमी, हितू पनि तिमी, गुरु र देवता पनि तिमी । मनपरेको खान-लाउन दिई पाल्ने यस्ता तिमीहरूलाई छाडेर म कहाँ जान सक्छु ? यति आफ्ना स्वामीले पितासित कुरा गरेको सुनी गोमा ब्राह्मणीले भनिन्- हे स्वामी ! कहीँ पनि जाने मन नगर, तिमी जाने भए मलाई पनि साथै लैजाऊ अन्यथा म जान दिनेछैन । तिमी-बिना म कसरी बस्न सक्नेछु ? यति गोमाले भनेको सुनी शिवशर्मा भन्दछन् - हे स्त्री ! तिम्रो बाल अवस्था छ,

मसित जान सक्नेछैनौ किनभने हाम्रो घर धेरै टाढा छ । पहाड़ चढ्नुपर्दछ र अनेक दिन वनमा वास बस्नुपर्दछ । फेरि वनमा अनेक जन्तुको डर हुन्छ । तिमी आफ्नू इच्छामा बसेकी, घरबाट कहिल्यै ननिस्केकी, शीत, ताप, भोक-प्यासले कष्ट पाउली । फेरि मेरो वृद्ध अवस्था छ, बाटोमा कसैले दगा गरी तिमीलाई हरण गरेर लैजाला । यसकारण, तिमी यहीँ बस, म घर गई खबर बुझेर छिटै फर्कनेछु । दुई महीना जतिमा आइपुग्नेछु । दुई महीना भनेको कति हो र ? यति आफ्ना स्वामी शिवशर्माले भनेको सुनी गोमा ब्राह्मणी भन्दछिन् - हे स्वामी ! तिमी दुई महीना भन्दछौ, म त तिमी नभई दुई घड़ी पनि बस्न सक्तिनँ, फेरि शीत, ताप, भोकले कष्ट पाउली, पर्वत चढ्नुपर्दछ, वनमा वास बस्नुपर्दछ, नाना जन्तुको डर हुन्छ पनि भन्यौ, तिमीले दुःख पाए म पनि दुःख पाउनेछु, जुन गति तिम्रो, उही गति मेरो । कस्तै भए पनि तिमीलाई पठाएर म यहाँ बस्न तयार छैनँ । यदि मलाई छाडेर गयौ भने म हत्या गरी मर्नेछु । यति गोमाले भनेको सुनी शिवशर्माले- उसो भए तिम्रा माता-पितासित बिदा भएर आऊ भने । अनि गोमाले माता-पिताकहाँ गएर भनिन्-

हे माता-पिता ! म पनि मेरा स्वामीसित जान्छु, बिदा दिनुहवस् । छोरीको त्यस्तो वचन सुनी शिवभट्ट र सतीले भने-हे पुत्री ! जान्छु नभन् । किनभने हाम्रो वृद्ध अवस्था भयो । छोरो भने पनि छोरी भने पनि तँ यौटी होस् । तँ पनि नभए हामीलाई औँसीको रात जस्तै हुनेछ । राम र सीता नहुँदा राजा दशरथको प्राण गए-जस्तै हाम्रो पनि हुनेछ । अतः हाम्रो सेवा र सम्पत्तिको सुरक्षा गरेर यहीँ बस् । तेरा स्वामीलाई जान दे । उ पनि दुई महीनामा आउँछु भन्दै छन् । यति माता-पिताको वचन सुनी गोमा ब्राह्मणी भन्दछिन्-हे माता-पिता ! नारी जातिको निम्ति सम्पूर्ण तीर्थ, व्रत, दान, धर्म त्यसका पुरुष नै हुन्छन्। सम्पूर्ण शास्त्र-पुराण तपाईँहरूले हेर्नुभएकै छ, म के भनूँ । पुरुष भएसम्म नारीले कुनै तीर्थ-व्रत, दान-धर्म गर्नुपर्दैन । नारीले आफ्नो पुरुषलाई रिसाएर हेरे डेरी हुन्छे । पतिसित द्रोह गरे गोही हुन्छे । पुरुषको वचन नमाने पापिनी हुन्छे। लोग्नेदेखि लुकाएर खाए कुकुर्नी हुन्छे । यसैकारण, मलाई नरोकी साथै जाने बिदा दिनुहवस् । विशेष मेरा पुरुष वृद्ध छन्, बाटोमा म नभए तिनको रक्षा को गर्ला ? फेरि संसारमा कसैका पनि

बढ़ेका छोरी माइत बस्तैनन् । बरु फेरि चाँडै

शिवभट्ट र सतीले छोरी गोमालाई बिदा गरेको

आउनेछु । यति गोमाले भनेपछि शिवभट्ट र सतीले भने- हे गोमा ! त्यसो भए हामी के भनौं, जा, भनी आँखाबाट आँसु बगाई नाना वस्त्र अलंकार पहिराई प्रशस्त सम्पत्ति समेत दिई, डोलीमा बसाली नगरको बाहिरसम्म पुऱ्याउन गए । बाटोमा राम्ररी लैजानू भनी डोलेहरूलाई अह्राएर शिवभट्टले गोमासित भने- हामीलाई नबिर्सी चाँडै आउनू । गोमाका साथीहरूले पनि त्यसै भने । अनि गोमा डोलीबाट ओर्ली बाबा-महतारीलाई प्रमाण गरी सबै साथीहरूलाई पनि 'बस है' भनेर सबैसित बिदा भई फेरि डोली चढेर त्यहाँबाट हिँड्दी भइन् ।

।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां गोमाविवाहवर्णनं नाम एकविंशोऽध्यायः ।।२१।।

# अथ द्वाविंशोऽध्यायः

## सप्तर्षि-व्रतोपदेश-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! शिवशर्मा ब्राह्मण र गोमा ब्राह्मणी त्यहाँबाट हिंडेपछि शिवभट्ट र सतीले आँखाले देखिएसम्म हेरे। देखिन छाडेपछि वृक्षमा चढेर हेरे । जब वृक्षबाट पनि देखिन छाड्यो, त्यही वृक्षको हाँगामा बसेर अनेक विलाप गर्न लागे । दैवसंयोग त्यसै बखत रूखको हाँगो भाँचियो र दुवै स्त्री-पुरुष वृक्षबाट लडेर मरे । तब श्रीमहादेवका दूत आई विमानमा बसालेर कैलासपुरी लगे । तब ती दुवै दम्पती दिव्य देह भई कैलासपुरीमा शिवका पार्षद भएर रहँदा भए ।

यता शिवशर्मा र गोमा ब्राह्मणीले डोलेहरू-सित यस वनको नाम के हो ? त्यो पर्वतको नाम के हो ? त्यस वृक्षको नाम के हो ? भनेर सोध्दै गए । डोलेहरूले पनि यस वनको नाम यो हो, यस वृक्षको नाम यो हो भनेर बताउँदै गए । जाँदा-जाँदा निकै पर पुगेपछि यौटा सुन्दर वन र तलाउ भएको स्थानमा पुग्दा साँझ पऱ्यो । त्यही वास बसेर खान-पिन गरी सुते । थाकेका हुनाले

भुसुक्क निदाए । त्यही बेला श्रीमहादेवको श्रापले चोरहरू आई गोमा ब्राह्मणीका माता-पिताले दिएको सम्पत्ति र शरीरको गहना-समेत सबै चोरेर लगेछन् । भोलिपल्ट बिहान उठेर हेर्दा सम्पूर्ण द्रव्य र शरीरको गहना-समेत चोरिएको देखेर अधैर्य भई गोमा रुन-कराउन लागिन् । तब डोलेहरूले भने-हे गोमा ! नरोऊ, थाकेका हुनाले हामीलाई पनि साह्रै निद्रा परेछ, यस्तो नजाती भयो, हामी अभागी रहेछौँ । अब तिम्रा माता-पितालाई के भनौँला ! अब तिमीले जसो भन्दछ्यौ । डोलेहरूले यति भनेको सुनी गोमा भन्दछिन्- हे भारवाहक हो ! अब तिमीहरू यहीँबाट फर्क । तिमीहरूलाई लगेर म के खान दिउँली ? यो समाचार मेरा माता-पितालाई सुनाइदिनू । यति गोमाले भनेको सुनी डोलेहरू 'हुन्छ' भनेर गोमालाई प्रणाम गरी आफ्आफ्ना घर जान भनी फर्केपछि शिवशर्मा ब्राह्मण र गोमा ब्राह्मणी पनि वनमा जो पाइएको फल-फूल खाई त्यहाँबाट ठूलो पर्वतमाथि पुगे । अनि गोमा भन्दछिन् - हे स्वामी ! मलाई अत्यन्त भोक लाग्यो । अब हिड्न पनि नसक्ने भएँ । के गरूँ भनी बाटोमै अलपत्र परिन् । गोमा ब्राह्मणी गर्भिणी थिइन् । अतः शिवशर्मालाई साह्रै दया

लाग्यो र गोमालाई काखमा राखी स्नेहपूर्वक भने- हे स्त्री ! यहाँ फल-फूल केही पनि पाइन्न । यहाँ जलाशय पनि छैन । यस्तो स्थानमा म तिमीलाई के खान दिऊँ । यहाँबाट अलि पर गए फल-फूल पनि पाइन्छ र जलाशय पनि छ । जाउँ, हिँड भनी बुझाई हात समातेर सुस्त-सुस्त हिँडाई लगे । गोमा पनि- 'हे प्रभो ! आज मेरो यो अवस्था भयो' भन्दै सुस्केरा हाल्दै बिस्तार-बिस्तार गइन् । पर्वतको फेदीमा पुगेपछि शिवशर्मा ब्राह्मणले फल-फूल टिपेर खान दिए र पानी पनि पिउन दिए । अनि -'हे स्त्री ! अब हाम्रो घर पनि आइपुग्यो' भन्दै चन्द्रज्योति नगरको बाहिर पुर्‍याए, अनि त्यहीँ यौटा खरको झुपडी उत्पन्न गरी-'हे स्त्री ! हाम्रो घर यही हो' भनी देखाए र गोमा ब्राह्मणी घर-भित्र गएर हेर्दा माकुराको जालो र कसिङ्गर मात्र देखेर आफ्ना माता-पिताको घर सम्झी बहुतै अधैर्य भई रुन लागिन् । फेरि मेरो कर्मले यस्तै पारिल्यायो, अब रोएर क्यै लाभ छैन भनी धैर्य धारण गरेर कुचोले माकुराको जालो मिल्काई कसिङ्गर बढारिन् । घरमा जे भएको खाई गोमा ब्राह्मणी दुःखको समुद्रमा डुबिरहिन् । त्यसपछि एकदिन शिवशर्मा

ब्राह्मणले आफ्नी पत्नी गोमासित भने-हे स्त्री ! तँ गर्भिणी भइस् । हाम्रो घरमा सम्पत्ति छैन । गर्भाधान कर्म कसरी गर्ने ? फेरि सुत्केरीमा के खर्च गरौँला ? यस निम्ति म परदेश गएर कसैसित केही माँगी ल्याउँछु । तैँले आफ्नू शरीर र घरको रक्षा गरेस् । केवल रोई-कराई मात्र नरहेस् भने । आफ्ना स्वामीको त्यस्तो वचन सुनी गोमाले भनिन् -हे स्वामी ! मलाई यस्तो अवस्थामा एक्लै छाडी कहाँ जान मन गरेका ? म स्त्री जातिले के गर्नेछु ? के खाने ? फेरि मलाई यहाँ को देला ? विशेष तपाई वृद्ध भएकालाई कसरी पठाऊँ ? यहीँ यजमानहरूकहाँ गई जो मिलेको माँगेर ल्याई संचय गरौँला । अतः कहीँ पनि जाने मन नगर्नुहोस् भनिन् र शिवशर्मा फेरि भन्दछन् - हे स्त्री ! हामी निर्धन भए पनि ब्राह्मणको कर्म नगरी हुँदैन । एक महीनामा त म आइपुग्नेछु । तबसम्म खान नपुगे चन्द्रज्योति नगरमा यजमानहरू छन्, तिनका घर गई भिक्षा माँगेर खाएस् भनी बुझाए । यति आफ्ना स्वामीले भनेपछि गोमाले मञ्जूर गरिन् । अनि शिवशर्मा भिक्षा माँग्न भनी परदेश हिडे । एक-दुई दिनको बाटो हिंडेपछि नारायणी गंगाको तटमा ऋषिहरूको आश्रममा पुगे । त्यहाँ वृद्ध

अवस्था भएका दुई पति-पत्नी ब्राह्मण-ब्राह्मणी बसेका थिए । त्यहाँ शिवशर्माले नारायणी गंगा-स्नान गरेर ती वृद्ध दम्पतीकहाँ गई मलाई नित्यपूजा गर्न केही फल-फूल देऊ भनी माँगे । ती ऋषिका आश्रममा वरिपरि प्रशस्त फल-फूल थिए । ती शिवशर्माको कुरा सुनी ती वृद्ध दम्पतीले तिमी को हौ ? कहाँबाट आयौ ? भनी सोधे । अनि शिवशर्माले - 'म चन्द्रज्योति नगरको शिवशर्मा नामको ब्राह्मण हुँ । घरमा पत्नी गर्भवती हुनाले गर्भाधानादि कर्म गर्न भिक्षा माँग्न भनी हिँडेको' भने । तब ती वृद्ध ब्राह्मणले आफैँ टिपेर लैजाऊ भने र ती शिवशर्मा आफैँ वृक्षमा चढी फल-

शिवशर्मा ब्राह्मण वृक्षबाट लडेर मरेका

फूल टिप्न लागे । त्यसै अवसरमा संयोगले रूखको हाँगो भाँचिई शिवशर्मा रूखबाट लडेर मरे । ती

शिवशर्मा मरेपछि महादेवको रूप धारण गरी कैलास पुगे । पार्वतीले महादेव आउनुभएको देखिन् र सुनको कमण्डलुले पाउ धोई भित्र लगेर बसालेपछि भनिन् - हे ईश्वर ! लोग्नेमानिसहरू पापी हुँदा रहेछन् । राम्री स्वास्नी पाएपछि सबै कुरा बिर्सदा रहेछन् । हजुरले पनि मलाई बिर्सनुभएको थियो, बल्ल सम्झनुभएछ र आउनुभयो । हेर, सुखमा बसेकी त्यो गोमालाई कल-बल-छलले ल्याएर गर्भिणी तुल्याई दुःख दिई त्यस्ता स्थानमा एक्लै मिल्काएर आउनुभयो । अब त्यो के गरेर खाली ? यति पार्वतीले भनेको सुनी महादेवले हाँस्तै भन्नुभयो-हे प्रिये ! सेवक र भक्त भन्दामा पाप पनि गर्नुपर्दछ । गोमा पनि अब सुखी हुनेछ, संदेह नगर ।

त्यसपछि भिक्षा माँग्न गएका शिवशर्मा धेरै दिन बितेर पनि फर्केनन् र गोमाले अनेक दुःख सही चन्द्रज्योति नगरमा गएर भिक्षा माँगेर ल्याई गर्भाधान कर्म गराइन् । मास पूर्ण भयो र सबै राजलक्षणले युक्त छोरो जन्मियो । गोमाले चन्द्रज्योति नगरबाट ब्राह्मणहरू डाकी ब्राह्मणका मर्यादाले नामकरण गराइन् । ती ब्राह्मणहरूले ज्योतिषशास्त्र विचार गरे र 'नवराज' नाम राखि-

दिए । घर जाने बेलामा-हे गोमा ! यो बालक सबै राजलक्षणाले युक्त छ र राजा पनि हुन सक्तछ र तिमीलाई सुख सन्तोष दिनेछ, यसमा शंका नमाने । यति ब्राह्मणहरूको वचन सुनी गोमाले मनमा आनन्द मानी श्रद्धासाथ भोजन दक्षिणा दिई बिदा गरिन् । त्यसपछि बालकलाई गोमाले अर्काको ढिकी-जाँतो गरी, धागो कातेर पालन-पोषण गरिन् । नवराज बालक पनि शुक्लपक्षका चन्द्रमा जस्तै प्रतिदिन बढेर अलि ठूलो भई खेल्न जाँदा मित्रहरूले जे भने पनि सुनिरहन्थे, झगड़ा गर्दैनथे । खेलिसकेर सरासर घर आउँथे । आमाले जो दिएको खाएर सन्तोषले रहन्थे। आफ्नू छोराको स्वभाव देखेर गोमा प्रसन्न भई यजमानहरूकहाँ गएर भनिन् - 'हे यजमान हो ! मेरो छोरो नवराज आफ्ना साथीहरूसँग खेलेर घर आउँछ । खान देऊ पनि भन्दैन, किन दिइनौ पनि भन्दैन, रिस पनि गर्दैन, यो मीठो, यो नमीठो पनि भन्दैन । दिए खान्छ, नदिए चुप लागी रहन्छ । फेरि मेरा स्वामी पनि घरमा छैनन् । सम्पत्ति पनि छैन । सबै यजमानहरूका दयाले जिन-तिन एक छाक खाएर बाँचिरहेकी छु । अब त्यसको चूड़ाकर्म र व्रतबन्धादि कसरी गरिदिऊँ भन्ने चिन्ता लागिरहेछ।' गोमाको

त्यस्तो वचन सुनेर यजमानहरूले आफाप्नू श्रद्धाले जो सकेको दिए र गोमाले सम्पूर्ण सामग्री तयार पारी ब्राह्मणहरू डाकेर नवराजको चूडाकर्म र व्रतबन्ध गरिदिइन् । अनि वेद-पुराण आदिको शिक्षा दिलाइन् । एकदिन नवराजको चाल-चलनले प्रसन्न भएका यजमानहरू स्वयं गोमाकहाँ गएर भने -'हे गोमा ! नवराजको विवाह गर्ने भए वरुणपुरका अग्निस्वामीकी कन्या चन्द्रावती छन्, तिनैसित गरिदिऔँ । सबै सामग्री ठीक पार।' यजमानहरूको यस्ता वचन सुनी गोमा भन्दछिन् -'हे यजमान हो ! मेरो छोरोको कमाइ छैन, घरमा सम्पत्ति छैन, त्यसलाई कन्या कसले देला ? विवाह कसरी गरिदिने ?' यति सुनेर यजमानहरूले भने-'हे गोमा ! जे चाहिएको सामग्री हामी दिन्छौँ, के-के चाहिन्छ ?' यति यजमानहरूले भनेपछि गोमा भन्दछिन् - 'हे यजमान हो ! हामीलाई निर्धन जानेर तिमीहरूको यस्तो दया ! हामी धन्य रहेछौँ'भनेर विवाहको समस्त सामग्री जे-जे चाहिएको थियो माँगिन् र यजमानहरूले दिए । अनि असल दिनमा लग्न ठहराई ब्राह्मणको मर्यादाले वरुणपुरका अग्निस्वामीकी कन्या चन्द्रावती र नवराजको विवाह सम्पन्न भयो ।

त्यसपछि एकदिन ती नवराज बाहिर खेल्न गएको बेलामा तिनका मित्रहरूले हे नवराज ! आजसम्म हामी तिमीलाई 'नवराज ब्राह्मण' भन्दथ्यौँ, तर अबदेखि तिमीलाई हामी बिना-बाबुको छोरो भन्दछौँ । तिम्रा पिता भए तिनको नाम के हो ? तिमी कसका छोरा हौ ? हामीलाई भन । यति आफ्ना मित्रहरूले भनेको सुनी नवराज केही उत्तर दिन नसकी घर आएर-हे माता ! म कसको छोरो हुँ ? मेरा पिताको नाम के हो ? भनी साथीहरूले भनेको सारा कुरा आमालाई सुनाए । अनि मेरा पिता कहाँ छन् ? भनेर सोधे । नवराजको यति कुरा सुन्नासाथ गोमाले वर्षाकालमा मेघ वर्षे-झैँ अविरल आँसु बगाउँदै भनिन् - 'हे नवराज ! तेरा पिताको नाम शिवशर्मा हो । तँ गर्भमा छँदै भिक्षा माँग्न परदेश गएका आजसम्म फर्केनन् । कतै केही कारण परेर रोकिएका छन् कि संसारमै छैनन्, थाहा पाउन सकिनँ ।' यति गोमाले भनेको सुनी नवराज भन्दछन् - 'हे माता ! त्यसो भए मलाई आज्ञा दिनुहवस्, कहाँ बसेका छन्, म गई विचार गरेर आउँछु ।' नवराजको यस्तो कुरा सुनेर गोमा भन्दछिन् - हे पुत्र ! तेरो मुख हेरेर तेरा पितालाई बिर्सिरहेकी थिएँ । अब तैँले

पनि छाडेर गए म कसको आधारले बाँच्ने ? फेरि तँ गएपछि तेरी पत्नी चन्द्रावती पनि माइत जानेछ । यसकारण कहीँ पनि जान्छु नभन् । गोमाले भनेको सुनेर नवराज फेरि भन्दछन्- हे माता ! म केही भन्दछु, सुन्नुहवस्-

पुत्रस्य परमो धर्मः पित्रुद्धारसमो नहि ।
पित्रुद्धारं न कुरुते स्वयं च सुखमिच्छति ।।
स याति नरकं घोरं यावच्चन्द्रार्कमेदिनी ।।

छोराको पहिलो र ठूलो धर्म के हो भने पितृहरूको उद्धार गर्नु । जुन छोरो भएर पितृको उद्धार नगरी केवल आफ्नै सुख भोगतिर लागिरहन्छ भने त्यो जबसम्म पृथ्वी र चन्द्र-सूर्य रहन्छन् तबसम्म घोर नरकमा पर्दछ । अतः म गर्भमा छँदै गएका मेरा पिता मेरो यो उमेर हुँदा पनि किन फर्केनन् ? मरिसके कि जीवित छन्, त्यसको निधो मैले नगरे कसले गर्छ ? मरेका भए निश्चय गरेर आउँला, बाँचेकै भए साथमा लिएर आउँछु । यति पनि गर्न नसके मैले जन्म लिएको व्यर्थ छ । हे माता ! हजुरको सेवा गर्न बुहारी छँदै छ । मलाई बिदा दिनुहोस्, म जान्छु । नवराजका यस्ता कुरा सुनी गोमा भन्दछिन् -'हे पुत्र ! तँ धन्य रहिछस् । तेरा पिता मरेका भए पनि बाँचेकै

भए पनि चाँडै नै खबर पाएस् ।' भनी शिरमा हात राखेर आशीर्वाद दिइन् । नवराजले माताको आशीर्वाद थापी डण्डवत् प्रणाम गरी, स्त्री चन्द्रावतीलाई अह्राउने कुरा अह्राई पिताको खबर गर्न परदेश हिँडे । जाँदा-जाँदा केही दिनमा नारायणी गंगाको तटमा ऋषिका आश्रममा पुगे । त्यहाँ अत्यन्त वृद्ध भइसकेका ब्राह्मण र ब्राह्मणीलाई देखेर सोधे-तिमीहरू को हौ ? यहाँ किन बसेका ? यति सुनेर वृद्धले भने-'हे बालक ! हामी ब्राह्मण हौं । वृद्धावस्था भयो र नारायणी गंगामा शरीर त्याग गरौंला भनी घर छाड़ी यहाँ झुपडी बनाएर बसेका हौं । तिमी को हौ ? यहाँ के कामले आयौ ?' तिनको यस्ता कुरा सुनी नवराज भन्दछन्-'म पनि नवराज नामको ब्राह्मण हुँ । म गर्भमा हुँदै गर्भाधान कर्म गर्न भिक्षा माँग्न हिँडेका मेरा पिता शिवशर्मा नामका ब्राह्मण आजसम्म घर फिरेनन् र तिनैको खोज-खबर गर्न हिँडेको हुँ, तिमीले देख्यौ कि ?' यति नवराजको वचन सुनी ती वृद्धले भने-'हे नवराज ! गर्भाधान कर्म गर्न भिक्षा माँग्न आएका चन्द्रज्योति नगरका शिवशर्मा नामका वृद्ध ब्राह्मणलाई हामीले देखेथ्यौं । यहीं आई आफ्नू नित्य-पूजा गर्न फल-फूल टिप्न

त्यस वृक्षमा चढ़ेका थिए, दैवसंयोग त्यो वृक्षको हाँगो भाँचियो र वृक्षबाट लडेर मरे । हाड-खोड त अझसम्म पनि होला, त्यहाँ गएर हेर ।' यति ती वृद्ध ब्राह्मणले भनेको सुनी नवराज त्यस रूखमनि हेर्न गए । त्यहाँ आफ्ना पिताको हाड-खोड देखी- 'हे पिता, मेरै निम्ति भिक्षा माँग्न आएका, मेरो मुखै देख्न नपाई यस्तो स्थानमा आएर रूखबाट लड़ी प्राण दियौ । यो समाचार म आमालाई कसरी सुनाउँला ? मेरी माताले शोक गर्दा म के भनेर बुझाउँला ? भन्दै अनेक तरहले शोक गरेर रुन लागे । फेरि धैर्य धारण गरी हाड-खोड़ बटुली गंगा-प्रवाह गरेर ब्राह्मणका मर्यादाले दशगात्र क्रिया गरिसकी अब कता जाऊँ ? घर जाऊँ भने सम्पत्ति छैन । विषेश यो समाचार सुनाई माताले शोक गरेको मात्र हेर्नु छ । यसकारण, बरुयतै कुनै राजाको सेवा चाकरी गरेर केही द्रव्य लिई घर जानु असल होला' भनी नजीकको शहरमा गएर राजाको सेवामा लागे ।

अनि फेरि अझै कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! नवराज ब्राह्मण पिताको खबर गर्न गएपछि नवराजकी स्त्री चन्द्रावतीले सासू गोमासित भनिन्- 'हे माता ! म माइत नगएको

धेरै दिन भयो । यहाँ खान अन्न छैन, लगाउन लुगा छैन, अकासित माँगेर मात्र कति दिन निर्वाह गर्नें ? अतः म केही दिन माइत जान्छु । तपाईंले आफ्नू शरीर र घरको रक्षा गर्नुहोला । तपाईंका छोरा आएपछि मलाई डाक्न पठाउनुहोला । म गएपछि एक पेट पाल्न तपाईंलाई पनि कठिन हुनेछैन । अतः म जान्छु' भनी सासूलाई प्रणाम गरेर माइत गइन् । चन्द्रावती हिँडेपछि गोमा ब्राह्मणी आफूलाई दुःख परेको देखी भिक्षुकरूप श्रीमहादेवले दिएको श्राप सम्झेर भन्न लागिन् - म सात वर्षकी हुँदा सत्तरी वर्षका बूढासित विवाह भयो, ती पनि भिक्षा माँग्न गएका आजसम्म फर्केनन्, छोरा-बुहारीले पनि छाडेर गए । म यस्तो अवस्थामा परेँ, धिक्कार रहिछु । उस दिन मलाई श्राप दिने भिक्षुक श्रीमहादेव नै रहेछन् । 'हे जगदीश्वर ! मैले जानिनँ, मेरा अपराध क्षमा गर । हे शम्भो ! हजुरलाई कोटि-कोटि नमस्कार छ । अब मेरो रक्षा गर कि यो प्राण हर' भन्दै आँसुका धारा बगाई रोई कराई बौलाही जस्तै भएर हिँड्न लागिन् । यो कुरा कैलासमा पार्वतीले चाल पाएर महादेवको आनन्द समयमा बिन्ती गरिन् - 'हे नाथ ! त्यो गोमाको दुःख हेर्नुहवस् ।

त्यो पनि हजुरकी पत्नी हो, त्यसलाई कष्ट दिनु योग्य छैन । मलाई साह्रै दया लाग्यो, म त्यसको केही उपाय गरूँ कि ! आज्ञा भए श्रीस्वस्थानी परमेश्वरीको व्रत गराऊँ र दुःखका सिन्धुबाट पार होली ।' यति पार्वतीको प्रार्थना सुनी महादेवले 'हुन्छ', त्यसै गर भनी आज्ञा दिनुभयो । अनि पार्वतीले सप्तऋषिलाई डाकी 'तिमीहरू मर्त्यमण्डलमा जाओ र चन्द्रज्योति नगरमा गोमा नामकी ब्राह्मणी साह्रै कष्टमा परेकी छ, उसलाई श्रीस्वस्थानी परमेश्वरीको व्रत गराई आओ ।' यति भनी आफूलाई विष्णुले बताएको सम्पूर्ण व्रत-विधि बताइन् । यति पार्वतीको आज्ञा सुनी सप्तऋषिले 'हवस्' भनेर मर्त्यमण्डलमा पुगी चन्द्रज्योति नगरको बाहिर गोठाला केटा-केटीहरूसित 'यहाँ को दुःखी छ ?' भनी सोधे र गोठालाहरूले-'यस चन्द्रज्योति नगरमा त्यस्ता दुःखी कोही पनि छैनन् । शहर-बाहिर गोमा नामकी ब्राह्मणी साह्रै कष्टमा छिन्, त्यहीँ गई शोध' भनेर घर पनि देखाइदिए । अनि सप्तऋषिहरू तिनको घर पुगे । गोमाले पनि सप्तऋषिहरूलाई देखेर प्रणाम गरी भित्र लगेर पिढ़ामा बसाली - 'हे ऋषीश्वर हो ! म यस्ती पापिनीका घरमा आई के कामले दर्शन दिनुभयो ?

आज्ञा हवस्' भनिन् र सप्तऋषिहरू भन्दछन् -

गोमा ब्राह्मणीलाई सप्तऋषिहरूले श्रीस्वस्थानी परमेश्वरीको पूजा-विधि बताएको

हे गोमा ! तिमी साह्रै नै दुःखी हुनाले श्रीस्वस्थानी परमेश्वरीको व्रत गराउन आयौँ । अब तिमी एकाग्र भएर सुन-सत्ययुगमा हिमालय पर्वतकी पुत्री पार्वतीले महादेव स्वामी पाउनका लागि गरेको त्यो व्रत पौषशुक्ल पूर्णिमादेखि आरम्भ गर्नुपर्दछ । हात-खुट्टाका नङ काटी पवित्र भई एकभक्त रही एकचित्त गरी नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गर्नू । माघशुक्ल पूर्णिमाको दिन अष्टोत्तर सय रोटी, अष्टोत्तर सय अक्षता, अष्टोत्तर सय जात-जातका फूल र नाना उपचार तयार गरी आर्सीमा 'ॐ'कार लेखी गंगाजलले स्नान गराई रक्तचन्दन, श्रीखण्ड, सिन्दूर, पुष्पमाला, वस्त्र, धूप-दीप र नैवेद्य, मेवा, मिष्टान्न,

कस्तूरी, भेटी चढाई श्रीस्वस्थानी परमेश्वरीको पूजा गरेर कथा सुन्नू । कथा सुन्ने कोही नभए आफै भन्नू र आफै सुन्नू । आफ्ना खाट, उइँटा, धनु आदिलाई सुनाए पनि हुन्छ । त्यसपछि जुन कामना यानि इच्छाले व्रत गरेको छ, मेरो अमुक कामना सिद्ध हवस् भनेर अर्घ्य दिई जप, ध्यान, स्तुति गर्नू । श्रीस्वस्थानी परमेश्वरी भनेकी कस्ती छन् भने हे गोमा ब्राह्मणी ! ध्यानपूर्वक सुन-

सुवर्ण-वर्ण-दीप्ताभां त्रिनेत्रां कमलाननाम् ।
सिंहासन-समासीनां सर्वालंकार-भूषिताम् ।।
नीलोत्पल-धरां वामे, दक्षिणे वरदां शुभाम् ।
खड्ग-चर्मधरां चोर्ध्वं वामदक्षिणयोः क्रमात् ।।
चतुर्भुजां च मां वाऽपि पूजयेद् वृषकेतुनम् ।
एवं ध्यात्वा महादेवीं स्वस्थानीं जगदीश्वरीम् ।।

पीतवर्ण सुवर्णभन्दा पनि दिव्य वर्ण भएकी, तीन नेत्र भएकी, कमल-पुष्प झैं मुख-मण्डल भएकी, नाना अलंकार पहिरी सिंहासनमा बसेकी, खड्ग चर्म र नीलोत्पल लिएकी, चार बाहु भएकी यस्ती श्रीस्वस्थानी परमेश्वरीलाई हृदयले संझी त्यहीँ मेरो पनि पूजन गर्नू भनी स्वयं महादेवले आज्ञा भएको छ । यस्ती श्रीस्वस्थानी परमेश्वरीको ध्यान गरेर निम्नलिखित मन्त्र पाठ गर्नू-

नमस्तेऽस्तु जगन्मातः स्वस्थानि सर्व-मंगले ।
तव प्रसादाद् देवेशि व्रतं पूर्णं तवाऽऽज्ञया ।।

हे जगन्माता ! सम्पूर्ण लोकको कल्याण गर्ने हे देवी ! हे स्वस्थानी परमेश्वरी ! हुजुरको कृपाले मेरो व्रत पूरा भयो भनी प्रसाद झिक्नू र अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ बेली-पुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुन-समेत आफ्ना पुरुषलाई दिनू, पुरुष नभए छोरालाई र छोरा नभए मीत छोरालाई दिनू, मीत छोरा पनि नभए मेरो अमुक कार्य सिद्ध हवस् भनेर गंगा(नदी)मा बगाइदिनू र सय रोटी आफूले फलाहार गरी रात्रिमा जाग्राम बस्नू । हे गोमा ! यति गरेपछि श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले तिम्रो सबै दुःख नाश हुनेछ, अन्यथा नमाने । यही व्रतका प्रभावले पार्वतीले महादेव स्वामी पाइथिन् । अब हामी जान्छौँ । यति सप्तऋषिले भनेको सुनी गोमाले मनमा आनन्द मान्दै भनिन् - हे ऋषीश्वर हो ! म यस्ती पापिनीका घरमा केही छैन, केले आतिथ्य गरूँ ? पसलबाट पान किनेर ल्याउँछु भनी चर्खामा रहेको धागोको लरिया लिएर घरबाट निस्किन् । त्यसै वेला सप्तऋषिहरूले गोमाको कष्ट देखेर साह्रै दया लागी सातओटा सुनका कौड़ी आफूहरू बसेको पिरुका-मनि छाडेर गए।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सप्तऋषिव्रतोपदेशोनाम द्वाविंशोऽध्यायः ।।२२।।*

•

# अथ त्रयोविंशोऽध्यायः

## गोमा-स्वस्थानीव्रतकृत-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! त्यसपछि गोमा ब्राह्मणी धागाको लरिया लिएर चन्द्रज्योति नगरको बरहीको घर पुगेर- मेरो घरमा सप्तऋषि आएका छन्, यो धागोको पान देऊ, तिनलाई खान दिन्छु भनिन् । त्यति गोमाले भनेको सुनेर बरहीले उत्तर दियो- 'हे गोमा ब्राह्मणी ! पान त कत्ति पनि छैन, जो भएको हिजै बेचिसकेँ। नपत्याए हेर' भनेर पानको भाँडो उघारेर देखायो । तब भाँडाभरि पान भइरहेको देखी-यो के आश्चर्य भयो भनी चिन्ता गरेर भन्यो- 'हे गोमा ब्राह्मणी ! यस भाँडाको पान हिजै बेचिसकेको थिएँ, आज कताबाट आयो ? तपाईँले मेरो घरमा सप्तऋषि आएका छन्, उनलाई खान दिने भन्दा यस्तो भएको हो कि भनी लाज मानी तपाईं धन्य हुनुहुन्छ, त्यो धागो पनि दिनुपर्दैन, पान लगेर ऋषिहरूलाई खान दिनुहोस् भनी आधा जति पान, ल्वाङ, सुपारी-समेत दियो र गोमा ब्राह्मणीले मनमा आनन्द मानी पान लिएर घर आउँदा सप्त-ऋषिहरू गइसकेछन् । अरू केही नभए पनि पानले

ऋषिहरूको आतिथ्य गर्नेछु भनेको, म पापिनीको हातको पान खानुपर्ला भनी हिडेछन् । म धिक्कार रहिछु भनी विस्मात गरिन् । केही बेरपछि कुचो लिएर घर बढारूँ भनी पिरुका उठाउँदा उनीहरूले छाडेर गएका सातोटा सुनका कौडी देखिन् । त्यो द्रव्य पाएपछि उनीहरूले बताए-अनुसार पौषशुक्ल पूर्णिमादेखि हात-खुट्टाका नङ काटी स्नान गरेर पवित्र भई एकभक्त रही, एकचित्त गरी नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गरेर रात पर्नासाथ कथा सुन्ने घरमा कोही नहुनाले आफ्ना खाट, चर्खा, उइँटा, धनु आदि राखेर श्रीस्वस्थानी परमेश्वरीको कथा भन्दथिन् । त्यसो गर्दा चन्द्रज्योति नगरका गोठाला केटा-केटीहरूले सुनेर के हो ! भनी खरको भित्ता च्यातेर चियाउन लागे र बिछौना, उइँटा, चरखा, धनु सामुन्ने राखेर एक्लै बरबराइरहेकी गोमालाई देखेर-'हे गोमा ब्राह्मणी ! किन एक्लै कराएकी ?' भनी सोधे । अनि गोमाले भनिन्- हे बालक हो ! सप्तऋषिहरू आई श्रीस्वस्थानी परमेश्वरीको व्रत गर भनी उपदेश दिएर गएका हुनाले सोही व्रत गरी श्रीस्वस्थानी परमेश्वरीको कथा भनेकी हुँ, व्यर्थ कराएकी होइन । मलाई कुनै रोग पनि

लागेको छैन, म बहुलाएकी पनि छैन । सुन्ने कोही नहुनाले ओछ्यान, चर्खा, उइँटा, धनुलाई सुनाएकी हुँ । यति गोमाले भनेको सुनी गोठाला केटा-केटीहरूले दिउँसो आफूले खान लगेको अन्न-पात छाडेर गए । सधैँ गोमाले भनेको कथा सुन्दथे र जे सकेको लगिदिन्थे । त्यसो गर्दा श्रीस्वस्थानी परमेश्वरीको कृपाले गोठाला केटा-केटीलाई घाँस खोज्न धेरै पर जानुपरेन, नगीचै पाइन लाग्यो । गोमालाई पनि अन्न, द्रव्य हुँदै गयो । त्यसो गर्दागर्दै माघशुक्ल पूर्णिमाको दिन सम्पूर्ण सामग्री तयार पारी एकचित्त भई श्रीस्वस्थानी परमेश्वरीको पूजा गरिसकेर हातमा अर्घ्य-पात्र लिई-'हे स्वस्थानी परमेश्वरी ! मलाई महादेवले भिक्षुकरूप भएर डमरुको शब्दले दिएको श्राप नाश गर । फेरि मेरो पुत्र नवराज र मलाई यस लोकमा सुख- सम्पत्ति दिई परलोकमा सायुज्य मुक्ति प्रदान गर । हे जगदीश्वरी ! आदि, मध्य र अन्त नभएकी; सृष्टि, स्थिति-संहार-स्वरूप भएकी यस्ती हे स्वस्थानी परमेश्वरी ! हजुरलाई कोटि-कोटि नमस्कार !' यसरी महादेवको पनि स्तुति गरी अर्घ्य दिइन् र दण्डवत् प्रणाम गरेर प्रसाद झिकी अष्टोत्तर सयमा आठ रोटी, आठ

अक्षता, आठ बेलीपुष्प, आठ पान, आठ कुड्का सुपारी, सगुन-समेत यो मेरो पुत्र नवराजलाई भनी पर सारिन् । सय रोटी आफूले फलाहार गरिन् र रात्रिमा जाग्राम बसिन् । त्यही रातमा श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले नवराज टुप्लुक्क आइपुगे र बाहिरबाट 'हे माता !' भनेर डाके । गोमाले आफ्नो छोरोको बोली चिह्नेर

गोमा ब्राह्मणीले स्वस्थानीको पूजा गरेपछि नवराज आइपुगेका

झट्ट उठी बाहिर आएर ढोका खोली भित्र लगिन् । अनि स्नेहपूर्वक सोधिन् -'हे पुत्र ! तेरा पिताको के खबर छ ?' अनि नवराजले भने- 'हे माता ! भिक्षा माँग्न गएका मेरा पिता गंगातटमा नित्य-पूजाको लागि वृक्षमा चढेर फल-फूल टिप्न लाग्दा संयोगले रूखको हाँगो भाँचिई लडेर मरेछन् । मलाई त्यहीँ बस्ने वृद्ध दम्पतीले भने र रूखमनि

गएर हेरेँ । हाड़-खोड रहेछ । त्यो बटुली गंगा(नदीमा)मा प्रवाह गरेँ । अनि दशग्रात्र र श्राद्ध आदि गरेर घर आउन लाग्दा घरको दुःख सम्झेर त्यसै कसरी जाऊँ भनी शहरमा गएर राजाको सेवा गरेँ । उनले केही द्रव्य दिए् र घर आइपुगेँ ।' यति नवराजले भनेको सुन्नासाथ गोमा अधैर्य भई-निर्विवेकी विधाताले सात वर्षकी हुँदा सत्तरी वर्षको बूढासित विवाह गरायो, उही बूढो पनि मेरो यस्तो यौवनको बखतमा खोसेर लगिदियो । हे स्वामी ! भिक्षा माँग्न गएका तिमीले मलाई अनाथ तुल्याई एक्लै छाडी कता गयौ ? हे नाथ ! तिमी जहाँ गयौ, मलाई पनि उहीँ लैजाऊ । तिमी-बिना म यो जीवन कसरी राखूँ ? भन्दै मूर्छा परेर भूमिमा ढलिन् । पछि चेत आयो र अनेक प्रकारले शोक गर्न लागिन् । अनि नवराजले भने-'हे माता ! अब शोक नगर्नुहवस् । यो अनित्य संसारको नियम नै यही छ । जन्मेपछि नमर्ने को छ ? एकदिन सबैले मर्नुपर्दछ । अतः अब तपाईंले मेरो मुख हेर्नुपर्दछ । तपाईंकी बुहारी कहाँ छे ? यतिका दिनसम्म तपाईंहरू कसरी बस्नुभयो, खान-पिन कष्ट भयो होला । फेरि तपाईं यस बेलासम्म नसुतेर के गर्दै हुनुहुन्छ ?

अनेक पुष्प र धूप चन्दनको सुगन्ध आइरहेछ । के पुण्य कार्य गर्नुभयो ? आज्ञा हवस् ?' यति नवराजले भनेको सुनी गोमाले धैर्य धारण गरेर भनिन् - 'हे नवराज ! थाकेर आएको छस्, भोक लाग्यो होला, पहिले खानेकुरा खा ।' भनी खान दिइन् । खाइसकेपछि- 'हे पुत्र ! तेरी स्त्री चन्द्रावती माइत गएकी छ । तपाईँका छोरा आएपछि डाक्न पठाउनू भनेकी थिई । म तँलाई सम्झेर दुःखका दिन बिताइरहेकी थिएँ । एकदिन सप्तऋषिहरू आई मेरो कष्ट देखेर मनमा दया लागी 'श्रीस्वस्थानी परमेश्वरीको व्रत गर, तिम्रो दुःख नाश होला' भनी उपदेश दिए र, उनीहरूको उपदेशले 'मेरो पुत्र नवराज छिटै आइपुगोस् र मेरो कष्ट एवं दरिद्रता नाश होस्' भनेर उनै श्रीस्वस्थानी परमेश्वरीको व्रत र पूजा गरी जाग्राम बसेकी थिएँ, मेरो मनोरथ पूर्ण भयो । अब तँलाई पनि उनको महिमा सुनाउँछु, एकचित्त भएर सुन् । यस लोकमा सुख-सम्पत्ति पाई अन्त्यमा मुक्ति-समेत मिल्नेछ भनी सम्पूर्ण कथा विस्तारले सुनाइन् ।' त्यसपछि प्रातःकाल भयो र नवराजले भने-'हे माता ! म गण्डकी गंगास्नान गरेर आउँछु भनी गए । अनि गण्डकी गंगामा गई स्नान गरिसकी

हरि-हरको पूजा र स्तुति गर्दा गोमा ब्राह्मणीको व्रतको प्रभावले गण्डकी गंगाबाट हरि-हर प्रकट

नवराजलाई गण्डकी गंगाबाट प्रकट भएर हरि-हरले दर्शन दिनुभएको

भई- 'हे नवराज ! तेरी माताले गरेको स्वस्थानी परमेश्वरीको व्रतका प्रभावले हामी प्रसन्न भयौं ' वरदान लेऊ । सुन, यस गण्डकी गंगादेखि दक्षिण दिशामा लावण्यदेश छ, त्यहाँ राजा छैनन् । हात्तीलाई सुवर्णको कलश र फूलको माला दिई राजा रोज्न लगाएका छन् ! तँ त्यहाँ जानू, हामी त्यस हात्तीमा प्रवेश भई राज्याभिषेक तँलाई नै दिलाउनेछौं । राजा होलास्' - भनी वरदान दिए । हरि-हर प्रकट भई वरदान दिएको सुनी नवराज स्तुति गर्न लागे-

यौ तौ शंख-कपाल-भूषितकरौ, मालाऽस्थिमालाधरौ
देवौ द्वारवती-श्मशाननिलयौ, नागारिगोवाहनौ ।

द्वित्र्यक्षौ बलि-दक्ष-यज्ञमथनौ श्रीशैलजा-वल्लभौ
पापं मे हरतां सदा हरि-हरौ श्रीवत्स-गङ्गाधरौ ।।

**'हे हरि-हर ! हातमा शंख र कपाल (खोपड़ी) लिने, वनमाला र अस्थिमाला धारण गर्ने, दिव्यरूप भएका, श्मशान र द्वारकामा बस्ने, वृषभ अर्थात् साँढ़े र गरुड़ वाहन हुने, तीन र दुई नेत्र भएका, बलि र दक्षको यज्ञ मथन गर्ने, श्रीवत्स र गङ्गाले सुशोभित हुने, पार्वती र लक्ष्मीका स्वामी भएका यस्ता हजुरहरू मेरो समस्त पाप हरण गर्नुहवस् । म-माथि दया गरेर दर्शन दिनुभयो, म धन्य रहेछु । मैले माताको गर्भमा वास लिएको आज सफल भयो । दुष्ट जनको संहार र साधु जनको रक्षा गर्ने यस्ता हजुरहरू सम्पूर्ण ब्रह्माण्ड सृष्टि गरेर पालन गरी पाप पुण्यका साक्षी भएका हजुरहरूलाई कोटि-कोटि नमस्कार । सधैँ हजुरहरूको भक्तिमा मेरो चित्त लागोस् ।' यस्तै अनेक स्तुति गरिसकेपछि हरि-हर अन्तर्धान हुनुभयो । अनि नवराज हरि-हरको दर्शन पाएपछि सूर्य झैँ तेजिला भएर घर पुगे । गोमाले छोरोलाई त्यस्तो तेजले युक्त भएको देखेर आश्चर्य मान्दै सोधिन् - 'हे नवराज ! तँ आज अत्यन्त तेजवन्त देखिन्छस्, त्यसै हो कि मेरो चित्तको भ्रान्ति हो ? म त**

देवराज इन्द्रभन्दा पनि तेजिलो देखिरहेकी छु ।' यति महतारीले भनेपछि नवराजले गण्डकी गंगामा स्नान गर्न जाँदा गण्डकी गंगाबाट हरि-हर प्रत्यक्ष भएको र लावण्यदेशको राजा होलास् भन्ने वरदान दिएको सारा वृत्तान्त सुनाई- 'हे माता ! हजुरको तपस्याको प्रभावले म यस्तो भएँ' भने । यति नवराजले भनेपछि गोमा प्रसन्न भएर बोलिन्- 'हे नवराज ! मेरो पुत्र चाँडै आइपुगोस् भनेर श्रीस्वस्थानी परमेश्वरीको व्रत गरी प्रसाद राखिदिएकी छु, लौ लेऊ, स्वस्थानी परमेश्वरीले सदैव तिम्रो कल्याण गरून्, सधैँ उनकै भक्तिमा चित्त लागिरहोस्' यति भनेर श्रीस्वस्थानी परमेश्वरीको प्रसाद आठ आठ गनेर राखेको सगुन-समेत दिइन् र हे पुत्र ! तिमी हरि-हरको आशीर्वादले लावण्यदेशको राजा भए भनी आशीर्वाद दिइन् । नवराजले पनि श्रीस्वस्थानी परमेश्वरीको प्रसाद खाई माताको चरणमा दण्डवत् प्रणाम गरी लावण्यदेश जान भनी हिँडे ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां गोमास्वस्थानीव्रतकृतवर्णनं नाम त्रयोविंशोऽध्यायः ।।२३।।*

# अथ चतुर्विंशोऽध्यायः

## नवराज-ब्राह्मण निमन्त्रण-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! त्यसपछि लावण्यदेशमा मन्त्रीहरूले हात्तीलाई सुनको कलश र फूलको माला दिई राजा रोज्न लगाइराखेका थिए । लोकहरू अनेक वस्त्र अलंकार पहिरी राजा होइजान्छु कि भनी हात्तीको नगीच गएर अघि-पछि हिँड्न लागे । नवराज पनि उहाँ पुगेर यौटा पाटीमा बसी हेरिरहे । हात्तीमा हरि-हर प्रवेश गरी नवराज ब्राह्मणका

नवराजलाई हात्तीले माला लगाई राजा तुल्याएको

नगीच गई उनको गलामा माला पहिराई सुवर्णको कलशले अभिषेक गरिदियो । त्यो देखेर प्रजाहरू भन्न लागे- 'हे लोक हो ! यो हात्ती बहुलायो, के

यस देशमा कुनै क्षत्रिय छैनन् र ब्राह्मणलाई अभिषेक गऱ्यो ? कसैले प्रतिवाद गरे-'यो हात्ती बहुलाएको होइन, तिमीहरू नै पागल भयौ । मुखले नबोले पनि हात्ती देवता हो । ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र जो भए पनि उसको तपस्या र भाग्यले राजा भयो । बिना-नारायणको अंशले राजा हुन पाइन्न, चुप लाग' भनी सम्झाए । उता हरि-हर प्रवेश भइरहेको हात्तीले नवराजलाई सूँढले उचाली कुम्भस्थलमा राखेर दरबारमा लग्यो । गुरु-पुरोहितले अनेक वस्त्र अलंकार पहिराई सम्पूर्ण सामग्री तयार पारी पूर्ण घट, अष्ट मंगल गरी सुदिन ठहराई त्यसै शहरकी राजाकी कन्या लावण्यवती नाम भएकीलाई विधिपूर्वक नवराजलाई कन्यादान गरी राजा तुल्याए । अनि गुरु पुरोहितले भने- 'हे महाराज ! राज्याभिषेक भएको छैन, सामग्री तयार छ, सुदिन ठहराई अभिषेक लिनुहवस् ।' तिनको यस्ता कुरा सुनी नवराज भन्दछन् - 'हे गुरु पुरोहित हो ! मेरी महतारीले नदिई पहिले अरूको अभिषेक कसरी लिऊँ ? चन्द्रज्योति नगरको बाहिर यौटा खरको घर छ । त्यहाँ गोमा नामकी ब्राह्मणी छन् । ती मेरी महतारी हुन् । तिनीलाई चाँडै लिन पठाओ ।'

यति नवराजले भनेपछि मन्त्रीले 'मै जान्छु' भनी वस्त्रालंकार, पालकी र केही सेना समेत लिई चन्द्रज्योति नगरमा गए र त्यहाँ गोमालाई भेटी प्रणाम गरेर भने-'हे राजमाता ! हजुरका छोरा लावण्यदेशका राजा हुनुभयो, म मन्त्री हुँ । हजुरलाई लिन पठाउनुभयो र म आएँ । यो वस्त्रालंकार, पालकी पनि ल्याएको छु, यो पहिरी चाँडै सवारी हवस् ।' मन्त्रीले यति भनेको सुनी गोमाले मनमा आनन्द मानी वस्त्रालंकार पहिरी पालकीमा बसेर लावण्यदेश हिँडिन् । चन्द्रज्योति नगरका नारीहरूले थाहा पाई हेर्न भनेर दौडेर निस्कदा कसैका कपालको केश फुकेको, कसैका छोरा-छोरी रोएको, कसैले पाक्न लागेको र खान बसेको भात पनि छाडेर हत्पताउँदै निस्के । पालकीमा बसेर फौजसमेत भई जान लागेकी गोमालाई देखेर ती भन्दछन् - 'हेर, स्त्री जाति भएर पनि गोमा अर्काको ढिकी-जाँतो गरी, धागो कातेर बाँचिरहेकी हुनाले आज राजमाता भएर पालकीमा बसेर गइन्' भनी परस्पर कुरा गर्थे । गोमा राजमाता त्यहाँबाट गएर लावण्यदेशको नगीच पुग्निन् र नवराजले थाहा पाएर हात्ती, घोडा, रथ, सेना लगेर गीत-वाद्य गर्दै दरबारमा

लगेर साष्टांग प्रणाम गरी-'हे माता ! हजुरको तपस्या र हरि-हरको कृपाले म लावण्यदेशको राजा भएँ । अब राज्याभिषेक दिनुहवस्' भने । यति नवराजले भनेपछि सुदिन ठहराई सुनको सिंहासनमा बसालेर नवराज राजा र लावण्यवती रानीलाई विधिपूर्वक राज्याभिषेक दिइन् । राज्याभिषेक भइसकेपछि गुरु पुरोहित र ब्राह्मणहरूलाई भोजन गराई दक्षिणा दिई बिदा गरे । अनि हात्ती, घोड़ा, रथ, पैदल सेना तयार पारी गीत-वाद्य गर्दै दर्बार जाँदा भए ।

फेरि कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि एकदिन नवराजले आफ्नी माता गोमासित भने- 'हे माता ! श्रीस्वस्थानी परमेश्वरीका कृपाले हामी आजको यो स्थितिमा प्राप्त भयौं । अब हाम्रो राज्यमा भए-जति समस्त ब्राह्मणहरू डाकेर भोजन दक्षिणा दिऔं । यस जन्ममा दान-धर्म गर्न सके अर्को जन्ममा प्राप्त हुनेछ ।' यति नवराजले भनेको सुनी- 'हे पुत्र ! यो असल कुरा भन्यौ । धर्मकार्यमा तिम्रो मन सदैव लागिरहोस् ।' यति भनी मन्त्रीलाई अह्राई सामग्री तयार पार्न लगाई ब्राह्मणहरूलाई महीना मिति तोकी एकवर्षे निमन्त्रणा पठाउँदा चन्द्रज्योति नगरका तेरा

मित्रहरूलाई पनि निम्ता पठाउनू र तेरी पत्नी चन्द्रावतीलाई पनि लिन पठाउनू ।' यति गोमाले भनेको सुनी नवराजले तत्काल मन्त्रीलाई डाकी भने-'हे मन्त्री ! हाम्रो राज्यमा भए-जति समस्त ब्राह्मणलाई भोजन गराउँछु, सामग्री तयार पार्न लगाऊ र निमन्त्रणा पनि पठाऊ । चन्द्रज्योति नगरमा मेरा साथीहरू छन्, उनलाई पनि डाक्न पठाऊ । फेरि वरुणपुरका अग्निस्वामीकी पुत्री चन्द्रावती मेरी पत्नी हो, उसलाई पनि लिन पठाऊ। मेरा सासू-ससुरालाई पनि तिम्रा ज्वाइँ राजा भए, आजको महीना दिनभित्रैमा आइपुग्नू भनेर डाक्न पठाऊ ।' राजाको आज्ञानुसार मन्त्रीले लावण्यदेशका समस्त ब्राह्मणहरूलाई आज्ञा-अनुसार निम्ता पठाउन लगाए । सामग्री पनि तत्काल तयार पार्न लगाए । चन्द्रज्योति नगरमा नवराजका साथीहरूलाई डाक्न पठाए ।चन्द्रावतीलाई लिन डोलेहरू डाकी सबै कुरा बुझाई तत्काल पठाए । वरुणपुर पुगेर डोलेहरू 'अग्निस्वामीको घर कुन हो ?' भनी सोधे र कसैले 'ऊः त्यही हो' भनी देखाइदिए । तब घरको आँगनमा गएर बोलाए, अनि चन्द्रावतीले सुनेर झ्यालबाट हेरी-'को हौ ? कहाँबाट आएका ?' भनी सोधिन् । अनि डोलेहरूले भने- 'हामी

नवराज राजाले पठाएर लावण्य-देशबाट आएका हौं ।' चन्द्रावतीले फेरि सोधिन् - 'हे डोले हो ! नवराज राजा भनी आश्चर्यको कुरा भन्यौ । नवराज कसरी राजा भए, त्यो सबै वृत्तान्त सुनाऊ ।' अनि डोलेहरूले फेरि भने-'लावण्यदेशमा राजा नहुनाले हात्तीलाई राजा रोज्न लगाएको थियो, नवराजलाई देखेर हत्तीले सुनको कलशले अभिषेक गरी राजा तुल्यायो । चन्द्रावती रानी कहाँ छिन् ? खबर गरिदेऊ, चाँडै नगए राजा रिसाउनेछन् ।' यति डोलेहरूको कुरा सुनी मनमा आनन्द मान्दै 'चन्द्रावती नामकी उनकी पत्नी म नै हुँ' भनिन् । तब डोलेहरूले प्रणाम गरेर भने-'हे महारानी ! चाँडै जाऔँ, ढीलो नगर्नुहवस्, हजुरका माता-पितालाई पनि आजको महीना दिनभित्रैमा आइपुग्ने गरी निम्ता पठाएको छ । हामीले चिन्हेका छैनौं, हजुरले नै भनिदिनुपर्‍यो ।' यति सुन्नासाथ माथि गएर 'आफ्ना माता-पितालाई नवराज राजा भएको र आफूलाई लिन आएको सबै कुरा सुनाइन् । फेरि हजुरहरूलाई पनि आजको महीना दिनभित्रै आइपुग्नू भनी निम्ता पठाएको रहेछ । अब आज्ञा दिए म छिटै जाने थिएँ' भनिन् । यति छोरीको कुरा सुनी अग्निस्वामी प्रसन्न भएर धन्य मेरा

ज्वाइँ नवराज, मेरी पुत्री पनि धन्य रहिछ, अब रानी भई भनेर नाना वस्त्र अलंकार पहिराई- 'हे पुत्री ! तैँले जन्म लिएको सफल भयो । अब विलम्ब नगरेर छिटै जा' भनी बिदा दिए । तब माता-पितालाई प्रणाम गरी आफ्ना साथी सँगिनी र छिमेकीहरूसित पनि बिदा भई लावण्यदेश जान भनेर हिँडिन्, अनि लोकहरू परस्पर कुरा गर्न लागे- 'हेर, चन्द्रावतीले सासूलाई छाडेर माइत बसेकी थिई, यस्ती अपराधिनी पनि आज रानी भई' भनी चर्चा गर्न लागे ।

चन्द्रावती त्यहाँबाट गएर यौटा ठूलो वनमा पुगिन् । कस्तो वन भने-मृग आदि पशुहरू स्त्री-पुरुष भई शीतल स्थानमा विश्राम गरिरहेका, कहीँ राजहंसादि पक्षीहरू सरोवरमा खेलिरहेका; गुराँस, पलाश आदि वृक्षका पुष्पले शोभायमान एवं मधुकर, भ्रमर, कोकिल, मयूर आदिका शब्दले गुञ्जायमान यस्तो वनमा पुग्दा परैबाट कोही अप्सराहरूले श्रीस्वस्थानी परमेश्वरीको व्रत गरिरहेका देखेर डोलेहरूले- 'हे महारानी ! हामीलाई भोक लाग्यो । त्यहाँ पर केही पाए खाएर आउँछौँ । हजुर एकछिन यहीँ विश्राम गर्नुहोस्' भनेर पर्धानीले डोली अड्याई

चन्द्रावतीलाई त्यहीँ छाडेर 'त्यो पर के रहेछ' भनी हेर्न गए र अप्सराहरूका नगीच पुगेर 'तिमीहरू को हौ ? कहाँबाट आयौ ? कुन देवताको पूजन गरेको ?' भनी सोधे । यति डोलेहरूले सोधेपछि

अप्सराहरूको संसर्गमा डोलेहरूले स्वस्थानीको पूजा गरेको

अप्सराहरू भन्दछन्- 'हे मनुष्य हो ! यी श्रीस्वस्थानी परमेश्वरी हुन् । यिनैको पूजा गरेका हौँ । हामी स्वर्गका अप्सरा हौँ' भने । तिनका त्यस्ता कुरा सुनेर- 'यो व्रत हामीहरूले पनि गर्न हुन्छ कि ?' भनी सोधे त अप्सराहरूले 'हुन्छ' भनेपछि भारवाहकहरूले मनमा हर्ष मानी- 'हामीसित सामग्री केही पनि छैन, हजुरहरूको संसर्गमा पूजा गराउनुहवस्' भने । तब अप्सराहरूले आफ्ना संसर्गमा पूजा गराए । अर्काको भारी बोकेर ज्याला पाएको द्रव्य भेटी चढाए । पूजा सकेर

प्रसाद झिकेर अप्सराहरूले डोलेहरूलाई भने- 'हे मनुष्य हो ! जसले श्रीस्वस्थानी परमेश्वरीको व्रत गर्ला, कथा सुन्ला वा उनको महिमाको पुस्तक घरमा राख्ला त्यसका समस्त पाप र दुःख-दरिद्रता, शोक नाश भएर जाला र देह त्यागेपछि दिव्य देह पाई कैलाशमा बस्न जाला । बाटो लागेका तिमीहरूले अत्यन्त श्रद्धा-भक्तिसाथ व्रत गर्‍यौ, धन्य रहेछौ' भनी अप्सराहरू स्वर्ग गएपछि डोलेहरू फर्केर आई चन्द्रावती महारानी भएको स्थानमा हाजिर हुँदा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां नवराज ब्राह्मण निमन्त्रणानाम चतुर्विंशोऽध्यायः ।।२४।।*

•

नवराजको विहार स्थल

# अथ पञ्चविंशोऽध्यायः

## नवराज-ब्राह्मणभोजन-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यसपछि डोलेहरूले भने-हे महारानी ! त्यहाँ स्वर्गका अप्सराहरूलाई श्रीस्वस्थानी परमेश्वरीको व्रत गर्न लागेका देखेर उनैका संसर्गमा हामी पनि पूजा गर्न लाग्दा केही विलम्ब भयो, क्षमा गर्नु-होला । हजुरलाई पनि स्वस्थानी परमेश्वरीको प्रसाद ल्याइदिएका छौँ, लिनुहवस् । तिनका यस्ता कुरा सुनी चन्द्रावती क्रोधित भई राता-राता आँखा पारेर दाह्रा किटी नागले झैं निःश्वास फेरी सुस्केरा हाली मत्ता हात्ती रिसाए-झैं ठूलो स्वरले गर्जेर-'हे पापिष्ठ डोलेहरू हो ! मलाई यस्तो जंगलमा एक्लै छाडी व्रत गर्न लाग्यौ । के सेवकको धर्म यही हो ? त्यस व्रतले तिमीहरूलाई खान दिन्छ कि ? मैले त स्वस्थानी भनेको नाम पनि सुनेकी छैन । कहाँकी देवी हो त्यो ? के नाप्न सक्तछे त्यसले ? तिमीहरूले मलाई हेलाँ गरेर नटेरेको हो । वनमा भयौ र पो, नत्र तिमीहरूलाई म अवश्य मार्ने थिएँ ! म कहिले पुगूँ भनेर हत्पताई आएकी मलाई तिमीहरूले

विलम्ब गरिदियौ । अपराधीमा पनि ठूलो अपराधी तिमीहरू जस्ता व्यक्तिलाई नै भन्दछन् ।' यति भन्दै वानर उफ्रे-झैं उफ्री डोलेका हातबाट श्रीस्वस्थानी परमेश्वरीको प्रसाद खोसेर थुः थुः गरी थुकी खुट्टाले कुल्चेर फालिदिइन् । फेरि पनि यसै गरौला कि ? चाँडै लैजाओ भनिन् । तब बिचरा डोलेहरू डराई, केही बोल्न नसकी आँसुका धारा बगाउँदै मनले श्रीस्वस्थानी परमेश्वरीलाई सम्झी चुपचाप डोली बोकेर हिँडे। लावण्यदेशको नगीचै 'शाली' नामकी नदी थिइन्। त्यहाँ पुगेर आधा नदी तरेपछि श्रीस्वस्थानी

चन्द्रावती शाली नदीमा परिन् र डोलेहरू स्वर्ग गएका

परमेश्वरीको निन्दा गरेकी हुनाले अकस्मात् चाँदनी टाँगे-झैं मेघ उठेर मूसलधारे पानी पऱ्यो । अनि ठूलो हुरी आयो र पुल भाँचियो । हुरीको वेगले

चन्द्रावती शालीनदीमा डोलीबाट खसिन् । डोलेहरू श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले पक्षीरूप भई कैलासमा गएर अनन्दले रहे।

हे अगस्त्य मुनि ! त्यसपछि चन्द्रावती ब्राह्मणी महापातकी भएर जलभित्र पडिरहिन् । जुन दिन चन्द्रावती शालीनदीमा खसिथिन्, त्यसै दिनदेखि शालीनदी बगिनन्, स्थिर भइरहिन् । माझीहरूले देखेर-यो के आश्चर्य भयो, यस नदीमा ग्राह आएर बस्यो कि वा कहीँ कुनै यज्ञमा उत्पात हुन लाग्यो र यस्तो भयो । यो कुरो राजालाई सुनाऊँ भनी नवराज राजाकहाँ गई बिन्ती गरे- 'हे महाराज ! शालीनदी बगिरहेकी छैनन्, स्थिर भएकी छन् । यस्तो भएको हामीले आजसम्म सुनेका पनि थिएनौँ, तर आज प्रत्यक्ष देखियो, आश्चर्य भयो । विचार गरिबक्सियोस् ।' माझीहरूको यस्ता कुरा सुनी नवराज राजाले मन्त्रीलाई डाकी सारा कुरा बताई प्रजाहरू-समेत भई शालीनदीमा गएर माझीहरूलाई जल-भित्र केही छ कि जाल हालेर हेर भनी अह्राए । माझीले जाल हालेर हेर्दा चन्द्रावती जालमा अल्झेर पानीको बाहिर आइन्, तर ती कस्ती भएकी थिइन् भने शरीरमा कुष्ठी भएर हात-पाउ झरेकी, चेत हराएकी, हिलोले

छोपिई मूढो जस्तै भइरहेकी हुनाले यो के वस्तु हो भन्ने ठम्याउन नसकेर नदीको किनारमा मिल्काए र हे महाराज ! हामीले केही पनि पाउन सकेनौँ भनी बिन्ती गरे । अनि नवराजले- 'हे गण्डकी गंगे ! तिमी किन स्थिर भइरहेकी छौ ? मैले बुझ्न सकिनँ । मदेखि प्रसन्न हौ' भनेर नवरत्न पारो-सहित गाईको दूधले अर्घ्य दिए । राजाले अर्घ्य दिनासाथ शालीनदी बगिन् । त्यो देखेर आश्चर्य मान्दै प्रजा-सहित नवराज राजा दर्वार फर्के ।

त्यसपछि चन्द्रावती ब्राह्मणी कस्ती भइरहिन् भने-क्षणमा मूर्च्छा, क्षणमा चेष्टा, क्षण-क्षणमा भोक प्यास आदिका अनेक कष्ट पाई मूढो झैँ शालीनदीको तटमा रहिन् । एकदिन साह्रै भोक लाग्यो र खाने वस्तु केही नपाउँदा माटो खान्छु भनेर हातमा लिइन्, त त्यो माटो ढुंगा भयो, ढुंगा पनि खान खोज्दा हाड़ भयो, हाड पनि खान खोज्दा खरानी भयो र खरानी पनि खान खोज्दा ठूलो हुरी आएर उडाई लग्यो । श्रीस्वस्थानी परमेश्वरीको निन्दा गरेकी हुनाले शीत, ताप, भोक, प्यासबाट हुने अनेक दुःख खपिरहिन् ।

त्यसपछि अग्निपुरका कपिल नामका दुई भाइ

ब्राह्मणहरू नवराज राजाको एकवर्षे निमन्त्रणमा जान भनी त्यतैबाट आए । तिनलाई देखेर चन्द्रावतीले-तिमीहरू को हौ ? कहाँ जान लागेका ? भनेर सोधिन् । तिनले भने-हामी कपिल नामका ब्राह्मण हौं । लावण्यदेशका नवराज राजाको ब्राह्मण-भोजनको निमन्त्रणमा जान लागेका हौं । चन्द्रवतीले भनिन् - हे ब्राह्मण हो ! मैले कति दिनदेखि केही पनि खान पाएकी छैनँ । तिमीहरू भोजनमा जाने भए मलाई पनि केही माँगेर ल्याइदिए पुण्य होला । म असहाय अनाथ-माथि दया गर । तब ती ब्राह्मणहरूले भने-हे पापिनी ! अहिले हामी यसै 'हुन्छ' भन्न सक्तैनौं, किनभने राजाको महलमा के कसो हुन्छ भन्न सकिन्न । फेरि हामी ब्राह्मणाले ल्याउन हुने वस्तु दिए त ल्याऔंला, ल्याउन नहुने वस्तु दिए भने कसो गर्ने । अतः तँ आशा गरेर भरोसामा नबसेस् । यति भनेर ती दुवै भाइ लावण्य-देश गए । नवराज राजाले डाकेका सबै ब्राह्मणलाई यथेच्छ भोजन गराई दक्षिणा दिए । सबै जना राजालाई आशीर्वाद दिई प्रसन्न मनले आफाफ्ना घर गए । ती अग्निपुरका कपिल ब्राह्मण अघिका कुरा सम्झेर यसै जाऊँ भने त्यो पापिनी आशा गरिरहेकी

होली ! माँगौं भने कसरी माँगौं ? 'लोभी' भन्दछन् कि भनेर केही भन्न नसकी भोजन गरेको स्थानमा कहिले जाने कहिले आउने गर्न लागे । तिनको त्यस्तो चाला गोमा राजमाताले झ्यालबाट देखेर भण्डारेलाई भनिन् - हे भण्डारे हो ! ती दुवै ब्राह्मणले खान पाएनन् कि सन्तुष्ट भएनन् र हो कि, किन घुम्दै छन् ? सोध । अनि भण्डारेले तिनको नगीच गएर सोधे-हे ब्राह्मण हो ! तिमीहरूले खान पाएनौ कि तृप्त भएनौ ? इच्छा भए फेरि भोजन गर । अनि ब्राह्मण भन्दछन् - हे भण्डारे हो ! हामीले इच्छापूर्वक भोजन गर्‍यौं, सन्तुष्ट पनि भयौं, तर हामी आउँदा शालीनदीका तटमा कुष्टरोग भई हात-पाउ खसेकी कोही स्त्रीले देखी र कहाँ जान्छौ ? भनी सोधी । हामीले राजाको ब्राह्मण-भोजनमा जान्छौं भन्दा तिमीहरू भोजनमा जाने भए मलाई पनि केही माँगेर ल्याइदिए ! कति दिनदेखि खाएकी छैनँ भनेकी थिई । अतः अब यसै जाऔं भने त्यो पापिनी आशा गरिरहेकी होली, केही लगिदिऔं भने कसरी मागौं भन्ने संकोचले यता-उता हिंडेका हौं । त्यो कुरा भण्डारेहरूले राजमातालाई सुनाए । अनि उनले ती दुई जनाले बोक्न सके-जति अन्न दिनू भनिन्

र भण्डारेहरू भण्डारमा राखेको वस्तु लिन जाँदा राजाको सम्पूर्ण भण्डार नै सुक्यो । दिने-जस्तो वस्तु केही पनि नपाई राजमातालाई बिन्ती गरे-राखेको स्थानमा कुनै वस्तु पनि छैन, के दिने ? त्यति सुनी गोमा आफैँ गएर भण्डारमा हेरिन् र दिने वस्तु केही पनि नदेखी आफूलाई भनेर पकाइराखेको भात 'यही देऔं' भनिन् । भण्डारेहरूले त्यो भात लिएर गई ब्राह्मणलाई भन्दछन् -'हे ब्राह्मण हो ! त्यसको नाम लिनासाथ राजाको सम्पूर्ण भण्डार नै सुक्यो । यो राजमातालाई पकाइराखेको भात छ, यही लगिदेओ' भनी जिम्मा लगाइदिए । ब्राह्मणहरू लाज मान्दै त्यो भात लिएर दरबारबाट निस्के । तिनीहरू जानासाथ राजाको भण्डार पहिलेको जस्तै भयो । जहाँ जहाँ जुन-जुन वस्तु राखेको थियो, त्यहीँ-त्यहीँ देखियो भनी हे भक्त श्रोता हो ! कुमारले अगस्त्य मुनिलाई सुनाउँदा भए ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां नवराजब्राह्मणभोजनं नाम पञ्चविंशोऽध्यायः ।।२५।।*

# अथ षट्‌विंशोऽध्यायः

## चन्द्रावती व्रत-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ - हे अगस्त्य मुनि ! त्यसपछि ती ब्राह्मणहरू भात लिएर चन्द्रावती भएको स्थानमा पुगे । चन्द्रावतीले तिनीहरूलाई आएको देखी मलाई पनि केही ल्याइदियौ कि भनी सोधिन् र ब्राह्मणहरूले भने- 'हे पापिनी ! तँ अत्यन्त पापिनी रहिछस् । तेरो निम्ति हामीले लज्जित हुनुपर्‍यो । किनकि तँलाई दिन भनी हेर्न जाँदा राजाको भण्डार नै सुकिगयो । यति भात राजमातालाई भनेर पकाइराखेको रहेछ, ल्याइ-दिएका छौँ, लौ ले' भनेर सुम्पिदिए । त्यो भात पाउना- साथचन्द्रावती भोकले व्याकुल भएकी हुनाले तत्काल खान तयार भइन् । अनि तीब्राह्मणहरूले भने- हे पापिनी ! यस्तो अवस्थामा परेर पनि तँलाई धर्मको चेष्टा रहेनछ, मुख धोएर खा, तेरो अवस्था देखेर हामीलाई दया लाग्यो । तँलाई उपदेश दिन्छौँ, सुन्-निरञ्जन निराकार रूप श्रीस्वस्थानी परमेश्वरीको व्रत गर् । त्यही व्रतको प्रभावले तेरो उद्धार हुनेछ भनी उनीहरू गए । अनि चन्द्रावती बडो कष्टले चार हात-पाउ टेकी मुख धुन भनी

शालीनदीमा ज़ाँदा शालीनदीको जल-सुक्दै गयो र चन्द्रावती रोई-कराई माथि आएर मुख नधोएरै खान्छु भनी भात हातमा लिनासाथ खरानी भयो, त्यो खरानी पनि खाउँ भन्दा ठूलो बतास आई उडाएर लग्यो । अनि चन्द्रावती काटेको वृक्ष ढले-झैँ भूमिमा परी मूर्च्छा भइन् । फेरि चेत आयो र 'मैले कस्तो अपराध गरिछु' भनी अनेक थरिका विषाद गरी दुःखका सिन्धुमा डुबिरहेकी थिइन् ।

त्यसको केही दिनपछि पौषशुक्ल पूर्णिमा आयो र स्वस्थानी परमेश्वरीको व्रत आरम्भ गर्न स्वर्गका अप्सराहरू शालीनदीमा स्नान गर्न आए। स्नान गरिसकी सूर्यनारायणलाई अर्घ्य दिई बालुवाको शिवलिंग बनाई महादेवको पूजा गर्न लाग्दा चन्द्रावतीले देखिन् र उनीहरूको नगीच गएर भनिन् - तपाईंहरू देवता हौ कि मनुष्य हौ ? म पापिनी कहीं चल्न सक्तिनँ, कसैले केही दिदैनन् । खान पाउँदिनँ, मलाई अन्न-दान दिनुहवस् । म के पापले यस्ती भएँ, मेरो कसरी उद्धार होला ? यति चन्द्रावतीले भनेको सुनी अप्सरा भन्दछन् - हे पापिनी ! हामी स्वर्गका अप्सरा हौँ । आज पौषशुक्ल पूर्णिमा हो । श्रीस्वस्थानी परमेश्वरीको व्रत प्रारम्भ गर्न यहाँ स्नान गर्न आयौँ । तेरो

अवस्था देखेर हामीलाई दया लाग्यो । तँ पनि यही व्रत गर्, सम्पूर्ण पाप नाश भएर उद्धार होला । यति सुनी चन्द्रावती मनमनै विचार गर्दछिन्- 'मैले अरू त केही पाप गरेकी थिइनँ, डोलेहरूले स्वस्थानी परमेश्वरीको प्रसाद भनी ल्याइदिएको प्रसादलाई मैले अहंकारले थुः थुः गरी थुकेर खुट्टाले दलीमली पारी फालिदिएकी थिएँ । मलाई अवश्य त्यही पाप लाग्यो । यहाँ आइपुगेपछि नदी तर्न लाग्दा डोलीबाट लडेथेँ, ठीक हो । कपिल ब्राह्मणले पनि स्वस्थानी परमेश्वरीको व्रत गर् भन्ने उपदेश दिएका थिए । आज अप्सराहरूले पनि त्यस्तै भने । श्रीस्वस्थानी परमेश्वरी भनेकी ठूली रहिछन् । मनुष्यहरू अभिमानले नाशिँदा रहेछन् । मैले पनि अहंकार गर्दा यस अवस्थामा प्राप्त भएँ। अब म पनि स्वस्थानी परमेश्वरीको व्रत गर्दछु ।' यस्तो निश्चय गरेर अप्सराहरूसित प्रार्थना गरिन् - 'हे अप्सरा हो ! श्रीस्वस्थानी परमेश्वरीको व्रत-विधि के हो ? के-के गर्नुपर्दछ ? यो सबै आज्ञा हवस् ।' यति चन्द्रावतीले भनेको सुनी अप्सरा भन्दछन्- 'हे पापिनी ! आजैदेखि हात-खुट्टाका नङ काटी, स्नान गरी, पवित्र भएर एकभक्त रही एकचित्त गरी महीना दिनसम्म

नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गर्नू। सकेदेखि श्रीस्वस्थानी परमेश्वरीको कथा भन्नू वा सुन्नू, नसके मनले उनैलाई सम्झिरहनू। माघशुक्ल पूर्णिमाको दिन अष्टोत्तर सय पान, अष्टोत्तर सय अक्षता, अष्टोत्तर सय बेली-पुष्प, अष्टोत्तर सय कुड्का सुपारी, अष्टोत्तर सय यज्ञसूत्र र अष्टोत्तर सय रोटी तथा जात-जातका फूल र नैवेद्यहरू तयार पारी आर्सीमा 'ॐ'कार लेखी गंगाजलले स्नान गराउनू, माला पहिराई धूप, दीप, नैवेद्य, फल-फूल र कस्तूरी, मेवा, मिष्टान्न, वस्त्र, भेटी चढाउनू। अनि एकचित्त भएर स्वस्थानी परमेश्वरीको स्तोत्र-पाठ, जप-ध्यान गर्नू र अर्घ्य दिनू- 'हे ईश्वरी !' भनेर मनले इच्छित वर माँग्नू, अनि प्रसाद झिक्नू र अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ यज्ञसूत्र, आठ पान, आठ कुड्का सुपारी, सगुन-समेत आफ्ना पुरुषलाई दिनू, पुरुष नभए छोरालाई दिनू, छोरा पनि नभए मीतछोरालाई दिनू, मीतछोरा पनि नभए मेरो अमुक कामना सिद्ध हवस् भनी गंगा वा नदीमा बगाउनू, सय रोटी आफूले फलाहार गर्नू, रात्रिमा जाग्राम बस्नू। यति गरिसकेपछि तेरा सम्पूर्ण पाप नाश होलान्। हे पापिनी ! यसमा अन्यथा नमानेस्।

अब हामीहरू जान्छौँ भनी अप्सराहरू स्वर्ग गए । त्यसपछि चन्द्रावतीले अप्सराहरूको उपदेश-अनुसार शालीनदीमा स्नान गरी एकभक्त रही एकचित्त गरी श्रीस्वस्थानी परमेश्वरीलाई मनले सम्झिरहिन् । यही क्रमले व्रत गर्दा चन्द्रावतीको पाप घट्तै गयो । शरीरको कुष्ट रोग पनि निको हुँदै गयो र शरीर दिव्य भएर आयो । महीना दिन पूरा भयो र माघशुक्ल पूर्णिमाको दिन समस्त सामग्री तयार पारी अप्सराहरू स्वस्थानी परमेश्वरीको पूजा गर्न फेरि शालीनदीमा स्नान गर्न आए । चन्द्रावतीले तिनलाई देखिन् र उनको नगीचै गई- 'हे अप्सराहरू हो ! तपाईँहरूको आज्ञाले पौषशुक्ल पूर्णिमादेखि नित्य स्नान गरेर एकभक्त रही नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गर्दछु । अब व्रत पूर्ण गर्न सामग्री केही पनि छैन, कसो गरूँ' भनिन् र अप्सराहरू भन्दछन्- 'हे पापिनी ! केही पनि छैन भने शालीनदीबाट बालुवा ल्याई सामग्री तुल्याई हामीहरूको संसर्गमा पूजा गर् ।' यति सुनी चन्द्रावतीले 'हवस्' भनी शालीनदीको बालुवा ल्याई सामग्री तुल्याइन् । श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले चन्द्रावतीले तुल्याएको अर्थात् मनले चिताएको बालुवाका

सामग्रीहरू सिद्ध भई तयार भए । त्यो देखेर चन्द्रावती मनमा आनन्द मानी धन्य-धन्य, श्रीस्वस्थानी परमेश्वरी ! भन्दै अप्सराहरूलाई बालुवाको सामग्री सिद्ध भएको कुरा सुनाइन् । उनीहरूले पनि बालुवाको सामग्री सिद्ध भएको र तिनको शरीर दिव्य भएको देखेर आश्चर्य मान्दै भने- 'हे सुन्दरी ! हामी आजसम्म तँलाई पापिनी

चन्द्रावतीले अप्सराहरूको उपदेशले व्रत गरेकी र बालुवाको सामग्री सिद्ध भएको

भन्दथ्यौँ, तर आजदेखि तेरो नाम 'पुण्यवती' भयो' भनेर आफ्नू संसर्गमा व्रत गराए । चन्द्रावतीले पूजा गरिसकी अर्घ्य लिई स्तुति गर्न लागिन् - 'हे जगदीश्वरी ! अघि मैले अहंकार गरेर हजुरको निन्दा गरेको अपराध क्षमा गर्नुहवस् । हे ईश्वरी ! सम्पूर्ण प्राणीका हृदयमा बसी पाप-पुण्यकी साक्षी भइरहेकी यस्ती हजुरलाई कोटि-कोटि

नमस्कार ! हे परमेश्वरी ! एक मूर्तिले त्रिमूर्ति ब्रह्मा, विष्णु, महेश्वर भइरहेकी यस्ती हजुरलाई कोटि-कोटि नमस्कार । हे भगवती ! पृथ्वी, जल, तेज, वायु, आकाश यी पाँच पञ्चभूत पनि हजुर, देवताकी देवता पनि हजुर, अति स्थूल र अति सूक्ष्म पनि हजुर, यस्ती त्रैलोक्यकी अधिपति हजुरलाई कोटि-कोटि नमस्कार ! हे ईश्वरी ! हजुरको स्तुति गर्न शेषनाग र शारदाले पनि नसकेको म कसरी सक्दछु ? म पापिनीको पूजाले प्रसन्न भई मलाई यस घोर कष्टबाट पार लगाउनुहवस् ।' यति भनी अर्घ्य दिइन् । तब पूजा समाप्त भयो र अप्सराहरू बिदा भई स्वर्ग गए । अनि चन्द्रावती शालीनदीका किनारामा खरको झुपडी बनाई श्रीस्वस्थानी परमेश्वरीलाई मनले सम्झी रात्रिमा जाग्राम बसिन् । प्रातःकाल भयो र शालीनदीमा स्नान गरी अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ पान, आठ कुड्का सुपारी, सगुनसमेत लिई- 'हे ईश्वरी ! मेरा स्वामी यहाँ छैनन्, कसलाई दिऊँ ? मेरा पति नवराजसित चाँडो भेट हओस्' भनी शालीनदीमा बगाइदिइन् । सय रोटी आफूले फलाहार गरिन् । अनि स्वस्थानी परमेश्वरीको

**व्रतका प्रभावले चन्द्रावतीको पाप, रोग निको भई अघिभन्दा पनि दिव्य देह भयो । त्यो देखेर मनमा आनन्द मान्दै धन्य श्रीस्वस्थानी परमेश्वरी भनी बारम्बार प्रणाम गर्दी भइन् ।**

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां चन्द्रावतीव्रतकृतं नाम षट्विंशोऽध्यायः ।।२६।।*

काशी विश्वनाथ मन्दिर

# अथ सप्तविंशोऽध्यायः

## चन्द्रावती-स्ववृत्तान्त-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! त्यहाँपछि चन्द्रावतीले बगाएका आठ रोटीमा चार रोटी नागिनीले पाएर हातमा लिई यस्तो अपूर्व रोटी कसले बगाएछ, मेरा पति घर छैनन् । बाह्र वर्ष भयो, कहाँ गए, पत्ता छैन । उनलाई नख्वाई एक्लै कसरी खाऊँ । उनको खबर गरूँ अनि दुई-दुई रोटी बाँडेर खाउँला भनी गण्डकी नदी-नाला सबै स्थानमा खबर गर्दै गइन् । तिनै आठ रोटी-मध्ये चार रोटी नागले पाएर कस्तो अपूर्व रोटी पाएँ, यो मेरी स्त्रीलाई नख्वाई एक्लै कसरी खाऊँ ! म परदेश हिंड़ेको पनि बाह्र वर्ष भयो । अब घर गई दुई-दुई रोटी बाँडेर खाऔँला भनी घर जान लाग्दा शालीनदी र त्रिशूली नदीको दोभानमा श्रीस्वस्थानी परमेश्वरीको प्रसाद-स्वरूप त्यो रोटीको प्रतापले नाग र नागिनीको भेट भयो । अनि नागिनीले प्रसन्न भएर भनिन् - 'हे स्वामी ! मलाई एक्ली छाडेर यतिका दिनसम्म कहाँ जानुभएको थियो ? मेरो भाग्यले आज तपाईंको दर्शन पाएँ । कसैले बगाएको यो चार रोटी

भेट्टाएँ । त्यो तपाईंलाई नख्वाई एक्लै कसरी खाऊँ, दुई-दुई बाँडेर खाऔँला भनी गण्डकी, नदी-नाला सबैतिर खोज्दै हिँडेकी हुँ । बल्ल सन्तोष भयो, लौ खानुहोस्' भनी आफूसित भएको

अपूर्व रोटीको प्रभावले नाग-नागिनीको भेट भएको

चार रोटीमा दुई रोटी दिइन् । अनि नाग भन्दछन् - 'हे स्त्री ! त्यस्तै चार रोटी मैले पनि पाएको छु, तिमीलाई नख्वाई एक्लै कसरी खाऊँ ! दुई-दुई रोटी बाँडेर खाऔँला, घर जाऊँ भनेर आएँ । तिम्रो मुख देखेर सन्तोष भयो, लौ खाऊ' भनेर आफूले पाएका चार रोटीमा दुई रोटी दिए । दुवै स्त्री-पुरुषले ती रोटी खाइसकेर नागिनी नागका काखमा बसी आनन्दले रहे । तब नाग भन्दछन् - 'हे स्त्री ! बाह्र वर्षसम्म हामीहरूको भेट नभएको, यसै रोटीको प्रभावले भेट भयो । जसले यी

रोटी बगायो, त्यसको भोलिकै दिनमा इच्छा-सिद्धि हवस्, लक्ष्मी प्राप्त हऊन् र शत्रु नाश हऊन्' भनेर अनेक आशीर्वाद दिए । अनि नागिनी भन्दछिन् - 'हे स्वामी ! म पनि त्यसलाई आशिष दिन्छु-जसले यी रोटीहरू बगायो, त्यसलाई नवग्रहले पीडा नगरून् । राज्यलक्ष्मी त्यसका वशमा रहून् । फेरि हामी जस्तै पति-पत्नी छुट्टिएका भए पनि चाँडै भेट हवस्' भनेर अनेक आशीर्वाद दिइन् । यसरी आशीर्वाद दिएर नाग-नागिनी आफ्ना आश्रममा गए । त्यसपछि लावण्यदेशका मानिसहरू शालीनदीमा स्नान गर्न जाँदा त्यस्ता किसिमले बसेकी चन्द्रावतीलाई देखेर सोधे- 'तिमी देवकन्या, विद्याधर-कन्या अथवा स्वर्गकी अप्सरा रम्भा, तिलोत्तमा को हौ ? यहाँ एक्लै किन बसेकी ?' यति लोकहरूले भनेको सुनी चन्द्रावती भन्दछिन्-'हे लोक हो ! म देवकन्या वा स्वर्गकी अप्सरा होइन । म वरुणपुरका अग्निस्वामीकी छोरी चन्द्रावती हुँ । गोमा ब्राह्मणीका पुत्र नवराजकी पत्नी हुँ । हिजो स्वर्गका अप्सराहरू यहाँ आई श्रीस्वस्थानी परमेश्वरीको व्रत गरेर स्वर्ग गए । मैले पनि उनैका संसर्गमा श्रीस्वस्थानी परमेश्वरीको व्रत गरेर राति जाग्राम गरेँ' भनिन् र लावण्यदेशका

लोकहरूले आश्चर्य मानेर गोमा ब्राह्मणीका पुत्र नवराज त हाम्रो देशका राजा भएका छन् । यो कुरा के कसो हो, राजालाई भन्नुपर्दछ भन्ने सल्लाह गरी नवराज राजाकहाँ गई-'हे महाराज !' भनी चन्द्रावतीले भनेको सारा कुरा सुनाए । ती शाली-नदीको तटमा बसिरहेकै छन्, हुन् कि होइनन् विचार गरिबक्सियोस् ।' यति लोकले भनेको सुनी नवराज राजाले आफ्नी पत्नी चन्द्रावतीलाई सम्झे । अनि'हे लोक हो ! तिमीहरूले उचित कुरा भन्यौ । चन्द्रावती मेरी पत्नी हो । राज्यको कार्यभारले उसलाई बिर्सिरहेको थिएँ । अब तिमीहरू सबै जना गई डाकेर ल्याओ'भनी उत्तम वस्त्र अलंकारहरू पठाइदिए । अनि मन्त्रीलाई डाकेर भने-'हे मन्त्री ! मेरी स्त्री चन्द्रावती शालीनदीका तीरमा आएर बसेकी रहिछ । ऐले, लावण्यदेशका लोकहरू नाना वस्त्र अलंकार पहिरी नाच, गीत, वाद्य गरेर लिन जाऊन्, छिटै पठाऊ । म पनि परसम्म लिन आउँला । हात्ती, घोडा, रथ, पैदल सेना आदि तयार गर' भनी आज्ञा दिए । मन्त्रीले 'हुन्छ' भनेर पूरा शहरमा झ्याली पिटाई सारा प्रजाहरू पछि लगाई आफू पनि गए । सबै चन्द्रावतीकहाँ पुगेर प्रणाम गरी-

'हे महारानी ! नवराज राजाले हजुरलाई लिन पठाएर हामीहरू आयौं । यो पालकी र वस्त्राभूषण ल्याएको छ, पहिरेर छिटै जाऔँ' भने । तब चन्द्रावतीले आफ्ना पति नवराजलाई सम्झेर- 'हे स्वस्थानी परमेश्वरी ! मेरा पति नवराजसित चाँडै भेट हवस् भनेर हिजो व्रत पूर्ण गरें, आजै भेट हुन लाग्यो । हे ईश्वरी ! हजुरलाई कोटि-कोटि नमस्कार छ । म पापिनी नाम भए र दुःखका सिन्धुमा डुबिरहेकीलाई कष्टबाट पार गर्नुभयो । हे लोकेश्वरी ! हजुरलाई कोटि-कोटि नमस्कार छ । हे भगवती ! हजुरका कृपाले ब्रह्माले चौध भुवन सृष्टि गरे । यस्ती हजुरलाई कोटि-कोटि नमस्कार छ । हे जगदीश्वरी ! हजुरको दयाले म पनि लावण्यदेशकी रानी हुन आँटें' भनी बहुतै प्रसन्न भई वस्त्रालंकार पहिरी, पालकीमा बसी, समस्त प्रजाहरू-समेत भई लावण्यदेश गइन् । नगर-बाहिर पुगेपछि लावण्यदेशका स्त्रीहरूले थाहा पाई हतपत गरेर कसैले पाकिसकेको भात छाडेर निस्के, कसैले खाँदा-खाँदै हात पनि नधोई निस्के, कसैले छोरा-छोरी रुवाउँदै निस्के । अगाडि पुग्न भनी पहिले दगुर्दा कसैका हात र कसैका खुट्टा भाँचिए । यसरी

नवराज राजाले चन्द्रावतीलाई अनेक मंगल-यात्रा गर्दै दरबारमा लैजाँदा भए ।

अनि फेरि कुमारजी आज्ञा गर्नुहुन्छ- हे अगस्त्य मुनि ! तिमी ध्यानपूर्वक सुन-त्यसपछि चन्द्रावतीले गोमा राजमाता र आफ्ना पति नवराज राजालाई प्रणाम गरिन् र नवराजले सम्मानसाथ बसालेर चन्द्रावती लाई सोधे- 'हे स्त्री ! मैले तिम्रो मुख नदेखेको आज यतिका वर्ष भइसक्यो । फेरि तिमीलाई ल्याउन भनी डोलेहरू पठाएको थिएँ, ती डोलेहरू पनि आजसम्म फर्केर यहाँ आएनन् । तिमीले पनि आउन धेरै विलम्ब गर्‍यौ ? म राजा भएको तिमीले थाहा पाइनौ कि ? मैले त राज्यको कार्यभारले तिमीलाई बिर्सिराखेको थिएँ । फेरि शालीनदीको तटमा आएर एक्लै किन बसेकी ? मलाई त लावण्यदेशका प्रजागणले भन्नेर पो थाहा पाएँ । फेरि तिमी पनि पहिलेकी जस्ती छैनौ, अत्यन्त तेजवती भइछौ । आफ्नू सबै वृत्तान्त सुनाऊ ।' यति आफ्ना स्वामी नवराज राजाले सोधेपछि प्रसन्न भएकी चन्द्रावती भन्न लागिन् - "हे स्वामी ! म माइतमै बसिरहेकी थिएँ । हजुरले डोलेहरू पठाउनुभएछ । उनै द्वारा हजुर राजा भएको समाचार पाएकी हुँ र माता-पितासित

बिदा माँगी डोलीमा बसेर कहिले हजुरको दर्शन होला भनी हत्पताइरहेकी थिएँ । संयोगले त्यस दिन माघशुक्ल पूर्णिमा रहेछ र यहाँ आउने बाटोमा यौटा ठूलो जंगल रहेछ, त्यहाँ स्वर्गबाट अप्सराहरू आई श्रीस्वस्थानी परमेश्वरीको व्रत गर्न लागेका डोलेहरूले देखेछन् र डोली अड्याई हामीलाई भोक लाग्यो, त्यहाँ पर केही पाए खाएर आउँछौं, तपाईं एकछिन यहीं बस्नुहवस् भनी मलाई वनमा एक्लै छाडी अप्सराहरूले व्रत गरेको स्थानमा गई उनीहरूको संसर्गमा पूजा गरेर प्रसाद लिई म-नेर आई मलाई प्रसाद दिए । त्यस बेला मलाई अहंकारले छोप्यो र डोलीबाट ओर्ली डोलेहरूका हातबाट प्रसाद खोसी थुः थुः गरी थुकेर खुट्टाले कुल्ची दलीमली पारी मिल्काइदिएँ र डोलेहरूलाई बेसरी हप्काई छिटो लैजाओ भन्दै श्रीस्वस्थानी परमेश्वरीको अनेक प्रकारले निन्दा पनि गरें । बिचरा डोलेहरू डरले बोल्न नसकी चुपचाप डोली बोकेर त्यहाँबाट हिंडे । शालीनदीमा आइपुगेपछि साँघुद्वारा पारि तर्न लाग्दा अकस्मात् चँदुवा टाँगेजस्तै मेघ उठेर ठूलो पानीका साथै भयंकर हुरी पनि आयो र पुल भाँचियो, म पनि डोलीबाट लडी शालीनदीमा परें । डोलेहरूको

के गति भयो, केही पनि थाहा पाउन सकिनँ। मेरो शरीर कहिले मूर्च्छा हुने र कहिले चेत आउने भयो। म यस्ती हुँ भन्ने पनि सुद्धि हरायो। नदीकै तटमा पडिरहें। निकै दिनपछि कपिल नामका दुई ब्राह्मण त्यतैबाट आए। मैले कहाँ जान लागेका भनी सोधेँ र तिनले राजाको ब्राह्मण-भोजनमा जान लागेका भनेपछि, मैले त्यसो भए मलाई पनि केही माँगेर ल्याइदेओ भनेँ। तिनीहरू भोजन गरेर घर फर्कन लाग्दा आए र हे पापिनी! तेरो निम्ति हामीले लज्जित हुनुपऱ्यो। तेरो नाम लिनासाथ राजाको भण्डार नै सुकिगयो। राज-मातालाई खान भनेर पकाइराखेको भात रहेछ, त्यही ल्याइदिएका छौं भनी मलाई पातमा भात दिए। भोकले आत्तिइरहेकी हुनाले मुख पनि नधोई खान तयार भएँ। त्यो देखेर ती ब्राह्मणले भने-हे पापिनी! यस्तो अवस्थामा परेर पनि तँलाई धर्मको चेष्टा रहेनछ। तेरो अवस्था देखेर हामीलाई दया लाग्यो। मुख धोएर खा। अनि श्रीस्वस्थानी परमेश्वरीको व्रत गरेस् त तेरो समस्त पाप, रोग नाश हुनेछ भनी ती ब्राह्मण घर गए। अनि म मुख धुन शालीनदीमा जाँदा नदीको जल सुक्तै गयो। त्यो देखेर म माथि आई मुख

नधोएरै खान तयार भएँ त भात खरानी भयो, खरानी पनि खान खोज्दा ठूलो हुरी आएर उडाई लग्यो । अनि म नाना तरहको शोक गरी रोई-कराई भोक-प्यास सहेर ठूलो कष्टले दिन काटिरहें। त्यही क्रमले रहँदा बस्ता पौषशुक्ल पूर्णिमा आयो र स्वर्गबाट स्वस्थानी परमेश्वरीको व्रत आरम्भ गर्न अप्सराहरू शालीनदीमा आए र मैले उनलाई देखें। अनि चार हात-पाउ टेकेर गई तिमीहरू को हौ ? केही खानेकुरा भए मलाई देओ, पुण्य होला । म के पापले यस्ती भएँ ? भन्दा उनीहरूले भने-हामी इन्द्रका अप्सरा हौं, श्रीस्वस्थानी परमेश्वरीको व्रत आरम्भ गर्न यहाँ शालीनदीमा स्नान गर्न आएका हौं । हे पापिनी ! तेरो अवस्था देख्दा हामीलाई दया लाग्यो । अब तँ श्रीस्वस्थानी परमेश्वरीको व्रत गर् । त्यसैको प्रभावले तेरो सारा पाप नाश होला र यो दुःखको सिन्धुबाट पार होलिस् । अनि मैले भनें-म यस्तो स्थितिमा परेकी पापिनीले त्यो व्रत कसरी गर्नेछु ? सामग्री को देला ? के-के चाहिन्छ ? मेरो कुरा सुनी तिनीहरूले व्रतविधि बताई स्वर्ग गए । मैले पनि उनीहरूको उपदेश-अनुसार पौषशुक्ल पूर्णिमाको दिनदेखि नित्य स्नान गरी, एकभक्त रही, एकचित्त

गरी महीना दिनसम्म नित्य मध्याह्न कालमा श्रीमहादेवको पूजा गरी रहें । महीना दिन भयो र माघशुक्ल पूर्णिमाको दिन आयो र श्रीस्वस्थानी परमेश्वरीको व्रतोद्यापन पूर्ण गर्न अप्सराहरू फेरि त्यहीँ आए । हे स्वामी ! महीना दिनमै श्रीस्वस्थानी परमेश्वरीको व्रतको प्रभावले मेरो कुष्ट रोग पनि निको भयो, हात-खुट्टा पनि पहिलेका जस्तै भए

नवराज राजा, लावण्यवती रानी, गोमा ब्राह्मणी र चन्द्रावतीले आफाफ्नु कथा सुनाएका

र अप्सराहरूसित भनें-हे अप्सरा हो ! तपाईं-हरूको उपदेशले पौषशुक्ल पूर्णिमादेखि व्रत प्रारम्भ गरेकी छु,. महीना दिन भयो । अब श्रीस्वस्थानी परमेश्वरीको पूजा गर्न मसँग केही सामग्री छैन, कसरी गर्नें ? भन्दा अप्सराहरूले भने-सामग्री नभए शालीनदीबाट बालुवा ल्याई सामग्री तुल्या । अनि मैले शालीनदीबाट बालुवा ल्याई

सामग्रीको कल्पना गरेँ र त्यो सामग्री सिद्ध भयो अर्थात् मैले जे-जे कल्पना गरेकी थिएँ, त्यो-त्यो सबै सिद्ध भएको देखेर अप्सराहरू प्रसन्न भई- 'हे सुन्दरी ! आजसम्म तँलाई हामी पापिनी भन्थ्यौँ, तर आजदेखि तेरो नाम 'पुण्यवती' भयो' भने र सोही सामग्रीले मैले तिनै अप्सराहरूको संसर्गमा व्रतको उद्यापन पूजा गरेँ। सम्पूर्ण व्रत पूरा गरेर उनीहरू स्वर्ग गए । अनि श्रीस्वस्थानी परमेश्वरीको प्रसाद अष्टोत्तर सयमा आठ रोटी, आठ अक्षता, आठ पुष्प, आठ पान, आठ कुड्का सुपारी, आठ यज्ञसूत्र र सगुन-समेत दिन हजुर सामुन्ने नहुनाले मैले गंगाजीमा, ''मेरा स्वामीसित छिटै भेट होस्'' भनी बगाइदिएँ । प्रातः काल भयो र शालीनदीमा स्नान गरी अब माइत जान्छु भनी तयार भइसकेकी थिएँ, त त्यत्तिकैमा लोकहरू लिन आए । हे स्वामी ! मैले श्रीस्वस्थानी परमेश्वरीको अपमान र निन्दा गरेको पापले त्यस्ती भएर पनि फेरि उनैको कृपाले र कपिल ब्राह्मण एवं अप्सराहरूको उपदेशले म यस्ती भएर आज हजुरको दर्शन गर्न पाएँ । श्रीस्वस्थानी परमेश्वरीभन्दा ठूलो अर्को कुनै पनि देवता त्रिलोकमा छैनन् भन्ने मेरो मनमा निश्चय भयो ।"समस्त

व्रतहरूको पनि व्रत, सम्पूर्ण तीर्थको पनि तीर्थ, धर्मको पनि धर्म, कालको पनि काल र देवताको पनि देवता यस्ती जगदीश्वरीलाई मेरो कोटि-कोटि नमस्कार छ'' भनी चन्द्रावतीले श्रीस्वस्थानी देवीलाई बारम्बार दण्डवत् प्रणाम गर्दी भइन् ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां चन्द्रावतीस्ववृत्तान्तकथनं नाम सप्तविंशोऽध्यायः ।।२७।।*

काशीको मानस मन्दिर

उज्जैनको ... मन्दिर

# अथ अष्टाविंशोऽध्यायः

## गोमा पूर्ववृत्तान्त-उपाख्यान

कुमारजी आज्ञा गर्नुहुन्छ-हे अगस्त्य मुनि ! ध्यानपूर्वक सुन—चन्द्रावती पुत्र-वधूले आफ्नू कष्ट र त्यसबाट उद्धार भएको सारा वृत्तान्त वर्णन गरेको सुनी मनमनै अत्यन्त प्रसन्न भएकी गोमा ब्राह्मणीले- हे श्रीस्वस्थानी जगदीश्वरी ! भनी हृदयले सम्झँदै अञ्जलि जोरी भन्न लागिन् — हे चन्द्रावती बुहारी ! तिमी धन्य रहिछौ ! त्यस्तो दुर्दशामा परेर पनि जगदीश्वरी श्रीस्वस्थानीको भक्ति गर्न सक्के तिमी धन्य हौ । अब म पनि आफूले दुःख पाएको र उनै ईश्वरीको करुणाले यस अवस्थामा आइपुगेको यथार्थ वर्णन गदर्छु, सुन-तिम्रो पति नवराज आफ्ना पिताको खोजी गर्न हिंडेपछि तिमी पनि माइत गयौ । घरमा म एक्ली हुनाले अर्काको ढिकी-जाँतो गरी धागो काती अनेक दुःख सहेर दिन बिताइरहेकी थिएँ । संयोगले एकदिन सप्तऋषिहरू आए र मैले दुःख पाएको जानी ठूलो करुणाा गरी- 'हे गोमा ब्राह्मणी ! श्रीस्वस्थानी परमेश्वरीको व्रत गर, तिम्रो सबै कष्ट नाश होला' भनेर व्रतको विधान-समेत बताई गए । ती

ऋषिहरूको आतिथ्य गर्न घरमा केही पनि थिएन र चर्खामा रहेको धागोको पान लिन गएँ । म पान लिएर आउँदा ऋषिहरू गइसकेछन् । उनीहरू बसेको पिरुका-मनि सातओटा सुनका कौडी छाडेर गएका रहेछन् र मैले पाई त्यही द्रव्यले सबै सामग्री तयार पारेर पौषशुक्ल पूर्णिमाको दिनदेखि श्रीस्वस्थानी परमेश्वरीको व्रत प्रारम्भ गरेँ । अनि महीना दिन अर्थात् माघशुक्ल पूर्णिमाको दिन व्रत पूर्ण गरी प्रसाद झिकेर श्रीस्वस्थानी परमेश्वरीलाई मनले बराबर सम्झिरहेँ र राति जाग्राम बसेँ । ईश्वरीको कृपाले त्यही राति तिम्रो स्वामी नवराज आइपुग्यो र उसले मलाई बाहिरबाट डाकेको सुनेँ र तत्काल बाहिर आई डाकेर भित्र लगेँ । अनि खान-पिन दिई 'हे नवराज ! तेरा पिताको के समाचार छ ?' भनी सोधेँ र तेरो स्वामी नवराजले मलाई भन्यो- 'हे माता ! मेरा पिता भिक्षा माँग्न गएका त गण्डकी गंगातटमा पुगेर नित्य-पूजा गर्न फल-फूल माँगेछन् । अनि फल-फूल टिप्न वृक्षमा चढेका त संयोगले त्यो वृक्षको हाँगो भाँचिई लडेर मरेछन् ।' यति नवराजले भनेको सुनी म शोक गर्न लागेँ । अनि नवराजले मलाई शोक चिन्ता नगर्नुहवस् भनी बुझायो र-हे माता ! आज यति रातसम्म नसुतेर किन जाग्राम गरेर

बसिरहनुभएको ? भनी सोध्यो र मैले भनें-हे पुत्र ! हे नवराज ! श्रीस्वस्थानी परमेश्वरीको व्रत गरें र उनै जगदीश्वरीलाई सम्झेर जाग्राम रहेकी हुँ भनी बुझाएँ । अनि प्रातःकाल भयो र नवराज गण्डकी गंगा-स्नान गर्न गयो । गण्डकी गंगाबाट हरि-हर प्रकट भई- 'हे नवराज ! तेरी माताले श्रीस्वस्थानी परमेश्वरीको व्रत गरेकोले हामी प्रसन्न भयौँ । लावण्यदेशमा राजा छैनन् । हात्तीलाई राजा रोज्न लगाएको छ । त्यहाँ आउनू, तँलाई हामी अभिषेक दिलाउनेछौँ, राजा हुनेछस्' भनी वरदान दिई अन्तर्धान भएछन् र नवराजले घर आई मलाई सारा वृत्तान्त सुनायो । अनि मैले श्रीस्वस्थानी परमेश्वरीको प्रसाद दिई-हे पुत्र नवराज ! हरि-हरको वरदानले लावण्य देशको राजा बनेस् भनी आशीर्वाद दिएर यहाँ पठाएँ र उनै ईश्वरीको कृपाले यो ऐश्वर्य पाई सुखी भयौँ । अब पनि बाचुञ्जेलसम्म सधैँ श्रीस्वस्थानी परमेश्वरीको कृपाले यस लोकमा सुख-सन्तोष र सम्पत्तिको भोग गरी परलोकमा परमगति कैलासवास होला । यति उपदेश दिई आफ्नू बितेको यथार्थ वर्णन गरिसकी फेरि अरू पनि अर्ति दिन लागिन् - तिमी चन्द्रावती र लावण्यवती दुवै बुहारी सुन-जस्तै सूर्यनारायण नभएको दिन

र चन्द्रमा नभएको रात उज्यालो वा शोभित हुँदैन, त्यस्तै प्रत्येक मनुष्यको पनि घरमा असल स्वभाव भएकी पत्नी छैन भने त्यसको घर सम्पन्न। अब मेरो वृद्धावस्था भयो। तिमी दुवै दिदी-

गोमा ब्राह्मणीले चन्द्रावतीलाई ढुकुटीको साँचो सुम्पिदिएकी

बहिनी आपसमा मिलेर यो राज्य-लक्ष्मी थामी मेरो पुत्र नवराज राजाको सेवा चाकरी गरेर बस। यति चन्द्रावती रानीलाई शिक्षा दिई ढुकुटीको साँचो सुम्पिदिइन्। अनि चन्द्रावती रानी र लावण्यवती रानीले पनि-''हे माता! हजुरको तपस्याले हाम्रा स्वामी राजा हुनुभयो। हामी दुवै रानी हुन पायौँ। हजुर धन्य हुनहुन्छ'' भनी आफ्नी सासू गोमा राजमाताका चरणमा दण्डवत् प्रणाम गरेर सदैव श्रीस्वस्थानी परमेश्वरीको भक्तिमा चित्त लगाई आपसमा मिलेर नवराज राजाको सेवा गरी राज्यको सुखभोग गर्दै आनन्दपूर्वक

रहँदा भए ।

फेरि कुमारजी भन्नुहुन्छ- हे अगस्त्य मुनि ! जो मनुष्य श्रद्धा र भक्तिसाथ माघमासको माहात्म्य सुन्ला, माघभरिभरि माघस्नान गर्ला, माघस्नानका साथै माघभरि विविध वस्तु दान गर्ला, कङ्गाल-हरूलाई खिचड़ी ख्वाउला र साथसाथै श्रीस्वस्थानी परमेश्वरीको व्रत, पूजा र आराधना गर्ला अथवा सम्पूर्ण माघमाहात्म्य-सहितको श्रीस्वस्थानीको कथा सुन्ला, सुनाउला वा उनको महिमा लेखिएको वा छापिएको पुस्तक घरमा राख्ला, त्यसका घरमा दुःख दरिद्रताको वास कहिल्यै पनि हुनेछैन । आदित्यादि नवग्रह सदैव प्रसन्न रहनेछन् । अकालमृत्यु कहिल्यै पनि हुनेछैन । भूत-प्रेत-पिशाच, डाकिनी, शाकिनी, बेताल, त्रिदोष आदि रोगको भय हुनेछैन । चोर, डाका, शत्रु, अग्नि, वनका हिंसक जन्तुको भय हुनेछैन र त्यस व्यक्तिका ब्रह्महत्यादि अनेक घोर पाप नष्ट भई यस लोकमा सुख, शान्ति र सम्पत्तिको भोग गरी परलोकमा शिवका पार्षद भई कैलास पर्वतमा बस्न पाउनेछन् ।

यति कथा स्कन्दकुमारले अगस्त्य मुनिलाई सुनाएका थिए र सोही कथा यहाँ मैले पनि यथामति विस्तारपूर्वक सुनाइयो ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमारअगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां गोमापूर्ववृत्तान्तवर्णनं नाम अष्टाविंशोऽध्यायः।।२८।।*

# अथ ऊनत्रिंशोऽध्यायः

## सुलोचना-उपाख्यान

तब अगस्त्य मुनिले विनयपूर्वक फेरि स्कन्द-कुमारलाई सोध्नुभो- हे स्कन्दकुमार ! तपाईँका मुखारविन्दबाट सृष्टिको सारा क्रम र विष्णुका छलले महादेवजीसित विवाह भएकी दक्षप्रजापतिकी छोरी उमाको पवित्र चरित्र तथा दक्षप्रजापतिकै यज्ञकुण्डमा हामफाली प्राण त्यागेर पछि हिमालय-की पुत्री भै जन्म लिएकी पार्वतीले स्वर्गमा श्रीस्वस्थानी भगवतीको व्रत-पूजा गरेर फेरि शिवजीलाई नै पति पाएकी, अनि पार्वतीकै आज्ञाले पाताल पुगेर अश्वत्थामा ऋषिले प्रचार गरेको श्रीस्वस्थानी देवीको व्रत-पूजाका प्रभावले ती दुःखिनी नागिनीहरू आआफ्नू मनोरथ पूरा भई असंख्य सम्पत्ति पाई रमाएको तथा पार्वतीकै आज्ञाले मर्त्यमण्डलमा आई सप्तर्षिहरूले ती अत्यन्त दुःखिनी गोमा नामकी ब्राह्मणीलाई श्रीस्वस्थानी देवीको व्रत-पूजा गराई लावण्यदेश अर्थात् लुम्बिनी राज्यकी राजमाता बनाएको एवं श्रीस्वस्थानीको निन्दा गर्दा चन्द्रावतीले पाउनासम्म दुःख पाएको र अप्सराहरूको आज्ञाले यथाशक्ति श्रद्धाभक्तिका

साथ स्वस्थानीको व्रत पूजा गरेरै त्यस पूजाका प्रभावले उनलाई आफ्ना पतिका साथ मिलाएको कथा श्रद्धासहित सावधान भएर मैले सुनिसकें। अब गोमा ब्राह्मणीका बाद मर्त्यमण्डलमा अरू कक-सले श्रीस्वस्थानी देवीको व्रत-पूजा गरे र के के, कस्तो-कस्तो फल पाए ? यस बारेमा पनि दुई-तीनोटा कथा अरू सुन्न चाहन्छु, त्यस्ता जन पनि कोही छन् भने कृपा गरेर तिनको बारेमा बताइ-बक्सियोस् भन्दा स्कन्दकुमार आज्ञा गर्नुहुन्छ-

हे अगस्त्य मुनि ! गोमाका बाद चित्रवन नामको विचित्रको नगरमा बस्ने धर्मपरायणा बालविधवा सुलोचना नामकी नारीले ब्रह्माको गण्डस्थलबाट अर्थात् हिमालयबाट निस्की पहाडका गिरि-गह्वरा--कन्दराहरू हुँदै गङ्गासित मिल्न दक्षिणतिर हानिदै बगेकी गण्डकी यानि शालीनदी तथा महिषासुरलाई उसको गर्धनमा समातेर लातका लात गोद्दा पृथ्वीमा भ्वाङ परेर निस्केकी देवकी अर्थात् द्यौकी नदी अनि यज्ञकुण्डमा फालहाली उमाले प्राण त्यागेको सुन्दा दक्षप्रजापतिका उपर एकाएक उठेको महाक्रोधको झोकमा महादेवले आफ्नू त्रिशूल पृथ्वीमा ग्वाम्म गोप्ता प्वाल परी पृथ्वीभित्रबाट निस्केकी त्रिशूली नदी सबै आफाफ्नू बाटो हुँदै

बग्दै-बग्दै आएर एकै ठाउँ मिलेको त्रिवेणी अर्थात् तीनआँठे चुल्ठो जस्तो बनेको र पवित्रै-पवित्र पानी मिलेर अति पवित्र भएको त्यो तीन नदीको दोभान त नारायणको असाध्यै प्रियस्थल बनेकोले नारायण भगवान्ले नै सबभन्दा पहिले आफैले त्यस सङ्गममा न्वाही, त्यहाँ माघभरि-भरि मकर-स्नान गर्नेलाई मरेपछि सरासर वैकुण्ठ पुऱ्याउने आफ्नू नारायणी शक्ति उहीँ घुसाएकोले त्यहीँ-देखि संयुक्तरूपमा नारायणी नदी नाम पाएको ठाउँ देउघाट यानि देवघट्ट अर्थात् सामान्य मनुष्यले मकरराशिभरि सूर्य रहेको दिनमा प्रयागको त्रिवेणीमा त्रिकाल स्नान गरेर स्वर्गको वास पाए-झैँ देउताहरूले वैकुण्ठको वास प्राप्तिका लागि मकरभरि नित्यै न्वाहुने गरेको अनि अप्सराहरूले पनि पौषशुक्ल पूर्णिमादेखि माघशुक्ल पूर्णिमासम्म नित्य आई न्वाहुने गरेको त्यस्तो देउघाटको छेउ-छाउमै कुटी बनाई, धुनि जगाई, योगिनीको रूपमा बसी, पद्मासन कसी, अघि ध्रुवले झैँ "ॐ नमो भगवते वासुदेवाय" यो मन्त्र निरन्तर जप गर्दै सूर्यको तेजमा मात्रै मन टक्क अड्याई; दुस्तर्क, दुश्चिन्ता, दुस्तृष्णा, दुर्व्यवहार, बेफ्वाँकका गफडा सारा त्यागी, बाह्रै महीना त्यस त्रिवेणीमा त्रिकालै

न्वाही, प्रत्येक वर्षको पौषशुक्ल पूर्णिमादेखि विधिपूर्वक माघशुक्ल पूर्णिमासम्म उहिले गोमाले जस्तै गरी नियमपूर्वक व्रतमा रही माघशुक्ल पूर्णिमाका दिन स्वस्थानीको विधिपूर्वक पूजा गरी साठी वर्षमा साठी ओटा स्वस्थानीको व्रत-पूजा र त्यसै त्रिवेणीमा साठी ओटा नै माघस्नान गरेकी पुण्यका प्रभावले ती योगिनी परलोक गएपछि जस्ती भइन्, त्यो रोचक कथा कल्प र चौघडीको बयान-सहित अब म तिमीलाई सुनाउँछु, तिमी ध्यानपूर्वक चित्त लाएर कत्ति पनि अन्यमनस्क नभई लौ सुन-

हे अगस्त्य मुनि ! पुनर्जन्म हुन्छ भन्ने कुरामा पूर्ण विश्वास नभईकन धर्म-कर्म गर्नमा सही श्रद्धा रहदैन। तसर्थ, तिमी पहिले पुनर्जन्म हुने कारणहरू सुन । सत्त्वगुण-रजोगुण-तमोगुण मिलेका सूर्यका किरण रहने आकाशमा सत्त्वगुण प्रधान रहेको समयलाई 'सत्ययुग', अनि रजोगुण प्रधान रहेको समयलाई 'त्रेतायुग' तथा रज र तम मिलेर प्रधान रहेको समयलाई 'द्वापरयुग' र तमोगुण मात्र प्रधान रहेको समयलाई 'कलियुग' भनिन्छ । सत्त्व भनेको असल हो । रज भनेको उद्दण्ड हो र कलि भनेको महालण्ठ हो । उक्त चारै युगको समूहलाई

'चौघड़ी' भन्दछन् । यस्ता बहत्तर चौघड़ीको आधा कल्प या ब्रह्माको एक दिन हुन्छ । अनि त्यति नै समय ब्रह्माको रात पनि हुन्छ । यी दुवैलाई मिलाउँदा एक कल्प हुन्छ । त्यो आधाकल्पमा एक अंकका सामु उन्डाईसओटा शून्य क्रमैले तेर्सोतिर लेख्दा त्यो एकको स्थानीयमान जति हुन्छ, त्यति वर्ष-को हुन्छ ।

यी बहत्तरैओटा कलियुगमा तत्तत्कालीन ब्राह्मण-हरूले आफ्ना पुर्खा आर्यावर्तका ब्राह्मणवर्गले आफ्नै सन्तानहरूले मात्र सिद्ध गर्न सक्ने गरी थाती छोडेर गएको, ब्रह्माण्डविजयी योगशक्तिको साधना गर्न विलासिएर च्यात्तै छोडिदिन्छन् र तिनीहरूको जे चितायो त्यै गर्न सक्ने शक्ति बिलाएपछि पहिलेका तीनै युगसम्म योगबलले चुमुक्र्याइएका दानवहरूले; सूर्य अस्ताएपछि राक्षसी शक्ति बढ्ने अन्धकार रातको पालो आएझैँ; मौका पाएर आफ्नू दानवी भौतिक शक्तिको विकासको लागि भूमिभित्रबाट निकालिएका गोरूपधारी पृथिवी माताका हाडरूपी फलाम-कोइलाहरू अनि कलेजा-फोक्सारूपी अरू खनिज पदार्थहरू तथा बोसोरूप खनिज तेलहरू एवं सासरूपी भापहरू निकालिएर खोक्रिई मरणासन्न भएर 'नारायण, नारायण' भन्दै आर्त-

स्वरले पुकार्न थालेकी पृथिवीलाई देखी नारायण भगवान्ले त्यति नै समयका लागि पृथ्वीलाई आफ्नू प्रलय यानि डुबाउने शक्तिको प्रयोग गरी समुद्रले ढाकिदिनुहुन्छ। त्यस प्रलयकालमा पनि तातो-न-तातो सूर्य र, चिसो-न-चिसो समुद्र यी दुवै नै निराधार आकाशमा आफाफ्ना ठाउँमा झुन्डिएका झुन्डिएकै रहन्छन् । तिनै दुई सूर्य-समुद्र नै पुरुष अर्थात् भाले र प्रकृति यानि पोथी हुनाले यिनको सृष्टि कहिले भयो, कसरी भयो र यिनको विनाश कहिले हुन्छ, कसरी हुन्छ भन्ने निधो अझसम्म कसैले पनि निक्योंल गर्न सकेका छैनन् । त्यसै ढाकिएको प्रलयकालको मौकामा नै प्राणीका काटिएका ठाउँमा घाउ पलाए झैँ पृथ्वी-माताका सबै अङ्ग-प्रत्यङ्गहरू पलाएर तयार भइसक्छन् । अनि विष्णुकै शक्ति वराह प्रभुले आफ्नू 'वाराह' शक्ति अर्थात् वार् भनेको पानीलाई, आ माने आसमन्तात् चारैतिर, ह भनको ह्टाउने शक्ति प्रयोग गरी; प्रत्येक वर्ष माघे संक्रान्तिको सात दिन पहिलेदेखि सातै दिन पछिसम्म गङ्गासागरमा रहेको कपिलमुनिको आश्रममाथिको त्यो डुबाएर रहेको समुद्रको पानीलाई चारैतिर हटाएर त्यस आश्रमलाई उदाङ्ग्याए-झैँ नै पूरा समुद्रको चार भागको एक

भाग जतिमा रहेको सातै द्वीप-माथिको पानी हटाइदिनुहुन्छ । त्यसै नडुबेको र डुबेर नउदाङ्गिएए-सम्मको समयलाई 'एक कल्प' भनिन्छ ।

हे अगस्त्यमुनि ! यस्ता कल्प कति बिते कति, गनेर साध्य छैन । प्रलय हुनुभन्दा पहिलेका चौघड़ीहरूमा पनि, वर्तमान चौघडीमा पनि कतिपय राक्षस वा दानवहरूले अथवा राक्षसी बुद्धि हुनेहरूले शिवको या ब्रह्माको आराधना तपस्या गरेर उनलाई प्रसन्न पारी पाएका वरप्रसादले उम्तिएर पाप फैलाई, गठ बाँधी, सज्जन धर्मात्माहरूलाई पिर्नासम्म पिरे भने बीच-बीचमा पनि विष्णुले आफ्नू शक्तिद्वारा इच्छानुसारको अवतार लिएर ती सारा दुष्टहरूलाई मारी सज्जन धर्मात्माहरूको र धर्मको रक्षा पनि गर्नुहुन्छ।

त्यसरी प्रलयकाल हुँदा पृथ्वी डुबेको अवस्थामा पृथ्वीका चर-अचर स्थलचर र नभचर प्राणीहरू स्वात्तै डुबेर मर्छन् र तिनका प्रेतात्माहरू वा प्रेतरूपहरू आफाफ्नू गुण-रूप-आकार-प्रकार, धर्म-कर्म, पाप-पुण्य बोकेर; दूरदर्शनका पात्रहरू वायुमा स्थित बिजुलीमा विचरण गरे-झैं, आफाफ्नू वंशका साथ मिलेर सूर्यलोकमा अर्थात् सूर्यका असंख्य किरणहरूमा नै, फलभित्र उसको स्वाद

गुण पौष्टिक तत्त्व नदेखिने गरी रहे-झैं रहेका हुन्छन् । ती पार्थिव वस्तुको पानीबाट बनेको देखिने हिस्सा काठ-पात, शरीर-जीउ चाहिँ पानीमै सड्छन्, नदेखिने तत्त्वहरू जति आकाशमा उड्छन् र सूर्यका बिजुलीमा; फ्लापीमा अक्षरहरू झैं; थन्कन्छन् । पछि फेरि कालान्तरमा डुबेको स्थल देखिएपछि पुरुष सूर्य र प्रकृति यानि पानीबाटै बनेको पृथ्वीको मेलमिलापको तारतम्मेबाट उनै पहिलेकै सृष्टि दोहोरिन्छन् र दोहोरिइरहन्छन् । आमाको शरीरका सामानहरूले बनेको देहका वस्तुहरू देखिन्छन् र त्यसै देहलाई आधार मानेर रहेका बाबुका गुणहरू देखिदैनन्, अर्थात् शरीरमा नदेखिने जति बुद्धि आदि गुणहरू बाबु सूर्यका हुन् । एकै आमा-बाबुका सन्तान र एकैचोटि एकै ठाउँमा जन्मेका दुई बालक पनि भिन्न-भिन्न स्वभावका, भिन्न-भिन्न आकारका, कोही सपूत त कोही कपूत, कुनै पापी त कुनै धर्मात्मा भएका चाहिँ पूर्व-जन्ममा जस्तो कर्म गरेर आफ्नू कर्मका साथै सूर्यलोकमा यानि सूर्यका असंख्य किरणरूपी लोकमा किरणकै स्वरूपमा मिलेर रहेको थियो, त्यही किरणले नै बाबु बन्नेको शरीरमा वायु चढे-झैं चढी उसको शरीरको तातोमा

मिली उसलाई असीन-पसीन पारी तताई आमाको रगतलाई आमा-बाबुकै आकारमा जमाउने जोरनका साथै भ्रूणको विकास गरी सञ्चालन गर्नका लागि स्वाँ-स्वाँ गर्दै पलस्त परेकी आमाको गर्भमा आत्मा नामको बिजुलीको रूपमा आफूमा सञ्चित रहेका उसका पूर्वजन्मका संस्कार र सौर बिजुलीमै रहेका काम-क्रोधादि अदृश्य गुणहरू साथै प्रवेश गर्छन् । अनि त्यसमा रहेको स्वसिद्ध शक्तिले आमाको गर्भको विकृत रगतलाई आमा-बाबुकै आकारमा जमाउने, सञ्चालन गर्ने, बढाउने, हुर्काउने, बुढ्याउने, मराउने र जहाँबाट आएको हो उहीँ पुऱ्याउने काम गर्छ । याद राखे कि बाबुमा चढेको त्यो किरणवासी धर्मात्मा भए; पर सरेको सात रातसम्मको रगतमा अडिदैन । आठवाँ रातदेखिको रगतमा पापीहरू अडिदैनन् । चौधवाँ रातमा केवल महापुरुष मात्र अडिन्छन् । पन्ध्रवाँ सोह्रवाँ रातमा चाहिं पुण्यात्माहरू मात्र अडिन्छन् । सत्रवाँदेखि कोही पनि अडिन्नन् । पहिलो-दोस्रो-तेस्रो रातमा कोढीहरू मात्र अडिन्छन् । चारौँदेखि सोह्रौँ रातसम्ममा पनि बिजोरमा छोरी र जोरमा छोरा मात्र अडिन्छन् । दिनमा पनि ग्रहणादिमा-श्राद्धको दिनमा-एकहाकीको दिनमा-मूल नक्षत्रमा-मघान्तमा-रेवतीमा-

अष्टमीमा-चतुर्दशीमा-जन्मदिनमा-औंसी-पुर्णेमा रहेको गर्भमा अलच्छिनाहा अडिन्छन् । सात रात-सम्म पापी मात्र अडिने पापी रगत शरीरमा रहने हुनाले त्यति खेर ती पितृकार्यका लागि चोखिदैनन् । प्रायः नब्बे प्रतिशत गर्भ यसै सात रातभित्रै रहेका हुन्छन् ।[१]

तसर्थ, जहाँबाट आएको हो, त्यहाँ फर्कनलाई यहाँ कस्तो-कस्तो कर्म गर्नुपर्छ, पहिलेको सञ्चित अभ्यासले त्यस्तै त्यस्तै कर्म गर्छ र त्यस्तै कर्म गर्न उ रमाउँछ र गर्छ पनि । यसैको नाउँ स्वभाव हो । त्यसैले भिन्न-भिन्न किरण-लोकबाट आएका उही जातका पनि भिन्न-भिन्न प्राणी वा मनुष्यको भिन्न-भिन्न स्वभाव यस प्राणिजगत्मा भएको हो । तसर्थ, त्यो प्राणी जबसम्म विष्णुको कृपापात्र हुँदैन तबसम्म त्यसै भुँवरीमा चक्कर लाइरहन्छ । यसैलाई शिशुमार चक्र अर्थात् जन्मनु र मर्नुको फेरो भनिन्छ । पुराणमा जति देवता र जति लोक छन्, ती सबै त्यो-त्यो शक्ति हुने सूर्यका विभिन्न किरणकै नाम हुन् भनी वेदमा बताइएको छ अर्थात् वेदका तिनै कुरालाई पुराणमा प्रष्ट्याइएको हो । हामी प्राणीहरू केवल सूर्यको प्रकाशलाई मात्र देख्तछौँ र तीद्वारा प्रकाशित वस्तुलाई जान्दछौँ मात्र ।

१. सातरातेमैं सर्दो समयाऽनुसार क्रमशः कोढी, हत्यारा, डाका, लुटाहा, घुस्याहा, फटाहा, छुल्याहा, ⇨

प्रकाश नपरेको वस्तुलाई देख्तैनौं । प्रकाशलाई अन्धकारले छेक्तैन । निष्पट्ट अन्धकारमा आफ्ना सामुको आफ्नो हातलाई पनि हामी देख्तैनौं, तर धेरै टाढा बालिएको आगोलाई देख्छौं । त्यसकारण, सूर्यका किरणहरूमा भएका शक्तिहरूलाई जान्नु नै ज्ञान हो । यस्तो यो ज्ञान प्राप्त गर्नका लागि जसरी युवतिको युवकमा र युवकको युवतिमा उनको भित्री अन्तस्करणमा निरन्तर तन्मनस्कता रहन्छ, त्यस्तै तन्मनस्कता आकाशभरि ढाकिइरहेको सूर्यको तेजमा बाह्र वर्ष रहिरह्यो भने त्यो तेज हृदय-भित्रै झल्कन्छ र सकल ज्ञान प्राप्त हुन्छ । यस्तो जनलाई ज्ञानी भन्दछन् । ज्ञानीलाई पापले छुँदैन, शिशुमार चक्रको फेरो रहँदैन, यसैलाई विष्णुको कृपा पनि भनिन्छ ।

हे अगस्त्य मुनि ! उता पृथ्वी डुबेको बेलामा जलचर चाहिं असंख्य बढेर समुद्रमा अटाइ-नअटाइ हुन्छन् । अघि-अघि पृथ्वीले खोक्रिएको अवस्थामा विष्णुलाई आर्तपुकार गरे-झैं अब समुद्रले जल-चरको भार थाम्न सकिनँ प्रभु ! भन्दै आर्तपुकार गर्न थाल्छन् । अनि विष्णुले आफ्नू वाराह शक्ति प्रयोग गरी पृथ्वीमाथिको पानी हटाइदिएपछि त्यहाँ थुप्रिएका जलचरहरू त्यहीँ मरी सडी कुहेर त्यसमा

बड़े-बड़े कीरा पर्छन् । त्यही सडानलाई नै क्षीरसमुद्रशायी विष्णुको अर्थात् समुद्रको जलमा रहने शक्तिको कानेगुजी भनिन्छ र त्यही देब्रे कानको यानि उत्तरी गोलार्धको कानेगुजीबाट उब्जेको बडेमाको कीरालाई 'मधु' दानवर, अनि दाहिने कानको अर्थात् दक्षिणी गोलार्धको कानेगुजी-बाट उब्जेको यामानको कीरालाई 'कैटभ' दानव भन्दछन् ।

विष्णुकै नाभिकमल यानि सृष्टिको केन्द्रस्थल नाइटोबाट उब्रेको अर्थात् समुद्रैको लेदो छिपछिपे पानीबाट उब्जेको पृथ्वी-जल-तेज-वायु-आकाश-रूप नालको माथि खिलेको कमलपुष्प अर्थात् ती पञ्चमहाभूतको सामूहिक शक्ति मिली आकाशमै प्रकट भएको 'ब्रह्म' नामको ब्रह्मा कहिने चैतन्य शक्ति-लाई र, त्यसको उद्भवस्थानलाई भताभुङ्ग पारी पृथ्वी-लाई दबदबे पानीमै डुबाइराखी त्यहाँ दानव देश बनाउलान् जस्ता ती प्रबल दानव कीरालाई हटाउन ब्रह्माका स्तुतिले प्रसन्न भएकी योगमायाले ध्यान गरी जगाइएका अर्थात् शरीर धारण गराइएका स्वयं विष्णुशक्तिलाई नै पाँच हजार वर्ष लाग्यो र पनि नसकिएर विष्णु हैरान भै बसेको बेलामा ती कीराहरू चम्किदै सोहोरिएर आफ्नू नगीच-

नगीच आई उफ्रदै उधुम मच्चाउँदै- 'ए पाजी ! के नाप्न सक्छस् नाप्' भन्दा विष्णुले वाचा बधाई 'तिमीहरूलाई मारेर पृथ्वीलाई सफा पार्न सकूँ' भन्दा ती कीराहरूले जलमा ता हामीलाई मार्न तँ सक्तैनस्, थलमा हाम्रो शक्ति कमजोर हुने हुनाले पहिले पृथ्वीको पानी सुका, अनि मात्र मार्न सक्लास् भन्दा इन्द्रलाई बाह्र वर्ष पानी नपार्ने आज्ञा दिई त्यहाँको पानी सुकाई अनिमात्र आफ्ना दुवै काखमा अर्थात् उत्तरी गोलार्धकालाई र दक्षिणी गोलार्ध-कालाई बायाँ र दायाँपटि नगीचै-नगीचै राखी ती सारा कीरालाई आफ्नू चक्र चलाई मारी ब्रह्मालाई डुब्नुबाट जोगाउनुभयो र, तिनै मरेर सडेका जल-जन्तुका हाड-खोडका थुप्रोले पहिलेका दर्के पानीले र पहिरोले खिइई थेप्चिएका पहाडहरू चुलिए, भूमि मलिलियो, फेरि ब्रह्मशक्तिले अघि सूर्यमा गै रहेका वंशहरू आफाफ्ना गुण-स्वभाव, आकार-प्रकार लिएर सूर्यका प्रत्यावर्तन शक्तिले पृथ्वीमा फर्कन थाले । यसरी अचरहरू अ.इसके-पछि, भ्यागुतोले-पानीघोडाले-पानीमान्छेले जल-थल दुवैमा सास फेर्न र अडिन सके-झैं पृथ्वीमा अडिन सक्ने मत्स्यकै नामले पुकारिने जलमानुषको रूपमा पैदा भएर मानिसहरू र अरू-अरू प्राणी

पनि समुद्रकै प्राणीमा जन्म लिएर मात्स्य न्यायबाट बच्न पृथ्वीमा आई निर्धक्क-सँग रहन थाले र पानीमै जस्तो मैथुनी सृष्टि चलाउन थाले । पृथ्वीमै जन्मथलो हुनेको पानीमा सास फेर्ने शक्ति हरायो । त्यसै-उसले "प्रथम अवतार प्रभु मत्स्यरूप धारणम्" भनिन्छ । यसैलाई नै ब्रह्माको मानससृष्टि अर्थात् जलचरलाई थलचर बनाउने इच्छाशक्ति पनि भनिन्छ ।

यिनैमा पहिलेका शास्त्रज्ञाताहरू आफाफ्नू ज्ञान लिएरै जन्मने हुनाले उनैले फेरि पहिलेका शास्त्र विद्या कलाहरू प्रचार गर्दछन् । यसै-उसले सबै स्थिति पूर्वकल्पकै जस्तै कल्पैपिच्छे दोहोरिन्छन् । जसरी प्रत्येक ऋतुमा पोहोरकै दृश्य दोहोरिन्छन् त्यसरी नै प्रत्येक कल्पमा पहेलेकै कल्पका वस्तु, चीजबीज, नर-नारी तिनका आकार-प्रकार, गुण-अवगुण, ऋतुका तारतम्मे उनै-उनै दोहोरिइरहन्छन् । यद्यपि उग्र पाप भोग्नका लागि मात्र मानव प्राणी भूत-प्रेत-पिशाच आदि र तिर्यक्योनि यानि तेर्सो शरीर भएका प्राणी भएर जन्मे पनि तिनमा आफाफ्नू वंशीय गुण र वंश चलाउने शक्ति हुँदैन । त्यसको संस्कार उसको आदि योनिको नै रहन्छ ।

हे अगस्त्य मुनि ! जसरी समुद्रमा रहने सागरको

फलौला सकलगुण्डा, अहंमानी, दम्भी जन्मन्छन् र आपसमा रगडासगडा मारपीट, मुद्दामामिला ⇨

पानी सूर्यका तापले ताती भाफ बनेर सगरमा पुगी 'ॐ खं ब्रह्म' ॐ माने सत्त्व-रज-तम यी तीन गुण मिलेको, खम् माने आकाश नै, ब्रह्म माने ब्रह्मा हो भन्ने वेदको यो अन्तिम निर्णयि अनुसार नै आकाशमा थुप्रिएको त्यो बाफ नै सूर्यमा रहेको बलाहक नामको शक्तिले बादल बनी, त्यही बादल नै बलाहकको स्वामी इन्द्रशक्तिले चिसो पानी बनी, पिपिरी बाजउँदा चेपबाट चेपिएर निस्केको मुखभित्रको त्यो तातो हावा नै बाहिरको खुला चिसो बतासमा ठोकिदा आवाज निस्के-झैँ, बादल-माथिको तातो हावा चेपिएर मेघभित्रको चिसो हावामा मिल्दा बादल गर्जनि; दर्शनढुङ्गामाथि दर्शनढुङ्गा बजार्दा झिल्का निस्किए-झैँ बादल-माथिको तातो बतासको वेग मेघभित्रको चिसो हुरीमा ठोकिदा ती दुवैको आघातको वेग-वेग जुधेर जुधाइको बीचमा परेको पानीलाई चट्याङ बनाउँदै चम्कने बिजुलीले ठेलिई पानीको रूपमा मेघ-पानी-विद्युत्-बतास र आकाशको संयुक्त शक्ति नै जलशायी साकार विष्णु हो । त्यस्ता विष्णुको चरणोदक अर्थात् मेघको पानी ब्रह्माको कमण्डलु यानि मेघमनिको आकाशबाट पृथ्वी वा पृथ्वीको टाउकोरूप शिवको शिर मानिने हिमालयमा

गरिरहन्छन् अनि सधैँ कामले आतुर, क्रोधले चूर, लोभले बेसुर रहने हुन्छन् । भलै, पछिका कोही ⇨

दर्की शिवको जटारूप मानसरोवरमा जम्मा भई भरिएपछि त्यहाँ नअटाई त्यो नअटाएको पानी भगीरथ प्रयत्नले अर्थात् त्यति अग्लो पहाडबाट खँदारिदै, भीर-पहरा ढुङ्गा-मूढामा बजारिदै, पाखा-भित्तामा ठोकिदै, छिया-छिया भई बल्ल-तल्ल बडा मुश्किलले सम्ममा आइपुगी, एकछिन पनि नबिसाई बिस्तार-बिस्तार निरन्तर बग्दै-बग्दै गई फेरि सागरमै मिल्छ र फेरि ताती, बाफ बनी, सगरमा पुगी पानी-रूपमा वर्षिई उसै सागरमै आवागमन गरिरहन्छ । भाफ बन्दा पानी नदेखिए पनि पानी मरेको अर्थात् बिलाएको हुँदैन । जसरी अन्न-फलफूलमा रहेको पोषक तत्त्व, गुण-स्वाद देखिदैन; तर खाएपछि अनुभवले 'छ, हुन्छ' भन्ने थाहा हुन्छ, त्यसरी नै पानीबाटै बनेको यो शरीर अनि सूर्यबाट मिलेको त्यसमा रहेको शक्ति नदेखिए पनि बिलाएको हुँदैन। त्यसैले त्यसरी नै यो सृष्टि-स्थिति-प्रलयको आवागमन पनि भइरहन्छ । पानीको यस्तो आवागमन देखेर पानीबाट बनेको यो शरीरको पनि आवागमन भइरहन्छ भन्ने कुरो यसै अनुमानले ठम्याउनुपर्छ । यही आवागमन भइरहने हुनाले यसका सञ्चालक भगवान् विष्णुलाई ''चक्रपाणि'' अर्थात् हातमा चक्र लिएर सृष्टि-

विद्वान् हउन् किन्त तिनमा चच्चरित्रता, सज्जनता तथा दयालुता हुँदैहुँदैनन् । यिनै नै जन्म-मृत्यु-जरा- ⇨

स्थिति-प्रलयको रूपमा घुमाइरहने भन्दछन् । यिनै सब कारणले आकाशको जललाई विष्णुको चरणोदक र सृष्टि-स्थिति प्रलयको आदिकारण बर्सेको जल नै हुनाले विष्णुलाई जलशायी भन्दछन् । क्षीरसागरमा शेषशय्या गरी सुतेका लक्ष्मी युक्त अर्थात् क्षीर माने दूध झैँ सेतो प्रकाशमय सागर माने अथाह आकाशमा व्याप्त विद्युत् नै निराकार विष्णु हो र त्यस विद्युत्मा निहित शक्ति नै लक्ष्मी हो भने; प्रकृतिरूप जललाई अँगाली मेघरूप धारण गर्ने शक्तिसम्पन्न विद्युत् चाहिँ विष्णुको साकार रूप हो ।

यद्यपि समुद्रमा 'वडवानल' नामले व्याप्त रहेको विद्युत् पनि सूर्यबाटै समुद्रले संग्रह गरेको हो तापनि आकाशरूप क्षीरसागरमा रहेको विद्युत् निट्ठा तातो हुनाले उ पुरुष हो र जलरूप क्षीरसागरमा रहेको विद्युत् चिसो-तातो मिलेकाले प्रकृति हो । पुरुष भाले हो र प्रकृति पोथी हो । भाले-पोथीको मेलबाटै सृष्टिक्रम चल्ने हुनाले दुवैको विद्युत्-तातो मिली यौटै आत्मा बने पनि भाले पक्षको शक्तिलाई परमात्मा भनिन्छ र पोथी पक्षको शक्तिलाई जीवात्मा भनिन्छ । परमात्माले शरीर सञ्चालनका लागि आवश्यक पर्ने बल-

विद्या-वाणी आदि समस्त शक्ति दिए पनि तिनलाई प्रयोगमा ल्याउने काम जीवात्माले गर्छ र त्यस-त्यस कर्मको भोग पनि जीवात्माले नै भोग्छ । परमात्मा त केवल उसका कामको साक्षी मात्र भएर रहन्छ । यसैले हामीले झूठो बोल्दा साथसाथै साक्षीले झुठो-झुठो भन्ने बकिरहेको हुन्छ । यौटै आत्मा भए एकैचोटि दुई कुरो बक्न सक्ने थिएन भन्नेहरूलाई 'द्वैतवादी' भन्दछन् र आखिर समुद्रले धारण गरेको विद्युत् पनि सूर्यकै बिजुली त हो नि ! जसरी अरू शक्ति दिए त्यो द्वैत शक्ति पनि दिए, उ दिन्छ मात्रै स्वयं भोग गर्दैन भन्नेहरूलाई 'एकेश्वरवादी' भन्दछन् ।

हे अगस्त्य मुनि ! अहिलेसम्मको मेरो भनाइले त्यो विष्णु त जड़ात्मक पो रहेछ भन्ने भान तिमीलाई पऱ्यो होला, त्यस्तो भान हुनु स्वाभाविकै पनि हो। किन्तु जल-थल-तारा-नक्षत्र-ग्रहगणसहितको समस्त आकाशमा व्याप्त भएर रहेको त्यो विद्युत्-रूप विष्णु त सदा सत्-चित्-आनन्दमय स्वरूपमा रहेको छ । तसर्थ, आफ्ना भक्तहरूले त्यो तेजरूपमा शंख-चक्र-गदा-पद्म लिएका, पीताम्बर पहिरेका मनुष्य-आकारको रूपमा ध्यान गरे या स्तुति-प्रार्थना-आर्त पुकार गरे भने आफूमा हरेको चित्

मकरस्नाना दानहरूको पण्यले हरिकृपा नभएसम्म सातराते पछि का रगतमा अडिन्छन नै । यसैले ⇨

माने चैतन्य शक्तिद्वारा भक्तले चिताए-जस्तै प्रत्यक्ष रूप धारी भक्तहरूको आपत्ति टारिदिनुहुन्छ, आशीर्वाद दिएर दुःख हरिदिनुहुन्छ, कुनै दुष्टले धर्म नाश गर्न तम्स्यो भने इच्छानुसारको रूप धारी त्यसलाई निभाइदिनुहुन्छ, धर्म र धर्मात्मा-हरूको नाश गर्ने दुष्टहरूको विशाल दल भए अवतार लिएर युद्ध रची त्यसै युद्धमा सारा पापी-हरूलाई भेला पारी तिनलाई स्वाहा पारिदिनुहुन्छ, आफ्नू सदा ध्यान गर्ने भक्तहरूलाई उनमाथि आइपरेका आपत्-विपत्‌बाट रक्षा गरिदिनुहुन्छ। कहिलेकाहीं लहड चल्यो भने साधारण रूप धारी धराई लक्ष्मी या गङ्गा या सरस्वतीका साथ रमण पनि गर्नुहुन्छ। उहाँका यस्ता लीलाहरूको बखान गरेर साध्य छैन। भगवान्‌का यिनै सब लीला र मनुष्यहरूमा भिन्न-भिन्न स्वभाव तथा गतिविधि एवं उनको विचारधारा हुनु नै पुनर्जन्मका अनुमानको कारण हो। यिनै सब कुरा नै हुन् पुनर्जन्म हुने कारणका प्रत्यक्ष विवरणहरू।

हे अगस्त्य मुनि! तिमीले पुनर्जन्म हुने कारण सुनिसक्त्यौ, जान्यौ पनि। त्यसैकारण, अब सुन, यस मर्त्यमण्डलमा गोमाका बाद श्रीस्वस्थानीको व्रत-पूजा विधि पूर्वक गर्ने सुलोचनाको आख्यान।

भनिएको हो- 'पितृकार्यका लागि चोखिदैनन् अर्थात् पवित्र पुत्र पाउनका लागि योग्य हुँदैनन्।।' ⇨

अहिले यतिखेर चलिरहेको कल्पलाई पद्मकल्प भन्दछन् । यस कल्पको यो अट्ठाईसौं चौघडीको अन्तिम युगको प्रथम चरण चालू छ । यसभन्दा एघारौं चौघड़ी पहिले अर्थात् अट्ठारौं चौघडीको त्रेतायुगको अन्तिम चरणमा हिमालय प्रान्तको पहाडी प्रदेशको दक्षिणी भागमा रहेको नारायणी नदीको पूर्वपट्टि भएको चित्रवन नाम गरेको राज्यका शासक शूरसेन सिंह नामका राजा थिए । तिनको राजधानी नारायणगढ़ नामको नगर थियो। राजधानीमा भव्य बजार थियो । राज्यका अरू ठाउँ-ठाउँमा पनि राम्रा-राम्रा बजार सजिएका थिए । गाउँहरूमा किसानहरू र कालीगढ़हरू रहन्थे । किसानहरू खेती-किसानी गर्थे भने कालीगढ़-हरू राज्यका जनताहरूलाई चाहिने सर-सामान बनाउँथे । राजधानीबाट केही पूर्व त्यतिखेर सुन्दरपुर नाम गरेको बजारको वरिपरि रहेका आठ-दश गाउँमा जजमानी गर्ने पुरेत बाजे तुलसीराम आचार्य नाम गरेका गाउँले पण्डित थिए । उनी हँसमुख, मिलनसार, परिआउँदा अरूलाई सकेको सघाउने, चतुर्मासाभरि गाउँवासीलाई पुराण सुनाउने, अनि वैशाख-पुरुषोत्तम-कार्तिक-एकादशीका माहात्म्य-हरू पनि ती-ती महीनामा वा तिथिहरूमा बताउने,

ती-ती व्रतहरूको उद्यापन तथा पूजा-पाठ अनि श्राद्ध-न्वारान-व्रतबन्ध-विवाह आदि पनि शुद्धसँग विधिपूर्वक गराउने, परिआउँदा सप्ताह पनि भन्ने, अनि हात हेर्ने, कुण्डली हेर्ने, चिना-टिप्पन लेखिदिने तथा बिस्तुर नजाने झारफुके काम पनि गर्ने एवं टपर्टुय्याँ घरेलु ओखती पनि गरिटोपल्ने हुनाले उनी उनका जजमानहरूका अत्यन्त प्रियपात्र थिए । तिनकी मनोरमा नामकी धर्मपरायणा पत्नी थिइन् । उनले दुई छोरा-मनि छोरी पाइन् । ती छोरी असाध्यै राम्री थिइन् र तिनका हेरिरहूँ जस्ता आँखा हुनाले सबैले उनलाई 'सुलोचना' भन्दथे । ती सानैदेखि शीलवती थिइन् । उनी बाह्र वर्षकी भएपछि उनका बाबुले उनको विवाह-कर्म नारायणीकै डिलमाथि नै बनेको भव्य मन्दिरमा रहेको सिद्धिविनायक नामका गणेशजीका पुजारी-का लायक गुणी छोरा श्रुतधरका साथ गरिदिए । त्यस वेलाको रीति-अनुसार पर नसरीकन घर नपठाउने चलन हुनाले बाबुले छोरी अन्भाएनन् । एकै वर्षपछि माईका रोगले श्रुतधर एकाएक मरे । बिचराले दन्दनाउँदो चौधै वर्षको उमेरमा विधवा हुनुपर्‍यो । घरकाले अलच्छिनाही भनी घरमा ढिम्कनै दिएनन् । भाउजूहरूले चाकर्नी

अदिति हुन् । दितिका तीन रातसम्मका गर्भबाट जन्मने विष्णुधर्मद्वेषी राक्षसहरू,त्यसपछिका दुई ➪

बनाए । छरछिमेकीले पनि अनेक ताना मार्न थाले । सेतो सारी लाएर बालखै छोरीलाई बाहिर-भित्र गरेको देख्ता बाबु-आमा पिरिएर झिङटिदै गए । 'यस्तो परिस्थिति देखेर अझ भविष्यमा आइपर्ने गतिविधि विचारेर, यसरी अनेक भुवल सहेर, नाना भाँतिका टोकसो सुनेर मर्नैका लागि दिनहरू बिताई काल पर्खनुभन्दा त किन म कल्याणकारी भगवान् विष्णुको तपस्या गरेर भावी जन्म नसुधारूँ' भन्ने मनमा सोची एकदिन मौका पारेर उनले आफ्नू मनको तर्क-वितर्क आमालाई भनिन् । आमाले बाबुलाई सुनाइन् । तब बाबुले यसो मनमा गमेर 'छोरीको विचार त ठीकै हो' भन्ने ठानी उसको इच्छा पुऱ्याइदिने तारतम्मेमा लागे । तब त्यो कुरा जजमानहरूलाई भनेर गण्डकी-देवकी-त्रिशूली नदी मिली त्रिवेणी भई नारायणी बनेको दोभाननेर पहाडको भित्तामा बाढी नपुग्ने ठाउँमा पानीको सोता नजीकै पारी यौटा कुटी र यौटा लामू कटेरो बनवाइदिए । त्यसपछि उनको रक्षा र सेवा अनि हेर्चाहका लागि सातोटी अधबैँसे विधवाहरूलाई उहीँ उसै कटेरोमा राखी, छोरीलाई कुटीमा बसाली जज-मानहरूलाई भनेर ती सबैलाई खान-पानको सारा

रातका गर्भबाट दानवहरू र त्यसपछिका दुई रातका गर्भबाट जन्मने दुष्ट दैत्यहरू हुन्छन् र समूहमा असुर ⇨

व्यवस्था मिलाइदिए ।

त्यसपछि ती बालविधुवा सुलोचना त्यसै कुटीमा बसेर, सांसारिक सारा व्यवहार तजेर, कामोत्तेजक विषय-वासनाका बेफ्वाँकका तर्क-वितर्क गर्न र मनुष्यमण्डलीमा रहेर फतर्का मार्न च्यात्त छाडी, त्यो तीन पवित्र नदी मिलेकोले त्रिवेणी नाम पाएको त्यस दोभानमा दिनहुँ तीनै काल प्रात:-मध्याह्न र साँझ न्वाहेर आई, कुटीमा बसी, पद्मासन कसी, निश्चल सोझो घाँटी गराई, दुवै आँखाको हेराइलाई नाइटोमा पुऱ्याई, सूर्यको जाज्वल्य तेजलाई आकाशभरि नै ढाकिएको सम्झी, त्यस तेजमा मात्रै ध्यान अटल पारी, त्यसै तेजराशिलाई विष्णुको स्वरूप मानी 'ॐ नमो भगवते वासुदेवाय' भन्ने यो विष्णुमन्त्र मात्रै जपी नारायणकी अति भक्तिनी योगिनी भएर अत्यन्त कठिन तपस्या गर्न थालिन् । उनी त्यहाँ सधैँ असल आचरणमा रहन्थिन्, कहिल्यै कसैको फोकटिया सङ्गत गर्दैनथिन्, ध्यानमा तल्लीन रहेको बेलामा 'को आयो, को गयो' उनलाई पत्तो रहदैनथ्यो । आफ्नै शरीरमा रहने सधैँ नरकतिरै जाने बाटामा मनलाई दौडाइरहने, अनि काम-क्रोध-लोभ-मोह-मद-मात्सर्यलाई उकास्याउकास्यै गरिरहने दुष्ट इन्द्रियहरूको

कहिन्छन् ।अदितिका गर्भबाट जन्मने आदित्यहरू विष्णुभक्त सज्जन विद्वान् बुद्धिमान् चरित्रवान् दयावान् ⇨

वशमा कहिल्यै पर्दिनथिन् । जो पवित्र खाना मिल्यो त्यही मात्र खाएर सन्तोष गर्थिन्, सधैँ एकछाक जो जुरेको फल-फूल मात्र खाने र भक्तहरूले नियमित रूपले पालो बाँधेर ल्याइदिने गरेको गाईको दूध मात्र पिउँथिन्, सधैँ साँचो बोल्थिन्, थोरै बोल्थिन्, अत्यन्तै सुशीला थिइन्, सदा प्रसन्न रहन्थिन् । नारायणी शक्तिले मोहित भएर दर्शन गर्न आएका भक्तहरूले ल्याएर चढाएका वस्तुहरू पनि विशाल दिल भएकी उनी वरिपरि आसपासमा रहने दुःखी दरिद्रीहरू-लाई बाँडिदिन्थिन् । व्रतैव्रतले देह सुकाएकी थिइन्, तर ब्रह्मचर्यका प्रभावले तेजिली थिइन् । बिहान न्वाहेर आएपछि पितृहरूलाई, ब्राह्मणहरूलाई दिएर अनि आगामा होमेर, दिनको छठवाँ भागमा फल-फूल मात्र खाने गर्थिन् । कठिनभन्दा पनि अति कठिन सारा व्रतहरू विधिपूर्वक गर्थिन्, पुण्यकर्म गरेर नै सारा महीना, सारा वर्षहरू बिताउँथिन् । प्रत्येक वर्ष पौषशुक्ल पूर्णिमाका दिनदेखि स्वस्थानीका व्रतको नियम पालन गरी नारायणी देभानमा प्रातः स्नान गरी, कुटीमा आई आफ्नू नित्यकर्म सकी फेरि मध्याह्नमा सङ्गममै स्नान गरी, त्यसैको तीरमा बालुवाको दुइटा ससाना

ढिस्को बनाई त्यसैमा शिव-पार्वतीको पूजा गरी कुटीमा आएर नारायणको तेजरूपमा ध्यानमग्न हुने गर्थिन् । माघशुक्ल पूर्णिमाका दिन स्वस्थानीको व्रतको उद्यापन पूजा अर्थात् सावधिक व्रतको अन्तमा गरिने पूजा र ब्राह्मण-भोजन गराउँथिन् । अनि मकर राशिमा सूर्य रहुन्जेल त्रिवेणीकै किनारमा रहेर त्रिकाल स्नान गरी उहीं नै नारायणको ध्यानमा तल्लीन रहन्थिन् । त्यस्ता प्रकारले ती सुशीला सुलोचनाले साठी वर्ष त्यस कुटीमा बसेर साठी वर्षमा स्वस्थानी देवीको साठी नै ओटा व्रतपर्वूक पूजा गरिन् र साठी नै ओटा मकरस्नान त्यस देउघाटको त्रिवेणीमा गरिन् ।

मकर राशिमा सूर्य सरेको दिन माघे संक्रान्ति-देखि त्यसै माघ मासान्तसम्मको नित्यस्नानलाई हामी माघस्नान या मकरस्नान भन्दछौँ । त्यस कुटीमा त्यसै प्रकारले रहँदा-रहँदै तिनी पचहत्तर वर्षकी भइन् । स्वस्थानीको साठीवाँ पूजाको अन्तमा स्वयं स्वस्थानी देवी नै उनका सामु मात्रै प्रकट भएर त्यहाँ रहेका सबैले सुन्ने गरी - "हे तपस्विनी ! तिम्रो श्रद्धा-भक्ति-विश्वास-पूर्वकको साठीओटा अटूट पूजाले म अत्यन्त प्रसन्न भएँ । अब तिमी यो मकरस्नान सकेर आगामी फागुनशुक्ल

पूर्णिमाका दिन मध्याह्न कालमा यस नारायणीको सङ्गममा नै कम्मर-कम्मर पानीमा तीन डुबुल्की लाएर सूर्यलाई हात जोडी लामू स्वरले 'ॐ' भन्दाभन्दै यो शरीर यहीँ त्यागेर आत्माशरीरले सरासर वैकुण्ठ जाऊ'' भनी स्वस्थानी देवी अल्पिइन् । यो कुरो थाहा पाएर त्यस दिन त्यस सङ्गममा भक्तजनको कुडुलो लागेको थियो । ठीक भनेकै वेलामा देवीले भनेजस्तै गरी रहेकी उनको तालु पड्कियो र उनको अदृश्य जीवात्मा उडेर सरासर वैकुण्ठ पुग्यो, पार्थिव शरीर पानीमै ढल्यो । भक्तजनहरूले उठाएर किनारामा ल्याए सुताए र साराले फूल अर्पेर पूजा गरे । अनि खलियोका खलियो दाउराको चिता बनाएर त्यसमाथि त्यो मृतदेह राखी सबैले मिली आफाप्ना घर-घरबाट ल्याएका पाथीका पाथी घिउ लाशमाथि खन्याएर यौटा भक्तले दागबत्ती दियो र दशगात्र क्रिया पनि गरिदियो तथा नियमपूर्वक बरखी बारी बरखी पनि गरिदियो । त्यसपछि तिनै भक्तपुत्रकी आमाले नै त्यस आश्रमको नाउँ 'नारायणी आश्रम' राखी त्यहीँ त्यसै गरी रहन लागिन् । भक्तहरूले सुलोचनाको स्मृतिको लागि साधु-सन्त-तीर्थयात्री विद्यार्थीहरूका लागि त्यहाँ

जीवात रहने पृथ्वी पनि समुद्रभित्रै छ, त्यसैले कहिले चुर्लुम्मिन्छ र कहिले छर्लङ्गिन्छ । समस्त चर अचर ⇨

सदावर्त राखिदिए ।

हे अगस्त्य मुनि ! गङ्गा र सागरको सङ्गमस्थल गङ्गासागरमा समुद्रमा डुबेर रहेको कपिलमुनिको आश्रममा मकरसंक्रान्तिको सात दिन पहिलेदेखि सात दिन पछिसम्म आश्रममाथिको समुद्रको जल पछि-पछि हटेर आश्रमस्थललाई छोडिदिन्छ र कपिलमुनिको आश्रम पानीबाट बाहिर पोहोरको जस्तै देखिन्छ, त्यसै गरी हरेक कल्पान्तमा पहिले पृथ्वीलाई डुबाएर रहेको समुद्रको पानी पछि-पछि सरेर पृथ्वीलाई डुबाउन छोडिदिन्छ त फेरि पहिलेका कल्पकै उही-उही सृष्टि-स्थिति उस्तै-उस्तै प्रकारले दोहोरिने हुनाले आजसम्म पनि त्यो नारायणी आश्रमको परम्परा उसै गरी चलि नै रहेको छ।

हे अगस्त्य मुनि ! जब ती तपस्विनी सुलोचनाले देह त्याग गरिन्, तब उनको जीवात्मा तत्काल वैकुण्ठधाम पुग्यो त श्रीस्वस्थानीको आशीर्वाद र विष्णुको प्रसन्नताले गर्दा पद्मा नाम गरेकी अप्सराको रूप धारण गर्‍यो र विष्णुले आफ्ना इच्छाशक्तिले तयार पारिएको, सबै ऐश्वर्यले भरिभराउ भएको नयाँ स्वर्गपुरीमा सकल सुखभोग भोग्दै चालीसओटा युग अर्थात् दश चौघडीसम्म

स्थावर जङ्गम सृष्टि सूर्यका पौरुष शक्तिले समुद्रबाट उब्जन्छन् । सूर्यबाट त केवल तातो चेतनता र ⇨

त्यहीँ रहिन् । त्यो स्वर्ग यसै शरीरका आँखाले देख्नका लागि, जस्तै दूरदर्शक स्थानबाट विशेष कृत्रिम बिजुलीद्वारा अन्तरालको नदेखिने व्याप्त बिजुलीमा फ्याँकिएको अनि अदृश्य रूपमै त्यहाँको प्राकृतिक बिजुलीमा अदृश्य रूपले अनेक भएर फैलिएको दर्शक स्थानबाट फ्याँकिएको दृश्य जतासुकै देख्नलाई अर्कै यन्त्रको र विशेष बिजुलीको खाँचो पर्छ, त्यस्तै अन्तरालको बिजुलीमा अदृश्य रूपले रहेको त्यो स्वर्ग देख्नलाई पनि तपस्याले आफ्नै शरीरमा उपार्जन गरेको दिव्यदृष्टि चाहिन्छ । त्यस्तो त्यो दिव्य स्वर्गपुरीमा चालीसओटा युग बिताएपछि एकदिन एकाएक टुप्लुक्क त्यहाँ आइपुगेका ब्रह्माले आफ्ना इच्छाशक्तिले उनको त्यो पद्मा शरीरलाई अत्यन्त राम्रो रूप र जीउडालको शरीरमा परिवर्तन गरेर आफ्नै लोकमा लगी 'तिलोत्तमा' नाम राखिदिनुभो र भन्नुभो - 'हे तिलोत्तमा पुत्री ! तिम्रो यो अति राम्रो रूप-राशिलाई देखेर म आफै पनि आश्चर्यचकित छु, त्यसकारण, म तिम्रा पुण्यका प्रतापले बनेको यो शरीरलाई कहिल्यै पुण्य क्षय नहुने बरु बढ्दै जाने तथा सारा ऐश्वर्यले भरिभराउ भएको परमधाम सूर्यलोकमा पठाइदिन चाहन्छु, जहाँ गएर तिमी

त्यो चेतनतामा रहने अदृश्य शक्तिहरू मात्र प्राप्त हुन्छन् । जलनिर्मित शरीररूपी तारमा गतिशील हुने ⇨

आकाशमा सूर्य भगवान् रहुन्जेल यस्तै रूप र जीउडालले सकल सुख-भोग भोग्दै रहिरहनेछौ। यस्तो सूर्यलोकमा पठाउन मैले मात्रै हुँदैन, समस्त देवताहरूको पनि सम्मति चाहिन्छ। तसर्थ, तिमी देवताहरूलाई प्रसन्न पार्न उनीहरूका कट्टर शत्रु, असाध्यै बलिया, अचेल अजनाभ देश अर्थात् भारतवर्षको मगध प्रान्तको विन्ध्याटवीको बीचमा रहेको अम्बिकापुरलाई राजधानी बनाई रहेका 'सुन्द' तथा 'उपसुन्द' नाम गरेका दानवलाई आफ्ना नक्कल-झक्कलले मोहित पारी परस्परमा भिडाई मारेर आऊ। अनि म त्यस कामले प्रसन्न भएका देवताहरूको सभा बसाई तिमीलाई सूर्यलोक पठाउने प्रस्ताव सभामा राख्छु। तिम्रो कामले रिझिएका देवताहरूले अवश्यै मेरो प्रस्ताव स्वीकार्नेछन्। तब म तिमीलाई सूर्यलोक पठाइदिनेछु' भनेर अह्राएपछि ती तिलोत्तमा बनेकी सुलोचनाले तब तुरुन्तै ती दुई दैत्यलाई मार्न त्यो ब्रह्मलोकबाट बीणा हातमा लिएर योगमार्गले अर्थात् जहाँ चितायो उहीँ पुगिने शक्तिले जहाँ ती दानव रहन्थे उहाँ पुगिन् र त्यहाँको पवित्र जल भएकी रेवा नदीको जलमा न्वाहेर, कलेजी रङ्गको सारी पहिरेर, रङमिल्दो चौबन्दी चोलो

सौर विद्युत् तातोपन मन र तारको सम्बन्धविच्छेद हुनु नै मर्नु हो। कति मन (चेतनाताप) नामका ⇨

लाएर, सारा शृङ्गारपटारका सामानले सजिएर, पाउजेब र करधनी छमछम पार्दै, चुराहरू छन्छन् छन्काउँदै पहाडी सोताको नजीकै रहेको अशोक वृक्षको मनि फेदमा रहेको क्यै अग्लो चेप्टो ढुङ्गामाथि बसेर, सेतो चमेलीको फूलले बनेको गजरा शिरमाथि मेहराव आकारले सजेर, रङ-बिरङका गुनकेशरीका लहरा चुल्ठामा लड्काएर, कञ्चन हारले कण्ठ सजाएर, हल्का लुर्कन कानमा लगाएर, सुनिरहूँ जस्तो मीठो गीत गाउँदै, छःवटै स्वरले वीणा बजाउँदै बसेकी, हेरिरहूँ जस्तो चन्द्रमाको चाँदनी जस्तै रूप भएकी नारीलाई ती सुन्द तथा उपसुन्दका सिपाहीहरूले देखेर छक्क पर्दै तुरुन्तै हाँफझाँफ गर्दै सुन्द उपसुन्दका पास पुगेर हतारिदै त्यस स्त्रीको बारम्बार वर्णन गर्दै भन्न लागे -

हे महाराज, यहाँबाट नगीचै क्यै अगाडि नै साक्षात् कामदेवलाई नै पनि मोहित पार्ली जस्ती देवी हो कि, दानवी हो कि, यवनी हो कि, यक्षी हो कि को हो, स्त्रीहरूमा रत्न-समानकी, मानौं, रत्नै-रत्नले बनेकी जस्ती, सोह्रै शृंगारले सजिएकी कोही युवति मधुर स्वरमा वीणा बजाउँदै बसेकी छ । रत्नका भोग गर्ने तपाईंहरू चाँडै त्यहाँ गएर

सौर विद्युत्-रूप प्रेतात्माहरू मर्नेका पापको भारी गहुँ भएर आकाशिन असक्त भई पृथ्वीमै भूत प्रेत ⇨

हेर्नुहोस् भन्ने यस्तो आफ्ना सिपाहीहरूको अत्यन्त सुन्दर वचन सुनेर तुरुन्तै नै अंगूरका सुराको चुस्की लिन छोडेर, अनि हजारौँ सुन्दरी-सुन्दरी, राम्री-राम्री तरुनी-बरुनी बाइफाले दानवी पत्नीहरूसित पोखरीमा पानी छ्यापाछ्याप गर्दै छिहिल्लिन इत्रिन छोडेर, त्यो नयाँ युवतिलाई मोहित पार्ने लुगाफाटा लाएर, कोही उसका रक्षक भए उनलाई निभाउने सुर कसेर, अनि यमराजको डण्डा जस्तै देख्तै डरलाग्दा सय-सय धार्नी फलामले बनाइएका आफाफ्ना गदा लिएर बुर्कुसी मार्दै ती दुवै भाइ सुन्द तथा उपसुन्द; उहिले महिषासुरलाई मार्ने चण्डीले जस्तै गरी सारा श्रृंगारले सजिसजाउ भएर ती दुवै दैत्यको कामाग्निलाई दन्काउन कम्मर कसेर बसेकी; त्यो तिलोत्तमा-भाठौँ पुगे र उनको अगाडि पुग्नेबित्तिकै उनको रूपराशिले लट्ठिएका तथा सुराले उन्मत्त भएर पात्तिएका ती दुवै भाइले परस्परमा भन्न लागे - "हे भाइ ! यो सुन्दरी मेरी नै स्वास्नी हुन्छे ।" अनि अर्कोले भन्यो - 'हे दाइ, यसलाई तपाईं त्याग्नुहोस्, यो कर्के आँखावाली मेरी नै स्त्री हुन्छे ।' भन्दै मेरी-मेरी भनेर जङ्गिदाजङ्गिदै काल नगीचिएका मत्ता हात्ती जस्ता ती दुवै दाजु-

पिशाच भै आफ्नू हड्डी कुरेर रहन्छन् । त्यसै हड्डीमा इच्छानुसारको रूप धारेर हिड्छन् तर्साउँछन् पनि । ⇨

भाइ आफाफ्ना गदाले परस्परमा हानाहान गरेर ठटाउन लागे त ती दुवै भाइ मरेर त्यहीँ भुइँमा लम्पसार परे ।

तिलोत्तमा बनेकी सुलोचनाको रूपराशिमा लट्ठिएका सुन्द- उपसुन्दको घमासान

त्यसपछि ती तिलोत्तमा पनि देवताहरूको कार्य फत्ते पारेर दशै दिशालाई झललल झल्काउँदै आकाशमार्गले ब्रह्माको पुरमा आइन् । अनि उनका त्यस कामले अति सन्तुष्ट भएका ब्रह्माजीले देवताहरूको सभा बसाएर, ती तिलोत्तमाका कामको वृत्तान्त बताएर, उनीहरूबाट तिलोत्तमालाई सूर्यलोक पठाउने अनुमति पाएपछि ब्रह्माले भन्नुभयो - 'हे सुन्दरी ! अब उप्रान्त तिमीलाई यस्तै रूप, यस्तै उमेरकी रहिरहने गरी बस्ने ठाउँ सूर्यको रथमा दिएँ, अब तिमी उहीँ जाऊ र आकाशमा सूर्य रहुन्जेलसम्म तिम्रा इच्छा-अनुसारका अनेक सुख-

हड्डी मट्टिएपछि वायुरूप भै रूखको जलाशयको दोबाटाको तथा झट्केला बनाउनेको पापी शरीरमा ⇨

भोगहरू भोग्दै उहीं रहिरहू' भनी पठाइदिए । तसर्थ, कल्याण चाहनेले समयको सदुपयोग गर्नै गर्नुपर्छ ।

यस्ता प्रकारले त्रिवेणीको सङ्गमस्थल नारायणीको तटमा रहेर स्वस्थानीको साठीओटा व्रत-पूजा र साठीओटै मकरस्नान तथा साठी वर्षसम्मको नारायणी-तटको निवासको पुण्यफल मिलेकोले मरेपछि ती सुलोचना ब्राह्मणी वैकुण्ठ पुगेर पहिले पद्मा भइन्, अनि अप्सराहरूमा उत्तम तिलोत्तमा भइन् र अन्तमा सूर्यलोकको वास पाइन् । आज पनि उनी उहीं छन् । अरू-अरू पनि जजसले सुलोचनाले जस्तै गरी त्यो व्रत, नियम पालन गर्ला, उ-उसले पनि उ-उस्तै पुण्यफल पाउनेछ । त्यसकारण, हे अगस्त्य मुनि ! आफ्नू कल्याण चाहने मनुष्यले जसरी-तसरी जे गरेर भए पनि वैकुण्ठवास प्राप्तिका लागि श्रद्धा-विश्वासपूर्वक नारायणीको शिरानमा रहेको देउघाटको त्रिवेणीमा माघभरि बसी मकरस्नान गर्नै गरून् । महीनैभरि त्रिवेणीमै बसेर मकरस्नान गर्न नसके पनि तीन दिन त त्रिकालस्नान प्रत्येक वर्ष अवश्यै गर्नै गरून् । त्यसै गरी स्वर्गलोकको मात्र अस्थायी वास चाहनेहरूले प्रयागको त्रिवेणीमा मकरस्नान गर्नै गरे पनि हुन्छ ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमाराऽगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां सुलोचना सूर्यलोकगमनं नाम ऊनत्रिंशोऽध्यायः ।।२९।।*

आश्रय लिएर बस्छन् र झट्केलाहरूलाई तड्पाई तड्पाई, डुबाई, गाडी, विष ख्वाई, घाँटी शिर्ची

# अथ त्रिंशोऽध्यायः

## काञ्चनमालिनी-उपाख्यान

हे कुमारजी ! तपाईंका मुखारविन्दबाट हिजो मैले सुलोचनाको सकल वृत्तान्त भलीभाँति सुनें । उनी जन्मदैदेखि पुण्यात्मा थिइन् । हुन सक्छ, उनी उनको पहिले-पहिलेका जन्महरूदेखि नै नारायणको तपस्या गर्दै आएकी हुँदी हुन् । पूर्वजुनीहरूको अभ्यासको संस्कारले नै यस जन्ममा पनि नारायणको तपस्यामा तल्लीन हुन सकेकी होलिन् । किनकि ब्रह्माले शिवले झैं यसै जन्ममा मात्रै लाभ हुने अस्थायी वर नारायणले दिँदै दिनुहुन्न । उहाँले त तपस्या पूरा भएपछि मात्रै काम पुऱ्याएर चिरस्थायी अविनाशी मुक्ति-पद मात्रै वर दिनुहुन्छ र उहाँको तपस्यामा लागेको व्यक्तिले त्यो तपस्या जन्मजन्मान्तरमा भए पनि पूरा गर्नैपर्छ, नगरेसम्म त्यो अधूरो तपस्या पूरा गराउनका लागि त्यस-त्यस साधकलाई सांसारिक विषयवासनाबाट हटाई, त्यसमा नअल्मल्याई विरक्त्याउन विष्णुले सुलोचनालाई जस्तै परिस्थिति पारिदिनुहुन्छ रे ! पूर्वजन्मका तपस्याका अभ्यासको लर्को त्यो तपस्या नटुङ्गिएसम्म हरेक जन्ममा पछि

लागिरहेको हुन्छ भन्ने कुरो शास्त्रहरूले कहेका छन् । सुलोचनाको पनि यस्तै परिस्थिति हुँदो हो र यस जन्ममा पूरा गरिन् होली, यसमा के आश्चर्य छ र ! भन्ने तर्क-वितर्कले हिजो मलाई रातभरि नै पटक्कै निद्रा परेन, छट्पटिइरहें । तसर्थ, पूर्वजन्महरूको धर्मको संस्कार पनि पटक्कै नरहेका, यस जन्ममा पनि उग्र, अति निन्द्य पापैपाप मात्र गरेका भयङ्कर पापी जन पनि उमेर ढल्केपछि बाँकी जीवनभर ती दुई प्रख्यात त्रिवेणीमध्ये कुनै एकमा रही नियमपूर्वक नित्य त्रिवेणीस्नान, मकरस्नान, स्वस्थानीको व्रत-पूजा गर्ने जनहरू ती उसका त्यस्ता उग्र पापहरूबाट छुटेका छन् कि छैनन् ? छुटेका छन् भने त्यस्तो घोर पापबाट को-को छुटेका छन् ? अन्तमा ती कस्ता भएका छन् ? कहाँ-कहाँको वास पाएका छन् ? आज मलाई यही कुरो सुन्नको प्रबल इच्छा जागेको छ, ती-मध्ये यौटाको कथा आज सुनाउनोस् भनी अगस्त्य मुनिले बिन्ती गर्दा कुमारजी आज्ञा गर्नुहुन्छ-

हे अगस्त्य मुनि ! सुलोचनाको त्यो अद्भुत दिव्य कथा तिमीले हिजो सुनिसक्यौ। अब आज तिमीलाई म काञ्चनमालिनी नामकी यौटी श्रेष्ठ अप्सराको अत्यन्त राम्रो कथा सुनाउँछु, सावधान

रहन्छन् अरू पापी योनिमा जन्मेर पाप पनि भोग्छन् । पानीमा डुबी वा डुबाई मरे-मारिएकाहरू पनडुब्बी ⇨

भएर सुन -

यो चलिरहेको पद्मकल्पको अट्ठाईसौँ चौघड़ी-भन्दा दुई चौघड़ी पहिलेको त्रेतायुगमा गन्धर्वनगरमा जन्मिएकी अत्यन्तै राम्री काञ्चनमालिनी नामकी अप्सरा, सूर्य-चन्द्र-पृथ्वी यी तीनै मकर राशिमा रहेकोले कुम्भ योग परेको माघ महीनाको माघे औँसीका दिन प्रयागमा गङ्गा-यमुना-सरस्वती मिलेको सङ्गमस्थल त्रिवेणीमा सचैल मकरस्नान गरेर त्यत्तिकै चिसै लुगाले आकाशमा उडेर कैलासमा गइरहेकी थिई । अत्यन्त तेजस्विनी, सुन जस्तो वर्ण, ढिस्केको नितम्ब, लाम्चा-लाम्चा आँखा, पूर्ण चन्द्रमा जस्तो चहकिलो अनुहार, लामा-लामा केश, ठडिएका गोल-गोल स्तनहरूले शोभिएकी; कुच्चीन अर्थात् सुनको मसिनो धागो जस्तै तारले बुनेको चीनियाँ सारी र चौबन्दी चोलो टम्म मिलाएर आङमा लाएकी, न्वाहुँदा आँचल कम्मरमा कसेकीले छातीमा चौबन्दी चोलो भुक्किएकी, अति राम्री उसलाई आकाशमा उडेर गइरहेकी देखेर, तल हिमालयको कन्दरामा रहने, पहाड जस्तै अग्लो कुरूप कुनै बूढो राक्षसले उनलाई देख्यो र उसले भन्यो - 'हे कमलका फूल-को कोपिला जस्ता आँखा भएकी कल्याणी !

नामको प्रेत भई पानीमै बस्छन्, पानी छोड्दैनन् । तिनले पनि मौका पारेर मानिसलाई पानीमा तान्नी ⇨

तिमी को हौ ? तिमी कहाँबाट आइरहेकी छ्यौ ? तिम्रा लुगा किन चिसै छन् ? तिम्रो चुल्ठो किन भिजेकै छ ? हे सुन्दरी ! कहाँबाट आएकी हौ ? तिमीमा यो उड्ने शक्ति कसरी भयो ? अनि हे कल्याणी ! कुन पुण्यले तिम्रो यो शरीर यति तेजिलो भएको हो ? यो यस्तो अत्यन्तै राम्रो मनोहररूप कसरी भयो ? हे सुलोचने ! राम्रा आँखावाली ! तिम्रो चिसो लुगाबाट मेरो टाउकोमा झरेको पानीको थोपाले हे भद्रे ! सधैँ क्रूर रहने मेरो मन एकाएक शान्त भयो । यो जलको छिटाको यस्तो महिमा के हो ? यो कुरो मलाई बेलिविस्तार लाएर वर्णन गर । किनकि मलाई तिमी अत्यन्त शीलवती लागिरहेकी छौ । यस-कारण, तिम्रो आकृति गुणहीन हुन सक्तैन ।' त्यस राक्षसको यस्तो कुरो सुनेपछि आफ्नू उडान रोकेर त्यो अप्सरा काञ्चनमालिनीले भन्न थाली-

काञ्चनमालिनीले राक्षसलाई आफ्नू वृत्तान्त सुनाएको

हे राक्षस ! सुन, म आफ्नू इच्छा-अनुसार रूप धारण गर्न सक्ने काञ्चनमालिनी नाम गरेकी अप्सरा हुँ । अहिले म प्रयागबाट आइरहेकी छु, मैले प्रयागमा गङ्गा-यमुना-सरस्वतीको सङ्गममा न्वाहेकी छु, यसैउसले मेरो केश र वस्त्र भिजेकै छ, हे राक्षस, म यतिखेर पर्वतहरूमा अति उत्तम कैलास पर्वतमा गइरहेकी छु । उहाँ सुर-असुर अर्थात् देव-दानवले भक्तिपूर्वक पूजा गरिने पार्वती-पति महादेव रहनुहुन्छ । हे राक्षस ! प्रयागको त्रिवेणीको जलको प्रभावले तेरो दुष्टता हटेको हो । जुन गङ्गा-यमुना-सरस्वतीको सङ्गम-स्थल प्रयागको त्रिवेणीमा धेरै वर्ष मकरस्नान गरेको पुण्यको प्रभावले म यतिखेर सुमेधा नामका गन्धर्वकी अति सुन्दरी छोरी भएकी छु, अब म त्यो सबै कुरो तिमीलाई बेलिविस्तार लाएर कहन्छु, तिमी मन लाएर सुन-

यस पद्मकल्पको छब्बीसौँ चौघडीको त्रेतायुगमा म अजनाभ देश अर्थात् अचेलको भारतवर्षमा रहेको कलिङ्ग देशको कलिङ्गाधिपति राजाकी परी जस्ती सुन्दरी रखौटी यवनीबाट जन्मेकी हुनाले रूप र सुन्दरताले शोभिएकी, अनि आफ्ना सुन्दरताका मदले घमण्डिएकी 'परमसुन्दरी' नामकी

किचकन्ने हुन्छन्, ती नदीपारि जाँदैनन् । आफ्नू हड्डीमा रूप धारेर जीवित युवकहरूलाई फसाउँछन् पनि ।➪

वेश्या थिएँ । त्यस कलिङ्ग नगरमा त्यतिखेर म अरू समस्त सुन्दरीहरूको शिरोमणि यानि अग्रणी थिएँ । हे राक्षस ! त्यस जन्ममा मैले आफ्नो तरुनाइमा आफ्ना इच्छा-अनुसारका सारा भोग भोग्नासम्म भोगेँ । मैले आफ्नू यौवनको रूप-रूपी सम्पत्तिले त्यो सारा नगरलाई मुग्ध पारेकी थिएँ । ममा लट्ठिएका धनाढ्य-धनाढ्य युवक-हरूबाट विचित्र-विचित्रका मनग्गे रत्नहरू, नाना प्रकारका गहनाहरू, प्रशस्त धन अनि रङ-बिरङका लुगाहरू तथा कपूर र अगरु-मिश्रित चन्दन आदि यी सबै वस्तुहरू मोहिनीरूप भएकी मैले कमाएकी थिएँ अर्थात् जुटाएकी थिएँ । हे राक्षस ! त्यतिखेर म आफ्नू घरमा कति सुन र कति रत्न छ, त्यसको अन्त जान्दिनथिएँ । किनकि कामले पीडित भएका युवा राजपुत्रहरू र सेठ-साहूका पट्ठा छोराहरू मेरा चरणको सेवा सधैँ गर्थे । मैले आफ्ना नखराले ती सबैको सर्वस्व धुतेँ । कति कामपीडित युवक त आपसमा हानाहान गरेर मरे पनि । त्यतिखेर त्यो अति रामो पूरा नगरमा मेरो त्यस्तै चाल थियो । परन्तु जब मेरो दन्दनाउँदो उमेर ढल्कियो र युवकहरूको ओइरो ओइरिन ओइलाउँदै गयो, तब मेरो मन विरक्तिदै शोच गर्न लाग्यो

कि -

"हरे शिव ! मैले जबानीमा न त सत्पात्रमा दान दिएँ, न मैले कुनै यज्ञ-यागादिमा हवन गरेँ वा गराएँ, न त मैले कुनै मन्त्रको नै अनुष्ठान गरेँ, न त मैले कुनै व्रत नै नियमपूर्वक गरेँ, न त मैले धर्म-अर्थ-काम-मोक्ष दिने भगवान्को आराधना नै गरेँ, न त मैले दुर्गति नाश गर्ने दुर्गा देवीको पूजा नै गरेँ । यो जाबो तुच्छ दुइ दिने चटकमटके नारकीय सुखभोगको उपभोग गर्ने प्रबल लालसाले गर्दा न ता सारा पाप हर्ने विष्णुको नै स्मरण गरेँ या उनको नाम जपेँ, न त ब्राह्मणहरूलाई असल-असल भोजन र प्रशस्त दक्षिणाले तृप्त सन्तुष्ट नै पारेँ, न कुनै प्राणीको कल्याण हुने कार्य नै गरेँ । त्यतिखेर यौवनले दन्किएर मात्तिएको उमेरमा धर्मको कत्ति पनि वास्तै नराखीकन ती-मध्ये यौटा पनि पुण्य काम गर्दैगरिनँ । हे भद्र राक्षस, मैले त्यसरी धेरै पाप गरेँ र अन्तमा गालाका छाला चाउरिन थालेपछि ती पापकर्मले मेरो मन भत्भती पोल्न थाल्यो । तब म असाध्यै पिरिएँ र अत्यन्त चिन्ताग्रस्त भएर कुनै विद्वान् ब्राह्मणका शरणमा गएँ । ती ब्राह्मण देउता गुरुकुलमा बसेर आश्रमको नियम पालेर घन-जटा-सार-स्वरसहित पढ्नुपर्ने

वरिपरि रहन्छन । यी सबै लाखौं वर्षमा पाप हलकिएपछि मात्र आकाशिन्छन ।यस्ता [illegible] जान लाग्ने→

ऋग्वेद-यजुर्वेद-सामवेद-अथर्ववेद यी चारै वेद-का, अनि छः वेदाङ्गशास्त्र अर्थात् पढ्दा अनुशासन सिकाउने शिक्षाशास्त्र, वेदको उच्चारण गर्न सिकाउने कल्पशास्त्र, वेदका शब्द सिद्ध गर्न सिकाउने व्याकरणशास्त्र, ग्रहहरूको गतिविधि सिकाउने ज्योतिषशास्त्र, वेदका शब्दको अर्थ बताउने निरुक्तशास्त्र, वेदको लय सिकाउने छन्दशास्त्र; अनि छः दर्शनशास्त्र अर्थात् ठीक-बेठीक निर्णय गर्न सिकाउने न्यायदर्शन, आत्माबारे बोध गराउने वेदान्तदर्शन, प्रकृति-पुरुषबारे विवेचना गर्ने सांख्यदर्शन, कार्यलाई देखेर कारण पत्ता लाउन सिकाउने वैशेषिकदर्शन, वेदविहित कर्म नै धर्म हो भनी सिद्ध गर्ने पूर्वमीमांसादर्शन, ब्रह्म नै ईश्वर हो भनी प्रतिपादन गर्ने उत्तरमीमांसादर्शन, यी छः दर्शन र चित्तवृत्तिलाई रोकेर चित्तलाई यौटै वस्तुमा अड्याइराख्न सिकाउने योगदर्शनका आठ अङ्ग यानि इन्द्रियका पछि मन नदौडाउनु नै यम, पवित्रतापूर्वक दैनिक सदाचारमा रहनु नै नियम, पद्मासन आदिमा बस्न सिक्नु नै आसन, श्वास-प्रश्वास क्रिया गर्न सिक्नु नै प्राणायाम, इन्द्रियका वेगलाई रोक्नु नै प्रत्याहार, सूर्यको तेजमा मात्रै मनको एकाग्रता हुनु नै ध्यान, सुनेको

ॐ जपी सूर्यका तेजको ध्यान निरन्तर गर्नै गर्नपर्छ।।

कुरो यथार्थ बुझ्नु नै धारणा, प्राणलाई ब्रह्माण्डमा पुऱ्याई उहीँ राखिराखी भएको अविचल स्थिति नै समाधि यी विद्याका ज्ञाता अर्थात् जात्रे तथा गाउँ-बस्तीका विद्यालय-महाविद्यालय-विश्वविद्यालयहरूमा पढाइने व्यावहारिक चौध विद्या र चौषट्ठी कला विद्यामा पारङ्गत, अनि लघुसिद्धान्त कौमुदीको साह्रै उपयोगी गुर्वर्था नामको छर्लङ्ग अर्थ लेखिदिएर संस्कृत पढ्न प्रारम्भ गरेका छात्रहरू र त्यो पढाउने गुरुहरूका श्रद्धापात्र भएका, त्यस्तै; अष्टसिद्धिका ज्ञाता अर्थात् हात्तीलाई भुसुनो बनाउने अणिमासिद्धि, भुसुनोलाई हात्ती बनाउने महिमासिद्धि, मूसोलाई हात्ती जस्तै गह्रौं बनाउने गरिमासिद्धि, हात्तीलाई मूसो जस्तै हलुँ बनाउने लघिमासिद्धि, नपाइने वस्तु पाउन सक्ने प्राप्तिसिद्धि, थोरैलाई धेरै बनाउने प्राकाम्यसिद्धि, स्वयं शासक बन्न सक्ने ईशितासिद्धि र कसैलाई पनि वशमा गराउन सक्ने वशितासिद्धिकन साधनाद्वारा साधेका सिद्ध, अनि मन्त्रले फुकेको पानी आँखामा छ्यापिदिएर रत्नाकर कहिने समुद्रभित्र रहेको महापद्म-पद्म-शंख-मकर-कच्छप-मुकुन्द-कुन्द-नील-खर्ब नामका नवविधि अर्थात् सम्पत्तिका भण्डार देखाइदिने तथा अति शान्त स्वभावका

अत्यन्तै शान्तिप्रिय एवं चित्तको स्थिरता शम, इन्द्रियहरूको निरोध दम, सत्यता तप, शुद्धता शौच, क्षमापन क्षान्ति, मोहरहितता आर्जव, बोधता ज्ञान, विशेष बुद्धि विज्ञान, ईश्वरमा अटल विश्वासता आस्तिक्य, कृपापन दया, सहृदयतापन दाक्षिण्य यी गुण भएका तथा अति सन्तोषी, अरूको उन्नति देखेर रमाउने, कसैलाई पनि उसको कल्याण हुने कुरो मात्र कहने, मान-अपमानमा समान रहने; मानिसले आकाशमा उड्न सिक्यो, पानीमा बुड्न सिक्यो, भुइँमा गुड्न सिक्यो, तर मानिस-मानिसको परस्परमा कस्तो सद्व्यवहार हुनुपर्छ भन्ने कुरो सिक्न सकेन भनी पिरिइरहने; किन्तु भूमिबाट जलबाट पैदा गरिएको  हुनाले भूमिपुत्र भौमासुर कहिने जसलाई भस्मासुर पनि भन्दछन् त्यस्तो, जसले आफ्नै आमा पृथ्वीलाई खोक्र्याएर उसको सन्तुलन बिगारी परिणाममा विध्वंसरूपी प्रलय गराउँछ, जसको चहल-पहलले केही दिनको क्षणिक सुख दिलाए पनि समस्त जनताको शान्ति, हित र आनन्द हर्दछ, त्यस्तो दानवी भौतिक विद्यालाई पटक्कै मन नपराउने तथा छः वेदाङ्ग अर्थात् शिक्षा-कल्प-व्याकरण-निरुक्त-ज्योतिष-छन्द; अनि षट् दर्शन अर्थात् न्याय-वेदान्त-सांख्य-

वैशेषिक-पूर्वमीमांसा-उत्तरमीमांसा; अनि चार वेद अर्थात् ऋग्वेद-यजुर्वेद-सामवेद-अथर्ववेद; एवं योग र योगका आठ अङ्ग अर्थात् यम-नियम-आसन-प्राणायाम-प्रत्याहार-ध्यान-धारणा-समाधिका शिक्षक; तथा ब्राह्मणवर्गले सिद्ध पारेका वेदका मन्त्रका प्रभावले मात्रै चुमुक्याउन सकिने, अरू कुनै शक्तिले पनि नजितिने अजेय दानवहरू र जल वा थलले सूर्यबाटै संग्रह गरेर आफूभित्र धारण गरेको वडवाग्नि नामको बिजुलीलाई प्रयोगमा ल्याई कतिपय काममा जोताई पैसा कमाउने तथा विध्वंसकारी बाटोमा लम्कने दानवी शक्ति-कारहरूलाई र तिनका उत्पादित शक्तिलाई निरन्तर ध्रुव ताराको दृष्टि परिरहने हुनाले आर्यावर्त कहिने आफ्नू पुण्यभूमि हिमालय र विन्ध्याचलको बीचको भूमिमा र त्यस भूमिमाथिको पूरै आकाशमा ढिम्कनै नदिने तथा आफ्ना पुर्खाले आफ्ना उत्तराधिकारी सन्तान ब्राह्मणवर्गलाई मात्र ती मन्त्र सिद्ध गर्ने शक्ति थाती छोडेर गएका वेदका मन्त्रहरूलाई सिद्ध पार्न आफ्ना शिष्यहरूलाई उक्साइरहने; अनि तिनको बुद्धि तिखार्नलाई गायत्रीजपको महिमा बताइरहने फेरि पृथ्वी-जल-तेज-वायु-आकाशको सामूहिक शक्तिसमूह नै ब्रह्मा हो भन्ने जानिराख्न

सधैँ पाञ्चायनको पूजा गर्न लाउने, सूर्य उत्तरायण हुँदा एक सय आठ मिनेट दिन बढ्छ र सुमेरुमा पुगी दुइ-चार दिन उसलाई परिक्रमा गरी सूर्य दक्षिणायन हुँदा एक सय आठ मिनेट नै दिनमान घट्तछ भन्ने स्मृतिबोधका लागि एक सय आठ दानाको रुद्राक्षको वा अरू कुनै मालामा गायत्रीजप गर्न लाउने, अनि मैले भनेका यी कुरा नमानेर सूर्य उदाउँदा भाग्ने, सूर्य अस्ताउँदा जाग्ने अन्धकार झैँ जागेको दानवी विलासिताको चमकदमकमा लट्ठिई वेद पढ्न एवं उसका मन्त्र सिद्ध पार्न छाड्यौ र उसको लर्को लायौ भने कल्पान्तैसम्म ती दानवहरूको दास बनी अनि सारा आर्यावर्तका जनतालाई पराधीन पारी उनका अप्रत्यक्ष दास बनाई ती दानवका डरले निरन्तर थर-थर, थर-थर काम्दै उनका वशमा रहनुपर्ला भनी बारम्बार सम्झाइरहने, यदि तिमीहरूले आफ्नू ब्राह्मणत्वको 'त्रिकालदर्शी जगतै कँपाउने' शक्तिलाई थामिराख्न सक्यौ भने कुनै पनि अरू शक्तिले तिमीहरूलाई क्यै नाप्न सक्तैन, न त शोषकहरूले शोषण नै गर्न सक्छन्, न त शोषण गर्ने आवश्यकता नै पर्छ। बाहिरी प्रबल शक्तिको डर नभएपछि शासक-हरू पनि ढुक्कसँग शासन गर्छन्, बाबू हो! जब

ब्राह्मणवर्गले आफ्नू धर्म छाड्दछ तब देश भाँडिन्छ, जबसम्म ब्राह्मणवर्गले आफ्नू धर्म थामिराख्छ तबसम्म देशमा सुख-शान्ति बनिरहन्छ भनी आफ्ना शिष्यहरूलाई सम्झाइ-बुझाइरहने ती राजनीतिका खग्गू, धर्मशास्त्रका खप्पिस, अनि तन्त्र-मन्त्र-जन्त्र, टुना-टोड्का, जादू-चटक, झार-फूक, धामी-झाँक्री, ओखती-मूलो गर्नमा निपुण अर्थात् गणेशजीको मन्त्र विधिपूर्वक जपी सिद्ध पारी सिद्धि प्राप्त गरेकाले सदा कल्याणकारी सकल भारतीय अध्यात्मविद्यामा धुरन्धर किन्तु प्रारम्भमा सुखकारी भए पनि परिणाममा जगत् विध्वंसकारी विकसित भौतिक विज्ञानका कट्टर विरोधी तथा सधैँ जल-थल-नभमै शान्ति नै शान्ति चाहिने एकदेव उपाध्याय नाम गरेका ती नैष्ठिक ब्राह्मण त्यसै राज्यका राजा अर्थात् मेरै बाबुका राजगुरु थिए ।

हे राक्षस ! मैले उनै ब्राह्मणलाई श्रद्धाभक्तिका साथ उनका पाउमा फल-फूल-दक्षिणा चढाएर निकै बेर ढोगेँ र उनले इशाराले देखाएर अनुमति दिएका आसनमा दुवै घुँडा मारेर बसी हात जोड्दै गहभरि आँसु डबडबाउँदै आफ्ना सारा पापकर्मको वृत्तान्त बताएर, आफ्नू पश्चात्तापरूपी तड्पन सुनाएर

- 'हे ब्राह्मण देवता ! मेरो त्यो उग्रपापको प्रायश्चित्त कसरी होला ? भनेर सोधेँ र हे द्विजश्रेष्ठ ! त्यो पापबाट म कसरी सद्गतिमा प्राप्त हुँली ? आफ्नै कुकर्मले पिरिएर तड्पिरहेकी, उदास मन भएकी बिचरी, गहिरो पापरूपी भासमा ग्वाम्मै भासिएकी मलाई मेरो जगल्टामा समातेर यस भासबाट बाहिर निकालिदिनोस् । हे ब्राह्मणश्रेष्ठ ! दयाका दृष्टिले मेरा उपर करुणाका जल वर्षाउनोस् । किनकि सज्जनमा त सबै जना कृपालु नै हुन्छन्, किन्तु साधुहरू असज्जनमा पनि कृपालु हुन्छन् ।' मेरो यस्तो विनम्र प्रार्थना सुनेर ती दयालु ब्राह्मणले मेरा उपर कृपा गर्नुभयो र सबै धर्मले भरिएको तथा मलाई अति प्रसन्न पार्ने यस्तो कुरो भन्नुभयो-

हे सुन्दरी ! तिम्रा सबै निषिद्ध घृणित आचरण-हरूलाई म भलीभाँति जान्दछु । मैले भनेको कुरो झट्टै गर । अब तुरुन्तै तिमी प्रजापति ब्रह्माको क्षेत्र प्रयागमा जाऊ, उहाँ गएर, त्यहीँ रहेर सधैँ गङ्गा-यमुना-सरस्वती नदीको सङ्गम त्रिवेणीमा न्वाहुने गर, विशेष गरेर मकर राशिमा सूर्य रहेको वेला त्रिकाल स्नान गर्ने गर । त्यसै स्नानको पुण्यफलले तिम्रो सबै पाप नाश हुन्छ । किनकि जसले तिम्रो पाप नाश होस्, त्यस्तो अर्को उपाय

म देखिनँ । तीर्थमा गर्ने गरेको स्नानलाई ऋषि-हरूले ठूलो प्रायश्चित्त बताएका छन् । किन्तु हे सुन्दरी, तीर्थस्थलमा मनले पनि अशुभ कर्मलाई-त्यागिदिनुपर्छ ।

हे सुमुखि ! नित्यको प्रयागस्नानले पाप खारिएर शुद्ध पवित्र भएकी तिमी मरेपछि पक्कै नै स्वर्ग जानेछ्यौ । प्रयागराजको सङ्गमको स्नान मात्रैले पनि मनुष्यहरूलाई स्वर्ग प्राप्त हुन्छ, यसमा कुनै संशय छैन । हे सुन्दरी ! प्रयागराज तीर्थमा गरिएको पापलाई छोडेर अरू ठाउँमा गरिएको सारा पाप प्रयागको त्रिवेणीमा न्वाहुनाले तुरुन्तै त्यसै क्षणमा नै बिलाउँछ अर्थात् नाश हुन्छ । हे सुन्दरी ! यस बारेमा यौटा अचम्मको उपाख्यान सुन - ।

उहिले कुनै समयमा गौतम मुनिकी पत्नीलाई देखेर कामरूप शत्रुको वशमा परेको गुप्तकामुक इन्द्रले गौतमकै रूप धारेर उनलाई सुटुक्क भोग गरे । तब ऋषिपत्नी गमन गर्ने इन्द्रलाई उस स्त्रीकै सामने त्यस उग्र पापले उत्लिखेरै फल दिलायो । तब त्यस स्त्रीका पतिको सरापको शक्तिले इन्द्र-को शरीर हजार योनिले चिह्नित भएको कुरूप, निन्दित, लाजमर्नुको हुँदो भयो । तब मुन्टो निहुराएर

देवराज इन्द्र त्यहाँबाट निस्किए, अनि चारैतिर तिरस्कृत, निन्दित उनले आफूले गरेको त्यो घृणित कर्मलाई निन्दा गर्न थाले र मेरु पर्वतको टाकुरोमा रहेको, सय योजन अर्थात् चार सय कोश फराकिलो, पानी-पानीले टम्म भरिएको, राता चुच्चा हुने सेता-न-सेता बड़े-बड़े रजहाँसहरूले शोभिएको, कन्याङकुरुङका लामले तोरणिएको, रङबिरङका कमलका फूलहरू फक्रिएको, विशाल तलाउको हिमजलमा उम्रिएको कमलको कोपिलामा लुकेर बसे । त्यसै कमलमा बसेर आफूलाई तथा आफ्नै शरीरमा रहेको महान् शत्रु कामदेवलाई निन्दा गर्न थाले । जुन कामले मुन्ट्याइँदा ठूला जन पनि लोकमा निन्दित भएर आखिरमा नरकमा जाकिन्छन् । कामचेष्टाले उत्पन्न भएको त्यो पापवासना जो छ, सो आयु-कीर्ति-यश-धर्म तथा धैर्यलाई सत्यानाश पारिदिन्छ । अनेक आपत्तिहरूको निश्चित स्थान भएको त्यो दुराचारी कामदेवलाई धिक्कार छ । आफ्नै देहमा रहेको, कहिल्यै वशमा नरहने, कहिल्यै सन्तुष्ट नहुने, कहिल्यै नअघाउने, अति असन्तोषी, प्राणीमात्रको विकट शत्रु कामदेवलाई धिक्कार छ । हे सुन्दरी ! यस्ता प्रकारले कमलरूपी सदन यानि घरमा लुकेर

बसेका इन्द्रले सोचिरहेको वेलामा, उता स्वर्गमा इन्द्र नभएर स्वर्गको शोभा नै रहेन र त्यसपछि गन्धर्वसहित, लोकपालसहित, किन्नरहरूसहित देवताहरू शची इन्द्राणीका साथमा आएर सबैले देवगुरु बृहस्पतिलाई सोधे,- 'हे भगवन्! हामीहरू देवताका राजा इन्द्रका बारेमा पटक्कै क्यै जान्दैजान्दैनौं, उहाँ कहाँ रहनुभएको छ? कहाँ जानुभयो? अब हामीहरू आफ्ना राजालाई कहाँ खोजौं? जसरी घरमा सुपुत्र नभए धनधान्य र गुणैगुणले भरिएको पनि कुलको शोभा हुँदैन, त्यसै गरी देवगणका साथमा इन्द्र नभैकन स्वर्ग शोभिएको छैन। हे गुरो! जे गर्दा स्वर्गलोकको शोभा बढ्छ, चाँडै नै त्यस्तो उपाय गरिबक्सियोस्। हे गुरो! स्वर्गलाई शोभाले युक्त स्वामी भएको पारिबक्सियोस्। यस काममा ढीलो गर्नु योग्य छैन' भन्ने तिनीहरूको कुरो सुनेर गुरु बृहस्पतिले उनीहरूलाई भन्नुभयो- आफूले गरेका अपराधको लाजले लज्जित भएर इन्द्र जहाँ बसेका छन्, त्यो कुरो म जान्दछु। बेविचारले सहसा गरेका कामको फल अहिले इन्द्र भोगिरहेका छन्। जो जनले नीतिको त्याग गर्दछन्, ती जनले बड़े-बड़े दुःखको भोग भोग्नुपर्दछ। आश्चर्य छ कि राज्यको

मदले उन्मत्त भएको पुरुष गर्ने-नगर्ने कामको विचारै गर्दैनन् । आफूलाई नै नाश गर्नेवाला अनेक प्रत्यक्ष वा अप्रत्यक्ष निन्दित काम गर्दछन् । दुर्भाग्यले बुद्धि मासिएका मूर्खहरू मात्रै यस्तो निन्दित काम गर्दछन् । जुन अपराध गर्नाले यहाँ पनि उहाँ पनि जन्म निष्फल हुन्छ । हे सुरगण हो ! अब हामी त्यहाँ जाऔँ, जहाँ ती इन्द्र लुकेर बसेका छन् ।

गुरु बृहस्पतिले यस्तो भनेपछि बृहस्पतिलाई नै अगि लाएर गएका सबै देवताहरू त्यस आश्रमबाट निक्लेर उस तलाउमा पुगेपछि त्यो फराक सरोवरमा सुन जस्ता सुन्दर कमलको वन देखे । अनि डिलमा उभिएर जस्तो प्रार्थना गर्दा इन्द्रलाई विश्वास पर्छ त्यस्तै-त्यस्तै स्तुति गरे । तब गुरुको बुझाइले इन्द्र कमलकोसबाट बाहिर निक्ले । त्यतिखेर उनको मुख निन्याउरो मलिन थियो, शरीर विरूप थियो, लाजका म्मारे उनका आँखा निहुरेका थिए । अनि इन्द्रले ती आफूभन्दा जेठा गुरुको दुवै पाउ पक्रेर - 'हे गुरो ! मलाई रक्षा गर्नुहोस्, यस पापको नाश हुने अर्थात् यस पापबाट पार पाउने उपाय बताइबक्सिस्' भनी बिन्ती गरे ।

तब देवराज इन्द्रको यस्तो विनम्र वचन सुनेर

गुरु ब्राह्मण बृहस्पतिले भन्नुभयो- 'हे देवेन्द्र ! यस पापको नाश हुने उपाय म बताउँछु, सुन- यदि प्रयागमा गएर गङ्गा-यमुना-सरस्वतीको सङ्गमस्थल त्रिवेणीमा झ्वाम-झ्वाम एक सय आठ डुबुल्की मार्‍यामार्‍यै गरेर माघे औंसीका दिन नुहायौ भने मात्र पनि त्यसै क्षणमा तुरुन्तै यस पापबाट तिमी छुट्तछौ, हे देवराज ! हिड, तिम्रा साथैमा सबै उहाँ जाऔँ' भन्ने आफ्ना गुरुको आज्ञा सुनेपछि आफ्ना गुरु र आएका देवगणका साथै इन्द्र आकाशमार्गले माघे औंसीका दिन प्रयागमा पुगे, अनि गङ्गा-यमुना-सरस्वतीको सङ्गमस्थल त्रिवेणीमा एक सय आठ डुबुल्की लाएर न्वाहे त तब तुरुन्तै उनी आफ्ना पापहरूबाट मुक्त भए यानि छुटे । अनि अत्यन्त प्रसन्न भएका देवगुरुले उनलाई वर दिनुभयो- 'हे निष्पाप इन्द्र ! प्रयागमा कुम्भस्नान मात्र गर्नाले तिम्रो पाप नाश भयो । हे इन्द्र ! अब सब पाप नाशिएका तिम्रा यी हजार योनिका बदला मेरो कृपाले अहिल्यै तिम्रा हजार दिव्यदृष्टि होऊन्' भनेर वर दिनुभयो त त्यति नै खेर ब्राह्मणका वरले शचीपति इन्द्र पनि जसरी मानसरोवर हजारौँ कमलले शोभिएको छ, त्यसै गरी अरूले नदेखिने दिव्य हजार आँखाले शोभिए । त्यसपछि सबै

देवताहरूले र ऋषिहरूले पूजिएका तथा गन्धर्व-हरूले स्तुति-गान गरिएका छँदा ती इन्द्र आफ्नू अमरावती नगरीमा गए। हे सुन्दरी! त्यस्ता प्रकार-ले प्रयागको त्रिवेणीमा माघे औंसीमा न्वाहुनाले त्यस्तो पापी इन्द्र तुरुन्तै पाप सखाप भएका भए।

त्यसकारण, हे कल्याणी! आफ्नो उग्र पाप नाश गर्न चाहने हे सुन्दरी! अब तिमी तुरुन्तै आफ्नो समस्त पापको विनाश गर्नका लागि तथा अचल स्वर्ग वा कैलास-वास प्राप्तिका लागि त्यो द्यौताहरूले पनि सेवा गरिएको प्रयागको त्रिवेणीको सङ्गममा जाऊ र आज पौषशुक्ल एकादशी हो, आजको पाँच दिनमा पौषशुक्ल पूर्णिमा आउँछ, त्यस दिनदेखि नै प्रातःक्रिया सकी, हात-गोडाका नङ काटी, त्रिवेणीमा न्वाहीध्वाई, शुद्ध-पवित्र भई, हविष्य वस्तु मात्र दिनहुँ एक-छाक खाई, त्यहाँका तीर्थपुरोहितलाई सोधी उनले भने वा अह्राएबमोजिम गरी नियमपूर्वक त्रिवेणीमा त्रिकाल स्नान गरी सौभाग्य दिने, सौभाग्य बढाउने, पाप सखाप गराउने, स्वर्गवास दिलाउने स्वस्थानी देवीको व्रत बसी माघशुक्ल पूर्णिमाका दिन देवीको उद्यापन पूजा सक्के गरी, उसै बीचमा नै मकर राशिमा सूर्य सरेको दिन परे माघे संक्रान्तिदेखि

फागुनसंक्रान्ति नलागेसम्मका दिनहरूमा त्रिवेणीमा माघस्नान अर्थात् मकरस्नान श्रद्धाभक्तिपूर्वक 'ॐ नमो भगवते वासुदेवाय' यो मन्त्र जप्तै गर्ने गर त स्वस्थानी देवीको कृपाले र प्रयागको त्रिवेणीमा माघभरि मकरस्नान गरेको पुण्यले तिम्रो सारा पाप नाश हुनेछ र निष्पाप भएकी तिमीले अन्तमा सदाका लागि कैलासवास वा स्वर्गवास पाउनेछौ भन्ने यस्तो; त्यो इन्द्रको वृत्तान्त-सहितको मङ्गल-कारी वचन ती ब्राह्मणको मुखबाट सुनेर मैले उत्तिनै खेरि हतारिदै उनका गोडामा ढोगेर, आफ्ना सबै बन्धुजनलाई, दास-दासीलाई अनि ऐश्वर्यशाली आफ्नू घरलाई, त्यति मात्रै होइन, हे राक्षस ! सकल भौतिक भोगका विषयलाई प्रत्यक्ष विषको गाँस जस्तै ठानी चटक्क त्यागेर अनि आफ्नू शरीरलाई पनि क्षणभंगुर अर्थात् केही दिनपछि नै अवश्य नाश हुने ठान्दी छँदी म ती ब्राह्मणको घरबाट फुत्त निस्किएँ र नरकरूपी समुद्रमा जाकिने भयङ्कर अन्तस्करणको आगाले हृदयमा भत्भती पोलिएकी मैले, हे राक्षस ! तब त्यहींबाट सरा-सर प्रयागमा गएर ब्राह्मणले बताए- जस्तै गरी श्रीस्वस्थानी देवीको व्रत-पूजा र माघभरि नै त्रिकाल अर्थात् बिहान-मध्याह्न-साँझ नियमपूर्वक गङ्गा-

यमुना-सरस्वतीको सङ्गमस्थल त्रिवेणीको जलमा श्रद्धासाथ पटकैपिच्छे 'ॐ नमो भगवते वासुदेवाय' जप्तै एक सय आठ डुबुल्की मारेर मकरस्नान गर्ने गरेँ ।

अब हे बूढा राक्षस ! त्यस त्रिवेणीमा गरेको मकरस्नानको महिमा सुन - तीन दिन त्यहाँ लगालग मकरस्नान गरेपछि मेरो समस्त पाप नाश भयो, बाँकी सत्ताईस दिनको माघस्नानले मलाई जो पुण्य प्राप्त भो, त्यस पुण्यले मलाई देवयोनिमा जन्मायो । यतिखेर म देवी पार्वतीकी अति प्यारी सँगिनी भएर कैलासमा रमाउँदै बसेकी छु । त्यसै प्रयागको मकरस्नानको प्रभावले नै मलाई यस्तो यो पूर्वजन्मको जातिस्मरण ज्ञान, इच्छा-अनुसारको रूप बदल्न सक्ने शक्ति, यो खेचरी यानि आकाशमा उड्ने र उहीँ अड्ने गति, राजगुरुमा भएको विविध विद्याको ज्ञान र यो कैलासको वास प्राप्त भएको हो । त्यसैले प्रयागको मकर-स्नानको महिमा सम्झेर प्रत्येक माघमा प्रयागमा मकरस्नान गर्न म प्रयाग जाने गरेकी छु । अब कैलास पुगेर पार्वतीका साथै स्वस्थानी देवीको पूजा गर्छु । हे राक्षस, मैले मात्रै होइन, जसले पनि मैले जस्तै गरी त्रिवेणीकै तटमा बसेर स्वस्थानी

देवीको व्रत-पूजा र मकरस्नान गर्दछन्, ती सबैले पनि स्वर्गलोक वा कैलासलोकको वास पाउँछन् ।

यति आफ्नू पूर्वचरित्रको वृत्तान्त बखानेर फेरि काञ्चनमालिनीले - 'हे राक्षस, आश्चर्यचकित भएका तिमीले मलाई जो सोध्यौ, त्यो मैले तिम्रो प्रसन्नताका लागि आफ्ना घटेका सबै घटना सुनाएँ । अब तिमी पनि मेरो प्रसन्नताका लागि आफ्नो पूर्वचरित्र बताऊ । कुन कर्मले तिमी अति विरूप र अत्यन्त डरलाग्दा भएर जन्मिएका छौ ? दाह्री-जुँघा बढाएका, बड़ा-बड़ा दाह्रा भएका, मान्छेको मासु खाने भएर किन यो पहाडको गुफामा रहन्छौ ? भनेर सोधिन् त तब त्यो राक्षस भन्न थाल्यो -

सज्जन जन प्रिय वस्तु दिन्छन् र गुह्य कुरो लिन्छन्, प्रेमपूर्वक बोल्छन् र सोध्दछन् । हे भद्रे ! हे कल्याणी ! पराईको कल्याण गर्नेवाली ! ती सबै कुरा तिमीमा रहेका छन्, हे वामलोचने सुन्दरी ! तिमीले मलाई निश्चय नै कृपा गर्‍यौ, यो कुरो म मान्दछु । हे भद्रे ! हे कल्याणकारिणी ! मेरो यो क्रूर कर्मको निवारण तिमीबाट नै चाँडै हुन्छ । यसकारण, मैले जो स्वयं पाप गरेको छु, अब त्यो सब तिमीलाई म सुनाउँछु । सज्जनलाई दुःख निवेदन गरेपछि तब सबै सुखी हुन्छन् । हे

पातलो कम्मरवाली सुन्दरी ! अब मेरो वृत्तान्त सुन -

पहिलेको जन्ममा म काशीमा वेदका धेरै ऋचाहरू जान्ने, वेदविद्यामा पारङ्गत श्रेष्ठ ब्राह्मण थिएँ, ठूलो निर्मल कुलमा मेरो जन्म भएको थियो । हे सुन्दरी ! त्यतिखेर मैले दुराचारी राजाहरूले, शूद्रहरूले, अनि वैश्यहरूले गरेका डरलाग्दा डरलाग्दा निन्दित दानका वस्तुहरू पनि काशीमा बसेर दान लिएँ । प्रायः गरेर धेरैपल्ट धेरै नै निषेध गरिएका घृणित दान पनि लिएँ, अनि चाण्डालहरूले गरेको कुत्सित दान पनि मैले लिन पछि सरिनँ । यहाँसम्म कि किसानहरूले बजारमा किन्नैपर्ने, तर पसलेले एक सयमा किनेको वस्तुलाई करैकरको भारी बोकाएर तीन सयमा किसानलाई बेच्ने, अनि किसानले उब्जाएको खाद्यान्न वा खाद्यवस्तु किन्दा चाहिँ सुख्खी-घट्ती-ढुलाई-कोठी-कुसीद-नगर-प्रवेश कर कटाई एक सयको उसको माललाई साठीमा किनिलिई समस्त किसानलाई किङ्कर्त्त्याई 'उत्तम खेती, मध्यम व्यापार, अधम चाकरी' भन्ने बृहस्पतिको नीतिलाई पर्लक्क पल्टाई 'उत्तम चाकरी, मध्यम व्यापार, अधम खेती' बनाउने शुक्राचार्यको नीतिलाई अँगालेर

किसानहरूलाई हलनटट्टू बनाउने अनि साधु-सज्जनहरूलाई सताउने तत्कालीन हुल्लडबाज हुल्याहाहरूको पार्टीवादी सरकारको पार्टीशासकले धाक देखाउन गरिएको त्यो किसान शोषिएको, पापैपापले मुछिएको द्रव्य दान लिन पनि पछि परिनँ र दान लिएर पनि फुर्किन छोडिनँ तथा अरू-अरू पनि म लोभीले त्यहाँ कति हो कति अनेक पाप गरेँ । जहाँ मैले जो नगरेको पाप कर्म छ, त्यो छैन होला । हे सुन्दरी ! मैले त्यस पुण्यक्षेत्रमा गरेका अरू पापकर्म पनि सुन । त्यस अविमुक्त वाराणसी अर्थात् वरुणा र असी नदीको बीचको क्षेत्रमा गरिएको एक रत्ती पनि जो पाप छ, त्यो पाप त मेरु पर्वत समान ठूलो हुन्छ । मैले उस जन्ममा कत्ति पनि धर्मको सञ्चय गरिनँ । हे सुन्दरी ! तब त्यसरी त्यहाँ धेरै समय बितेपछि म उहीँ नै मरेँ । अविमुक्त वाराणसीको प्रभावले म नरकमा गइनँ । अविमुक्त क्षेत्रमा मरेको कोही पनि पापी नरकमा जाँदैन । किन्तु अविमुक्त क्षेत्रमा गरिएको कुनै पनि पाप वज्रसमान दृढ रही ननाशिने हुन्छ । त्यसै वज्रलेप पापको प्रभावले हिमालय पर्वतमा भयानक, अतिशय दुष्ट पापी राक्षस भएर मेरो जन्म भएको हो ।

यो-भन्दा पहिले दुईपल्ट गिद्ध, तीनपल्ट बाघ, दुईपल्ट सर्प, एकपल्ट लाटोकोसेरो भएर जन्मिएको थिएँ, त्यसपछि नवौँपल्ट सुँगुर पनि भएँ । हे भामिनी ! हे सुन्दरी ! मेरो यो राक्षसको जन्म दशवाँ जन्म हो । नाना प्रकारका योनिमा जन्मदा-जन्मदै मेरा हजारौँ वर्ष बितिसके । हे भद्रे ! हे कल्याणकारिणी ! यो दुःख-समुद्रबाट मेरो उद्धार हुने उपाय छैन । हे सुभ्रू ! सुन्दर आँखिभुइँवाली ! यहाँ वरिपरि तीन योजन अर्थात् बाह्र कोशसम्मको भूमि मैले जन्तुहीन गराइसकेको छु । हे सुभ्रू ! मैले धेरै नै निरपराधी जीवहरूको पनि नाश गरेको छु । त्यस दुष्कर्मले मेरो मन निरन्तर जलिरहन्छ । तिम्रो यो दर्शनरूपी अमृतले सेचिएको मेरो मन अहिले एकदम शीतल भएको छ । तीर्थहरूको शुभफल ता कुनै समयमा गएर फल्छ, तर सज्जनको समागम अर्थात् भेट ता तुरुन्तै फल्छ । हे सुभ्रू ! यसैउसले बुद्धिमान् हरू सत्संग-तिको प्रशंसा गर्दछन् । मेरो मनमा भएको यो सबै आफ्नू दुःख मैले तिमीलाई बताएँ । हे सुभ्रू ! यस्तो कोही बिरलाकोटि नै सज्जन होला, जस-लाई अरूको दुःख सुनेर आफ्नू अन्तरात्मा खिन्न नहोस् । यस बारेमा उचित कुरो तिमी स्वयं

जान्दछ्यौ । त्यसैकारण, अब यसभन्दा परतिर म केही भन्दिनँ । म हरहमेशा यस दुःख-सागरबाट कसरी पार पाउँछु भन्ने कुरो सोचिरहन्छु । सज्जन-हरूको समागम सबैको उपकार गर्ने हुन्छ । के, क्षीरसमुद्र केवल हाँसलाई मात्र दूध दिन्छ र ? के, बकुल्लालाई दिदैन ?

तब कुमारजीले भन्नुभयो - 'हे अगस्त्य मुनि ! त्यस राक्षसको त्यस्ता वचन सुनेर दयाले हृदय पग्लिएकी काञ्चनमालिनीले धर्मदानमा मति गरेर अर्थात् धर्म दिने विचारले भनी - 'हे राक्षस ! तिमीलाई म अवश्य उद्धार गर्नेछु, अहिले तिमी शोच नगर । तिम्रो राक्षसत्वबाट छुट्कारका लागि म प्रयत्न गर्नेछु ।' यस्तो दृढ प्रतिज्ञा गरेर भन्न थाली - 'मैले वर्षेनि विधिपूर्वक धेरै माघस्नान र स्वस्थानीको व्रत-पूजा गरेकी छु । हे भद्र राक्षस, यो सब मैले गङ्गा-यमुना-सरस्वतीको सङ्गम ब्रह्मक्षेत्रमा मकरस्नान र कैलासमै श्रद्धापूर्वक स्वस्थानीको पूजा जो गर्ने गरेकी छु, त्यसको त्यो पुण्य-संख्या र ती दुवै सत्कर्मका धर्मको म वर्णन गर्दछु । जस्तै; विद्वान् जनहरूले धर्मको आचरण गुप्त राख्नू भनेका छन् । वेद जान्ने मुनिहरू दुःखीलाई दान दिने कामको प्रशंसा

गर्दछन् । हे भद्र भलाद्मी ! समुद्रमा वर्षने मेघको के फल हुन्छ र ! हे राक्षस ! मैले स्वयं त्यस पुण्यको फल अनुभव गरिसकेकी छु । हे मित्र ! तुरुन्तै तिम्रो पाप विनाश गर्नका लागि मेरो त्यो पुण्यबाट केही पुण्य तिमीलाई दिन्छु' भनेर अनि आफ्नो चिसो लुगा निचोरेर, तब त्यो जल आफ्नू पसरमा लिएर उसले त्यो बूढो राक्षसलाई आफूले गरेका तीनोटा माघमहीनाको पुण्य दिदिभई । हे अगस्त्य मुनि ! स्वस्थानीको पुण्य मिसिएको त्यसको त्यो माघस्नानको धर्मबाट पैदा भएको त्यस पुण्यको प्रभाव सुन -

त्यो पुण्य पाएर उसै वेला उसले राक्षसी शरीर त्याग्यो र सूर्य जस्तो तेजिलो देवताको आकारको भयो । हर्षले उसका आँखा खिले, द्यौताहरूले ल्याएको विमानमा चढ्यो, त्यतिखेर आकाशमा स्थित विमानमा उसको तेज चम्कियो । तब आफ्ना प्रभाले दशै दिशालाई प्रकाशमान पार्दै दिव्य देह धारण गरेको त्यो राक्षसले तब मानों दोस्रो सूर्य-समानको शोभा पायो । त्यसपछि उसले त्यो सज्जन काञ्चनमालिनीलाई प्रशंसा गर्दो भयो र भन्यो - 'हे भद्रे ! हे कल्याणी ! कर्मको फल दिनेवाला जो भगवान् ईश्वर छ, त्यो सबै कुरो

जान्दछ । जहाँ जुन पापले मेरो उद्धार हुनै सक्तैनथ्यो, ती सब पापबाट तिमीले मेरो निस्तार गरिदियौ । हे देवि ! अब पनि कृपापूर्वक मेरा उपर प्रसन्न हुनुहोस्, दया गर्नुहोस् र सारा नीति नै नीतिले भरिएको कल्याणकारी शिक्षा मलाई दिनुहोस् । त्यो तिम्रो सबै शिक्षा निश्चय नै धर्मको आचरण गराउनेवाला हुनुपर्छ, जुन गर्नाले फेरि म पाप गर्ने पापी नहूँ । त्यो त्यस्तो नीति सुनेपछि, तिम्रो आज्ञा पाएर अनि मात्र म सुरलोक जान्छु ।

हे अगस्त्य मुनि ! त्यो राक्षसले भनेको प्रिय धर्ममय यस्तो वचन सुनेर अत्यन्त प्रीतिपूर्वक त्यो काञ्चनमालिनी उसलाई धर्मनीति सुनाउन थाली- 'हे दिव्य देहमा परिवर्तन भएका राक्षस ! अब तिमी हमेशा धर्मको सेवन गर, प्राणिहिंसा त्याग, महात्माहरूको सेवा गर, कामदेवरूप प्रबल शत्रुलाई जित, अर्काको दोष-गुणको चर्चा पटक्कै गर्न छाडेर साँचो बोल्ने गर, हरिको या हरको हरदिन पूजा गर्ने गर । लौ अब सरासर देवलोक जाऊ । पछि मर्त्यलोकमा जन्म लिएपछि पनि हड्डी-मासु-रगत भरिएको त्यो शरीरमा हिरिक्क हुने आफ्नू बुद्धि तिमी त्याग । हमेशै स्वास्नी-छोरा-छोरीमाथिको हिरिक्क हुने माया-ममतामा

मात्रै नलागी रातदिन यस संसारलाई क्षणभंगुर ठान, इच्छाशक्ति प्राप्त गराउन सक्ने योगमा श्रद्धा बढाएर, त्यसैमा मात्रै तन-मन लगाएर वैराग्य अर्थात् निःस्पृह भावमा रमाउने होऊ ।

मैले यो धर्मको मार्ग तिम्रो प्रीतिले भनेकी हुँ । सबै कुरो मनमा राख र शील-स्वभावका होऊ । राक्षसी शरीरलाई त्यागेर देउताको रूप धारण गरी, चम्किलो भई विमानमा बसेका तिमी अब झट्टै सुखपूर्वक सरासर स्वर्गमा जाऊ ।'

यति धर्मनीति सुनिसकेर तब सन्तुष्ट देखिएको त्यो राक्षस बोल्यो- नित्यै तिमी प्रसन्नतापूर्वक रहे । तिम्रो सधैँ कल्याण होस् । हे वरवर्णिनी सुन्दरी ! चन्द्र-सूर्य रहेसम्म तिमी कैलासमा नै महादेव शिवका नजीक रमाइरहू । अनि पार्वतीजीका साथ तिम्रो सदा अटूट प्रेम रहोस् । हे माता ! तपाईँ सदा धर्ममा श्रद्धावाली, तपस्यामा निष्ठा-वाली हुनुहोस् । शरीरमा लोभ र ममत्व तिम्रो नरहोस् । दुःखीहरूको दुःखलाई सधैँ हेर्ने विचार्ने गरिबक्सियोस् ।

यति भनेर, अनि ती सज्जन काञ्चनमालिनी-लाई ढोगेर, त्यतिखेर द्यौता जस्तै भएको त्यो राक्षस, धेरै गन्धर्वहरूले स्तुति गरिदै सरासर

स्वर्ग जाँदो भयो । तब त्यतिखेर त्यहाँ अक्षोदमा स्वस्थानीको नित्य-पूजा गर्न आएका देवकन्याहरूले त्यो तमाशा देखेर हर्षले गद्गद भएका छँदा, त्यहाँ आएर त्यस काञ्चनमालिनीको शिरमा फूलको वृष्टि वर्षाए । त्यसपछि उसलाई अँगालो हालेर ती कन्याहरूले- 'हे भद्रे ! तिमीले त्यस राक्षसलाई विचित्र तरीकाले पापबाट छुटायौ' भन्ने प्रिय वचन भन्दा भए । त्यस दुष्टका भयले कोही पनि यस जङ्गलमा पस्न सक्तैनथ्यो । अब हामी निर्भय भएर यस जङ्गलमा सुखपूर्वक डुलफिर गर्छौं भन्दै ती देवकन्याहरू आफ्नू नित्यपूजा सिद्ध्याउन अक्षोदतिर लागे ।

हे अगस्त्य मुनि ! तिनीहरूको त्यो त्यस्तो कुरो सुनेर काञ्चनमालिनी अत्यन्त खुशी भई । तब त्यो सती काञ्चनमालिनी उसै दानले कृतार्थ हुँदी भई र स्वस्थानीको नित्यपूजा गर्नका लागि कैलास-तिर उडी । उड्दा हुँदि गन्धर्वकन्या त्यो श्रेष्ठ काञ्चनमालिनी परी त्यस राक्षसलाई उसको त्यो राक्षसयोनिबाट छुटाएर तुरुन्तै आकाशमार्गले उडेर कैलास जाँदा आफूले गरेको परोपकारले गर्दा अत्यन्त प्रसन्न भई ।

हे अगस्त्य मुनि ! जो-जो मनुष्य त्यो गन्धर्वकन्या

काञ्चनमालिनी र त्यो बूढो राक्षसले कहेको यो श्रेष्ठ संवाद भक्तिपूर्वक सुन्दछ, त्यो-त्यो मनुष्य सधैँ कहिल्यै पनि अधर्म गर्नतिर मन दौडाउने आफ्ना इन्द्रियहरूरूप दुष्ट राक्षसहरूद्वारा बाधित अर्थात् पीडित हुँदैन र त्यसको बुद्धि सधैँ धर्ममा लागिरहन्छ । यसैउसले उसका परिवारलाई पनि प्रत्येक वर्ष श्रीस्वस्थानीको पूजा गर्न र त्रिवेणीको मकरस्नान गर्न मन रमाइरहन्छ ।

*।। इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमाराऽगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां काञ्चनमालिनी कैलासगमनं नाम त्रिंशोऽध्यायः ।। ३० ।।*

दोधाटको त्रिवेणी स्नान

# अथ एकत्रिंशोऽध्यायः

## पवित्रा-उपाख्यान

अगस्त्य मुनि सोध्नुहुन्छ - हे कुमारजी ! गोमालाई त स्वयं शिवको, पार्वतीको, सप्तर्षिको कृपा थियो र स्वस्थानीको व्रतलाई निमित्त मात्र तुल्याएर तिनलाई उनैले राजमाता बनाएको हुन सक्छ। सुलोचनाको पूर्वजन्मको अधूरो तपस्या थियो होला र यस जन्ममा पूरा गरेर सूर्यलोकमा चिरस्थायी वास पाइन् होली । काञ्चनमालिनीको कथा मात्र श्रोताहरूले सुन्न पाए, उसको पुण्यफलबाट उसलाई प्राप्त भएको उसको अवस्थालाई राक्षसबाहेक कुनै अरू जनताले प्रत्यक्ष देख्न पाएनन् । तसर्थ, अब यस्तो कथा सुनाइबक्सियोस्, जसले कुनै देवताको अनुग्रह नपाईकन, पूर्वजन्मको अधूरो तपस्याले नधक्क्याईकन, मरेपछि मात्रै पुण्यफल नपाईकन, सच्चरित्रतापूर्वक दुःखी जीवन बिताइरहेको वेलामा कसैको उपदेशको भरमा स्वस्थानीको व्रत-पूजा र त्रिवेणीको मकरस्नान गरेर मात्र त्यस पुण्यका प्रभावले तुरुन्तै यसै लोकमा मकरस्नानको र स्वस्थानीको उद्यापन पूजा गर्दागर्दै त्यसै ठाउँमा, सबका सामु, सबैले

देख्ने गरी औलादौला सम्पत्ति पाएर यसै लोकमा गर्नासम्म सुखसयल गरेका कोही छन् कि छैनन् ? छन् भने त्यस्ताको पनि यौटा कथा सुनाइबक्सियोस् भन्दा कुमारजी आज्ञा गर्नुहुन्छ -

हे अगस्त्य मुनि ! आज म प्रयागको त्रिवेणीको मकरस्नान, साथै स्वस्थानीको व्रत-पूजा, मकरमा गरिने पञ्चरात्र व्रतको विषयमा उहिले यसै कल्पको सत्ताईसौँ चौघडीको तेस्रो युगको दोस्रो चरणमा काम्पिल्य नगरमा घटेको र मैले पनि मुनिहरूका मुखबाट सुनेको यो अति राम्रो कथा तिमीलाई बताउँछु, ध्यानपूर्वक सुन -

अघि कुनै समयमा त्यस काम्पिल्य नगरमा सुमेधा नाम गरेका धर्मात्मा विद्वान् ब्राह्मण थिए, अनि पतिव्रता धर्ममा रहने तिनकी 'पवित्रा' नाम गरेकी पत्नी थिइन् । पूर्वजन्मका कुनै दुष्कर्मले ती बाहुन यस जन्ममा धन-धान्यले रहित भएका गरीब थिए । धेरै मानिसहरूसित माँग्दा पनि कहीँ पनि क्यै पनि भिक्षा पाउन्नथे । न कतै त्यस्तो खानेकुरा पाउँथे, न त कतै राम्रो वस्त्र नै पाउँथे । रूप र यौवनले मनमोहक रूप भएको उस पतिलाई उनकी पतिव्रता पत्नी पवित्रा सधैँ तनमनले सेवा गर्थी । कहिल्यै अतिथिको पूजा

यानि भोजनले सत्कार गर्नुपर्‍यो भने तब त्यो नारी त्यो दिन भोकै रहन्थी र पनि विशालाक्षी अर्थात् बड़ा-बड़ा आँखा हुने त्यो सुन्दरी स्त्री मलिन मुख भएकी हुन्नथी । त्यस्ती अति सुन्दर दाँतवाली यानि हँसिली अनि आफ्नू शरीरलाई सुकाउँदै अर्थात् दुब्लाउँदै गएकी तथापि पतिलाई कहिल्यै पनि घरमा खान छैन भनी नझिझ्याउने आफ्नी पत्नीलाई देखेपछि एकदिन ती सुमेधा ब्राह्मणले आफ्नी भार्याको आफूमा भएको प्रेमबन्धनकन आफ्नू चित्तमा विचारेर अनि ती ब्राह्मणले आफ्नू भाग्यलाई धिक्कार्दै ती आफ्नी प्रियभाषिणी पत्नीलाई भने - 'हे सुन्दरी ! म के गरूँ ? के काम गरूँ ? क्यै गर्दा पनि मैले धन पाउन सकिनँ । ठूला-ठूला, भव्य-भव्य, बेस-बेस मान्छेसँग पनि माँग्दछु, तर ती पनि मलाई क्यै धन दिदैनन् । हे सुन्दरी ! म के गरूँ ? कहाँ जाऊँ ? तिमी नै मलाई क्यै उपाय भन । हे प्रिये ! विना-धनले त गृहस्थ्याइँ चल्दैन । अब तिमी मलाई धन कमाउनका निम्ति परदेश जानका लागि आज्ञा देऊ, धन कमाउनका लागि म परदेश जान्छु । त्यस देशमा पनि जो होनहार हुनु छ, उही नै मिल्दछ । तर उद्यम त गर्नैपर्दछ, उद्यम

नगरीकन कुनै पनि कामको पनि सिद्धि हुँदैन । त्यसैकारण, बुद्धिमान्हरू सधैँभरि कल्याणकारी राम्रो उद्यमको प्रशंसा गर्दछन् ।'

आफ्ना पतिको त्यस्तो कुरो सुनेर, आँखाभरि आँसु डबडबाएर, विनयले गर्धन क्यै झुकाएर त्यो बुद्धिमती नारीले हात जोडेर बोलिन् - 'तपाईं' - भन्दा जानकार यता कोही छैन, तपाईंले नै आज्ञा दिइएकी हुनाले अर्थात् सोधिएकी हुनाले म अहिले यहाँ बोलिरहेकी छु । हमेशै आपत्तिमा परेका पनि हितैषी मनुष्यहरूले हितकै कुरो बोल्दछन्। यस पृथ्वीतलमा जहाँ कहीँ गए पनि पहिले दान गरेको नै मिल्दछ । दान नगरीकन त सुनको मेरु पर्वतमा गए पनि क्यै पाइँदैन । पूर्वजन्ममा जो विद्या दान गरेको छ, पूर्वजन्ममा जो धन दान गरेको छ, पूर्वजन्ममा जो भूमि दान दिएको छ; यस जन्ममा त्यही नै प्राप्त हुन्छ । विधाता ब्रह्माले छैँटीका दिन निधारमा जो लेखिदिएका छन्, त्यही त्यही नै जहाँ गए पनि मिल्दछ । के, नदिएको वस्तु कहीँ मिल्दछ र ? कहीँ गए पनि क्यै मिल्दैन । हे पतिदेव ! पूर्वजन्ममा न मैले, न तपाईंले सत्पात्रहरूको हातमा थोरै वा धेरै कत्ति पनि चोखो धन दान दिएका रहेनछौं । किनकि

यो देशमा यानि यस ठाउँमा वा अर्को ठाउँमा जहाँ गए पनि सबै ठाउँमा पहिले दिएको नै पाइन्छ । विश्वेश अर्थात् विश्वका पालक ईश्वरले अन्न मात्र ता अर्थात् खान मात्र त दान नगरेको भए पनि कुनै प्रकारले दिन्छ यानि पुऱ्याउँछ । त्यसकारण, हे पति ! तपाईंले पनि मैले पनि यहीँ नै बस्नुपर्छ । हे महामान्य स्वामी ! तपाईं नभैकन त म यहाँ एकक्षण मात्र पनि रहन सक्तिनँ । न आमा, न बाबु, न दाजु, न भाइ, न सासू, न ससुरा, न अरू मानिसहरू, न आफ्ना बन्धु-बान्धवहरू, न पुरवासीहरू, न छरछिमेकीहरू ती कोही पनि पति नभएकी नारीलाई सत्कार गर्दैनन् अर्थात् मनपराउँदैनन् । पतिहीन त्यस नारीलाई सबैले 'दुर्भगा' दुष्ट यस्तो ठान्दछन् र नाना प्रकारका निन्दा गर्दछन् । त्यसकारण, यहीँ रहेर जो मिलेको खाई-पिई सुख-सन्तोषपूर्वक विहार गर्नुहोस् । तपाईंको भाग्यअनुसारको प्राप्ति यहीँ नै भइहाल्छ ।

ती पत्नीको यस्तो कुरो सुनेर अनि ती विद्वान् व्यक्ति पनि त्यहीँ नै रहे, कतै गएनन् । यत्तिकैमा रहँदा बस्ता त्यहाँ कुनै दिन मुनिहरूमा श्रेष्ठ कौडिन्य मुनि घुम्दै फिर्दै टुप्लुक्क आइपुगे । ती ऋषिलाई आएको देखेर अत्यन्त खुशी भएका ती ब्राह्मण-

हरूमा श्रेष्ठ सुमेधाले पत्नीसहित जन्याकजुरुक उठेर, शिर झुकाएर बारम्बार नमस्कार ढोग गर्दा भए र भने -'म धन्य छु, भाग्यमानी छु, कृपा गरिएकोले कृतार्थ छु, आजै मेरो जीवन सफल भयो, मेरा अहोभाग्यले प्रभु देखिनुभएको छ अर्थात् तपाईंको दर्शन पाएँ' भनी ती मुनीश्वर कौडिन्यलाई ती सुमेधाले भने र अनि उनलाई सुन्दर आसनमा बसालेर ती कौडिन्य ब्राह्मणलाई अर्घ्यादिले पूजा गरे । तब ती ऋषिलाई विधिपूर्वक बसाली यथेष्ट भोजन गराउँदै क्यै झुकी झूल काडी नगीचै उभिएकी ती स्त्रीहरूमा अति उत्तम पवित्रा ब्राह्मणीले विनयपूर्वक - 'हे विद्वान् ! त्रिकालदर्शी मुनि ! कुन प्रकारले हाम्रो दरिद्रताको नाश होला ?' भनेर ती दयालु ऋषिलाई सोधिन् र फेरि भनिन्- 'हे दयालु ऋषि ! पूर्वजन्ममा दान नदिईकन यस जन्ममा कसरी धन, विद्या र असल गृहिणी पाइन्छन् र ! तैपनि मेरा पति मलाई छाडेर अर्कै देशतिर पराया नगरमा नचिनेका मान्छेसित भिक्षा माँग्नका लागि जाने इच्छा गरिरहनु-भएको छ । हे विद्वान् मुनि ! मैले उहाँलाई कैयन् ठूला-ठूला कारणहरूले घेरेर रोकेकी छु । मैले

उहाँलाई- 'पूर्वजन्ममा नदिएको कुनै पनि वस्तु अलिकति पनि यस जन्ममा कतै पाइन्न' यस्तो भनेर रोकेकी छु । मेरो अहोभाग्यले हे मुनि-श्रेष्ठ ! आज तपाईं यहीं नै आइपुग्नुभो, जो सकेको सेवा सत्कार गर्न पाएँ । तपाईंको कृपा भयो भने मेरो दरिद्रता चाँडै नै नाश हुनेछ, यस कुरामा मलाई कत्ति पनि संशय छैन । हे ऋषि-वर ! कुन उपायले मेरो दरिद्रता निश्चयै नाश हुन्छ ? हे कृपाका सागर मुनीश्वर ! यस बारेमा व्रत-तीर्थ-तपस्या-अनुष्ठान-नियम जे गर्नुपर्ने हो मलाई बताइबक्सियोस्' भन्ने यस्तो ती सुशीला सती साध्वीले कहेको कुरो सुनेर तब ती मुनिश्रेष्ठ कौडिन्यले मनमनै क्यै बेर घोरिएर विचारी अनि सारा पाप-समूहलाई शान्त पार्ने, समस्त दुःख दरिद्रता लघार्ने, अत्यन्त श्रेष्ठ, अति उत्तम, यस लोकमा सम्पत्ति-सुख-ऐश्वर्य प्राप्त हुने व्रतको बारेमा बताउन लागे - 'हे पवित्र मन भएकी पवित्रा देवी ! यसका लागि तिमीले तीन वर्षसम्म संयमपूर्वकको नियम पालना गर्नुपर्छ' भनी अनि प्रयागराजको त्रिवेणीको र त्यस त्रिवेणीमा गरेको माघस्नानको महिमा उनलाई सुनाउन थाल्नुभयो-

'हे पवित्रा ! जस्ता प्रकारले रातभरि चिसिएको

ऋषिले भोजन गर्दै पवित्रालाई उपदेश दिएको

स्थलमा प्रत्येक दिन उदाउन लागेका सूर्यको तातो मिसिएको चिसो-तातोको सङ्गम समय अति आरोग्यकारी र अति पुण्यदायी हुन्छ, त्यस्तै प्रकारले सूर्यको दक्षिणायन सकिएर उत्तरायण आरम्भ हुँदा चिसोमा तातो बढ्दै बढ्दै गएको चिसो-तातोका सङ्गम महीना माघ महीना पनि अति पुण्यदायी हुन्छ । यसैले पौषशुक्ल पूर्णिमाका दिन स्वयं स्वस्थानी देवी पनि पृथ्वीमा ओर्लिएर शालीनदी अर्थात् गण्डकीको किनारमा एक महीनासम्म निवास गर्ने गर्नुहुन्छ। त्यही मौका छोपी स्वर्गका अप्सरा पनि शालीनदीमा न्वाहेर स्वस्थानी देवीको पूजा गर्न त्यहाँ आउने गर्दछन् र उनीहरू त्यस महीनालाई नै स्वस्थानी महीना पनि भन्दछन् । ती देवी नारी जातिकी हुनाले

त्यतिखेर मात्रै त्यहीँ गएर वा घरमै रहेर वा प्रयागको त्रिवेणीको किनारमा बसेर भए पनि श्रद्धा-भक्तिका साथ नियम पालन गरेर उहाँको पूजा-आजा गर्ने आफ्ना भक्तजनहरूलाई विशेष गरी नारी जातिलाई आफू वैकुण्ठ फर्किने दिन सौभाग्य दिने र सौभाग्य स्थायी रहने वर दिनुहुन्छ र वैकुण्ठ जानुहुन्छ । जसरी प्रत्येक राशिमा सूर्य सर्दा त्यो महीनाभरि पृथ्वीका प्राकृतिक वस्तुहरूमा पर्ने सूर्यको शक्ति भिन्नाभिन्नै हुन्छ । जस्तै; उही रूख, उही बोट, उही पोथ्रा, उही बूटा भए पनि तुलाराशिमा सूर्य रहँदा कात्तिकमा ढकमक्क भएर फुल्ने फूलहरू मीनराशिमा सूर्य रहँदा चैत्र महीनामा फुल्दैनन् र चैत्रमा फुल्ने फूलहरू कात्तिकमा फुल्दैनन् । प्रत्येक महीनामा घट्ने भिन्न-भिन्न घटनाहरू ती-ती महीनामा मात्रै घट्तछन् । त्यसै गरी उही नदी, उही पोखरी, उही ताल, उही त्रिवेणी भए पनि मकरमा सूर्य रहँदा माघ महीनामा मात्रै नदीहरूमा र विशेष गरी त्रिवेणी नदीहरूमा सूर्यको पुण्यदायी शक्ति रहेको हुन्छ । त्यसैले माघमा नदी वा त्रिवेणीहरूमा गरेको स्नानले पाप नाश्छ र पुण्य बढाउँछ ।

हे पवित्र मन भएकी पवित्रा ! उसै त पानी

स्वभावैले पवित्र निर्मल स्वच्छ सेतो अनि मैला सफा पार्ने, दाह नाश्ने, शान्ति दिने हुन्छ । जुन पानी सारा प्राणीहरूलाई उद्धार गर्ने, पोषण गर्ने, जीवन दिने यानि बचाउने हुन्छ । यसैउसले सारा वेदमा पानी नै नारायण देवता हुनुहुन्छ भनिन्छ । त्यस्तो नारायणरूप पानीमा विशेष गरेर बगिरहने नदी र अझ त्रिवेणीका जलमा ती सूर्यमा रहेका भएभरका पुण्यदायी शक्तिहरू माघ महीनामा नदीका जलमा रहने भएकोले; जस्तो ग्रहहरूमा सूर्य प्रधान छन्, जस्तो नक्षत्रहरूमा चन्द्रमा प्रधान छन्, त्यस्तै सम्पूर्ण शुभकर्म गर्नका लागि महीनाहरूमा माघ महीना अति श्रेष्ठ छ ।

मकरराशिमा सूर्य भएको माघ महीनामा छिपछिपे पनि निर्मल जलमा प्रातःकालमा गरिएको स्नानले महापापीहरूलाई पनि स्वर्ग दिलाउँछ । हे पवित्रा ! चर-अचरले भरिएको तीनै लोकमा यस्तो योग दुर्लभ छ । अशक्त जन पनि यस योगमा केवल तीनै दिन भए पनि बहँदो नदीमा न्वाहोस् । अशक्त जनले पनि दरिद्रता दूर गर्ने इच्छाले क्यै-न-क्यै दान गरोस् । माघ महीनामा तीनै दिन पनि तीर्थमा स्नान गर्नाले धनी जनहरू धेरै बाँच्ने हुन्छन् । मकरराशिमा सूर्य रहेको पुण्य समयमा पाँच वा

सात वा दुवै दिन भए पनि गरिएको माघस्नान शुक्लपक्षको चन्द्रमा बढ्दै गए- झैं फल बढ्दै जाने हुन्छ, किनकि अतिपुण्य माघमास मनुष्य-हरूलाई पुण्य दिने हुन्छ । स्नान-दानादि कर्मले माघका सबै तिथिहरू असल कार्य गर्नका लागि योग्य छन् । किनकि ती कार्य गर्नेहरूलाई तिनले अक्षय स्थान दिलाउँछन् । त्यसकारण, आफ्नू कल्याण चाहने व्यक्तिले माघ महीनामा बस्ती-बाहिर बहेको जलमा न्वाहुने गर्नू । अब म तिमीलाई माघस्नान गर्ने विधि बताउँछु -

श्रेष्ठ मनुष्यहरूले माघमा व्रत बसेर माघस्नान गर्नका लागि केही नियमहरूको पालन पनि गर्नुपर्छ । धेरै फल पाउनका लागि बुद्धिमान्ले कतिपय खानेकुराहरू पनि छोड्नुपर्छ । महीनाभरि नै भूइँमा सुत्ने गर्नुपर्छ, तिल मिलाएको घिउको हवन गर्नुपर्छ, सनातन वासुदेव भगवान्लाई तीनै काल यानि प्रातः-मध्याह्न-सायम् त्रिकाल पूजा गर्ने गर्नुपर्छ । भगवान् माधवको उद्देश्य गरेर अखण्ड दीपको दान पनि गर्नुपर्छ । दाउरा-काम्लो-वस्त्र-जुत्ता-कुम्कुम (केशर) - घिउ-तेल-डस्ना-सिरक-गलैचा-पर्दा र अन्न यी सब वस्तु पनि हे पवित्रा देवी ! यथाशक्ति आफ्नू सावगास-अनुसार माघमा

दान गर्नुपर्छ । यस्तै नै गरी माघ महीनामा वेद पढेको ब्राह्मणलाई एकै रत्ती भए पनि सुन दान गर्नुपर्छ । यो दान त समुद्र झैं कहिल्यै ननाशिने हुन्छ । माघ महीनामा अर्कालेे बालेको आगो व्रती जनले नताप्नू, वेद नपढेकोले दान नलिनू । माघको अन्तमा सावगास-अनुसार बाहुनहरूलाई भोजन गराउनू । अनि आफ्नू कल्याण चाहने व्यक्तिले तिनलाई दक्षिणा दिनू । एकादशीको व्रतको उद्यापन गरे-झैं त्यसै गरी माघका व्रतको पनि अन्तमा उद्यापन गर्नू । हे पवित्र हृदय भएकी पवित्रा ! अक्षय स्वर्गवास चाहने श्रद्धालु व्यक्तिले अनन्त पुण्य पाउनका लागि तथा श्रीविष्णु भगवान्‌लाई प्रसन्न पार्नका निमित्त अघि कहिएका कुराहरू अवश्य गर्नुपर्छ । "हे गोविन्द ! हे अच्युत ! हे माधव ! मकरमा सूर्य रहेको माघ महीनामा गरिएको यो स्नानले हे भगवन् ! कहे-अनुसारको फल प्रदान गर्नुहोस्" यस्तो मन्त्र उच्चारण गरेर चुपचाप न्वाहुने गर्नू, अनि एकाग्रचित्तले बारम्बार वासुदेव हरिकृष्ण माधवलाई स्मरण गर्नू । नजीकपुँडो जलाशय नभए जलपूर्ण गाग्रोलाई राति बाहिर खुला वायुमा राखेर घरैमा न्वाहे पनि हुन्छ । त्यो त्यस्तो घरको स्नान पनि तीर्थकै

स्नान-बराबर समस्त इच्छाहरूलाई पूरा गर्नेवाला हुन्छ । माघमा नियमपूर्वक व्रत गर्नेले भोजनमा चाहिने सबै वस्तु-सहितको सिधा पनि दान गर्नुपर्छ । त्यस्तो स्नानको प्रभावले त्यो मनुष्य नर्कमा जाँदैन । मनुष्यहरूले तातो पानीले जुन स्नान सदा घरैमा गरिन्छ, मकरमा सूर्य रहदा गरिएको त्यो स्नान सदाको भन्दा छःगुना बढी फल दिने हुन्छ । अनि हे पवित्रा ! बस्ती-बाहिर वापी-पनेरा आदिमा गरिएको माघस्नान चाहिं घरैमा बाह्र वर्ष गरिएको नित्यस्नान-बराबरको हुन्छ । पोखरीमा दुइगुना र सामान्य खोलामा न्वाहेको स्नानफल चारगुना बढी हुन्छ । स्वयं बनेका तालहरूमा गरिएको माघस्नान सदाको स्नानभन्दा सयगुना; त्यस्तै अरू महानदीहरूको सङ्गममा गरिएको माघस्नान चाहिं सदाको भन्दा चार सय गुना बढी फल दिन्छ । हे पवित्रा ! मकरमा सूर्य रहँदा गङ्गामा गरिएको माघस्नानले मात्रै पनि मनुष्यले माथि कहिएका ती सबै फलको हजारगुना फल प्राप्त गर्दछ । माघ महीनामा जो जन गङ्गामा डुब्की मारेर न्वाहुँछन्, ती जन चार हजार युगसम्म स्वर्गबाट फर्कदैनन् । जो मनुष्य माघमा गङ्गामा न्वाहुँछ, उसले प्रतिदिन हजार तोला सुन दान गर्ने गरेको बराबर फल

पाउँछ । माघ महीनामा गङ्गास्नान गर्नाले जो फल प्राप्त हुन्छ त्यस्तो त्यो फलभन्दा प्रयागमा गङ्गा-यमुना-सरस्वतीको सङ्गममा गरिएको माघस्नानले गङ्गाका स्नानको सयगुनाको हजार गुना बेसी फल मिल्छ भनी ऋषिहरूले भन्नुभएको छ । हे पवित्रा ! जनताको कल्याण गर्नमा लागि-परेका ब्रह्माजीले नै पृथ्वीवासी जनताहरूले गरेका थुप्राका थुप्रा पापसमूहलाई भस्मीभूत पार्नका लागि प्रयागराज तीर्थ बनाउनुभएको हो । अब त्यस स्थानको बारेमा राम्रोसित यसको वर्णन सुन-निश्चय नै प्रयागको सेतो-कालो मिसिएको जल भएको सङ्गमकन उहिले ब्रह्माजीले पापरूप पापी पशुमनुष्यहरूको पाप नाशनका लागि नै बनाउनु-भएको थियो । सयकडौँ पाप गरेको पापी व्यक्तिले पनि मकरमा सूर्य रहेको माघ महीनामा त्यो गङ्गा-यमुनाको सेतो-कालो मिश्रित जल भएको प्रयागराजको सङ्गममा न्वाह्यो भने फेरि उसले गर्भवास गर्नुपर्दैन । जुन मनुष्यले पाँचै प्रकारको महापाप गरेको छ, त्यस्तो पञ्चमहापातकीले पनि माघ महीनामा प्रयागको त्रिवेणीमा स्नान गर्‍यो भने त्यो त्यस्तो जन पनि परमपदमा प्राप्त हुन्छ । जहाँ सेतो-कालो जलप्रवाह मिलेको छ, जसका

मनिबाट सरस्वती नदी पनि मिसिएकी छन्, त्यस्तो पवित्र त्यो त्रिवेणी-सङ्गमकन स्वयं सृष्टिकर्ता ब्रह्माजीले नै बनाएको हो । त्यस त्रिवेणीमा न्वाहेर निष्पाप भएका जनहरू तिनको त्यो प्रवाहरूप बाटोबाट सरासर विष्णुलोक जाऊन् भनी निर्माण गरिएको हो ।

हे पवित्रा ! विष्णुको माया पार पाइ नसक्नुको छ । देवताहरूले पनि सहजै जित्न नसकिनेछ । यस्ती बलिई ती वैष्णवी माया पनि माघमा प्रयागमा आइन् भने खाक भएर डढ्दछिन् । माघ महीनामा प्रयागको त्रिवेणीमः डुबुल्की लाएर न्वाह्यो भने ती न्वाहुने व्यक्तिले नै पछि तेजोमय लोकहरूमा अनेकानेक सुखहरू भोगेर अन्तमा भगवान्मा लीन हुन्छन् । जो जन मकरमा सूर्य रहेको माघ महीनामा गङ्गा-यमुनाको सङ्गममा स्पर्श मात्र पनि गर्छ भने त्यसको त्यस पुण्यको बखान गर्न त चित्रगुप्त पनि पूराका पूरा सक्तैनन् । जो मनुष्य मकरराशिमा सूर्य रहेको माघ महीनामा गङ्गा-यमुना-सरस्वतीको सङ्गममा राम्रोसित न्वाहुँछ, त्यसको त्यो पुण्यको महिमा बताउन स्वयं ब्रह्माणी पनि समर्थ हुनुहुन्न । एक सय वर्षभन्दा पनि बेसी वर्ष निराहार बसेको जो फल छ, त्यो फल माघ

महीनामा गङ्गा-यमुना-सरस्वतीको सङ्गम प्रयागमा तीन दिन मात्रै माघमा न्वाहुनाले प्राप्त हुन्छ । अनि सूर्यग्रहणमा कुरुक्षेत्रमा एक हजार भरी सुन दान गर्नाले जो पुण्य प्राप्त हुन्छ, त्यो फल माघमा प्रयागको त्रिवेणीमा दिनहुँ माघभरि न्वाहुनाले नै प्राप्त हुन्छ । हे पवित्रा ! पवित्र अन्तस्करणवाली साध्वी ! एक हजार राजसूय यज्ञ गर्दा जो अविनाशी फल प्राप्त हुन्छ, त्यस्तै फल माघभरि गङ्गा-यमुना-सरस्वतीको सङ्गम प्रयागमा दिनहुँ त्रिवेणी-स्नान गर्नेहरूलाई निश्चय नै प्राप्त हुन्छ । अनि पृथिवीमा जति तीर्थहरू छन्, तथा त्यस्तै जो सात पुरीहरू छन्, ती पनि मकरमा सूर्य रहेको माघ महीनामा प्रयागको त्रिवेणीमा स्नान गर्न मनुष्यरूप धारी आउँछन् । पापीहरूले न्वाहुँदा-न्वाहुदाँ, ती पापीहरूको संसर्गको दोषले सबै तीर्थहरू मैला भएका हुन्छन्, ती तीर्थहरू पनि स्वरूप धारी आएर प्रयागको त्रिवेणीमा माघभरि न्वाहुनाले फेरि स्वच्छ निर्मल वर्णका हुन्छन् अर्थात् शुद्धिन्छन् । हे पवित्र पवित्रा ! सृष्टिको शुरूदेखि प्रत्येक जन्ममा मनुष्यहरूले जो पाप बटुलेका छन् अर्थात् सञ्चित गरेर राखेका छन्, त्यस्ता ती क्रूर हेराइ हेर्ने, रुखो बोलाइ बोल्ने, दयाहीन

व्यवहार गर्ने, द्रव्यपिशाच जनका पनि पूर्वजन्मका ती सबै पाप प्रयागको त्रिवेणीमा माघभरि न्वाहुनाले भस्मीभूत हुन्छन् । प्रयागको त्रिवेणीमा माघ महीनामा तीन दिन मात्र न्वाहुने मनुष्यको पनि उसले वाणी-मन-शरीरले जीवनभर गरेको पाप निश्चय नै बिलाउँछ । जो मनुष्य प्रयागमा त्रिवेणीमा माघ महीनामा तीन दिन मात्र पनि न्वाहुँछ, त्यो मनुष्य; सर्पले आफ्नू पुरानो छाला यानि काँचुली त्यागेझैं; उ पनि आफ्ना सबै पाप त्यागेर स्वर्ग जान्छ । जहाँसुकै पनि बहेकी गङ्गाजी कुरुक्षेत्रको समान मानिएकी छन् अर्थात् गङ्गामा जहाँ न्वाहे पनि कुरुक्षेत्रमा न्वाहेको फल-समान फल मिल्छ । जुन ठाउँमा गङ्गाजी विन्ध्य पर्वतमा ठोकिएकी छन्, त्यहाँ न्वाहुनाले अन्त गङ्गाजीमा न्वाहेको भन्दा दशगुना पुण्यदायी हुन्छिन् । काशीमा उत्तरवाहिनी गङ्गाजी विन्ध्यसङ्गमकी भन्दा सयगुना पुण्यदायी छन् । काशीकी उत्तरवाहिनी गङ्गाभन्दा गङ्गा-यमुना-सरस्वतीको सङ्गमकी गङ्गा सयगुना अधिक फल दिनेवाली छन् । पश्चिमवाहिनी ती गङ्गा त अन्तकाको भन्दा हजारगुना बेसी फल दिन्छिन् । जुन पश्चिमवाहिनी भएको ठाउँको गङ्गाको दर्शन मात्रले पनि ब्रह्महत्या जस्तो

पाप पनि नाश हुन्छ । जो गङ्गाजी यमुनामा मिल्दा पश्चिमवाहिनी भएर मिल्दछिन्, त्यो दुर्लभ स्थानको जलमा माघ महीनामा यदि स्नान गर्न पाइयो भने त्यस न्वाहुनेका करोडौँ-करोड पाप पनि भताभत मर्दछन् र त्यसै पानीमा बिलाउँछन् । हे पवित्रा ! त्यो गङ्गा-यमुना-सरस्वतीको सङ्गम अर्थात् दोभान नै पृथ्वीमा त्रिवेणी नामले प्रसिद्ध छ, जसको जललाई अमृत भनिन्छ, दुर्गति-नाशक भनिन्छ, स्वर्गतिदायक भनिन्छ । त्यस त्रिवेणीमा माघ महीनामा एकछिन मात्रै पनि रहन पाउनु देवता-हरूलाई पनि दुर्लभ छ । ब्रह्मा-विष्णु-महादेव-रुद्र-आदित्य-मरुद्गण-गन्धर्व-लोकपाल-यक्ष-किन्नर-नाग र अणिमा आदि अष्टसिद्धि साधेका सिद्धहरू; त्यस्तै जो अरू तत्त्व-व्याख्याताहरू अनि ब्रह्माणी-पार्वती-लक्ष्मी-शची-मेना-अदिति-दिति आदि सबै देवपत्नीहरू तथा नागपत्नीहरू अनि घृताची-मेनका-रम्भा-उर्वशी-तिलोत्तमा आदि अप्सराका समूहहरू; त्यस्तै समस्त पितृका गणहरू पनि माघ महीनामा प्रयागको त्रिवेणीमा स्नान गर्नका लागि त्यहाँ आउँछन् । तिनीहरू सत्ययुगमा प्रत्यक्षरूपले आउँथे भने अरू युगमा गुप्तरूपले आउँछन् । प्रयागको त्रिवेणीमा माघ महीनामा

तीन दिन मात्रै पनि न्वाहेको जो फल छ, त्यो त्यस्तो फल त पृथ्वीतलमा एक हजार अश्वमेध यज्ञ गर्नेले पनि प्राप्त गर्न सक्तैन भन्ने यति वृत्तान्त सुनाई हे पवित्रा ! उहिले काञ्चनमालिनी नामकी परीले प्रयागमा प्रत्येक माघ-भरिभरि नियमपूर्वक न्वाहेका उसका पुण्यफलहरूमध्ये केवल तीन माघको मात्र त्यस त्रिवेणीको आफ्नू मकरस्नानको फल कुनै राक्षसलाई दिएकी थिई त त्यसै पुण्यफलको प्रतापले त्यो त्यस्तो उग्र पापी पनि राक्षसत्वबाट मुक्त भएको थियो र द्यौताको जस्तै दिव्य देहको भएर विमानमा चढ़ी स्वर्ग गएको थियो भन्ने काञ्चनमालिनीको लामो कथा पनि सुनाउनुभयो ।

तसर्थ, हे पवित्रा ! अब तिमी पनि पूर्वजन्मका बाँकी समस्त पाप पखाल्नका लागि अब आउने पौषशुक्ल दशमीका दिन प्रयागको त्रिवेणीको तटमा गई माघको मासान्तसम्म कल्पवास बस्ने गरी त्यहीँ बसी पौषशुक्ल एकादशीदेखि पूर्णिमासम्म दिनहुँ त्रिवेणीमा तीन-तीन डुबुल्की मारी शरीर शुद्ध्याई त्यसपछि त्रिकाल न्वाही, भइँमै काम्लोमा सुती, ब्रह्मचर्यमा रही, सधैँ दिनको तेस्रो प्रहरमा एकछाक मात्र हविष्य खाई, पूर्णिमाका

दिन हात-गोडाका नङ काटी, त्यसै दिनदेखि त्रिकाल स्नान गर्ने गरी मध्याह्न-स्नानको बाद त्रिवेणीको तीरमै बालुवाको दुई ढिस्को उठाई, त्यसैमा चन्दन-अक्षता-धूप-दीप-नैवेद्यले शिव-पार्वतीको पूजा दिनहुँ गर्ने गरी माघशुक्ल पूर्णिमासम्म स्वस्थानीको व्रत बसेर त्यसै पूर्णिमाका दिन स्वस्थानीको उद्यापन पूजा अर्थात् व्रतसमाप्तिमा गरिने पूजा गरी मकरमा सूर्य सरेर रहेको माघभरि नै तीसै दिनसम्म दम्पतीले नै त्रिकाल तीन-तीन डुबुल्की त्रिवेणीको जलमा नुहाई विशेष गरेर मकरराशिमा एकसाथ सूर्य-चन्द्रमा-पृथ्वी रहेर कुम्भयोग परेको माघे औंसीमा दुवैले सके एक सय आठ-एक सय आठ डुबल्की मारेर त्रिवेणीमा न्वाही सावगास भए गरीबगुरुवालाई ख्वाई या अन्न बटाई यसरी नै दुई माघ बिताई तेस्रो माघमा माघशुक्ल एकादशीदेखि पूर्णिमासम्म कल्याणकारी पञ्चरात्र व्रत गर । जुन व्रत गर्नाले यस लोकमा सम्पत्ति-सुख-शान्ति र परलोकमा मुक्तिसमेत मिल्दछ । त्यो पञ्चरात्र व्रत श्रद्धापूर्वक गर्दा बिहानै त्रिवेणीमा न्वाहेर जो पाँच दिन पूरै पानी मात्र पिएर निराहार रहन्छ त्यो व्रती मरेपछि वैष्णव लोकमा वास पाउँछ । जो जन ती पाँच दिन एक

छाक मात्र फल-फूल खाएर रहन्छ, त्यो जन पहिले का सबै पापबाट छुटेर स्वर्गलोकमा गई रमाउँछ । जो जन ती पाँचै दिनसम्म ब्राह्मण-भोजन गराउँछ, त्यस जनले विधिपूर्वक द्यौता-सहितका सारा दानव र मानवलाई भोजन गराए-बराबरको पुण्य पाउँछ । यी पाँचै दिनसम्म स्वच्छ शुद्ध पानी भरिएको जलपूर्ण घडा जो जन ब्राह्मणलाई दान गर्छ, त्यस जनले नै मानों चर-अचर सहितको सकल ब्रह्माण्ड नै दान गऱ्यो भन्ने ठाने हुन्छ । जो जन ती पाँच दिनसम्म प्रातःस्नान गरेपछि प्रशस्त तिल भरिएको पात्र दान गर्छ, त्यो जन यस लोकमा ठूला-ठूला धेरै सुख भोगेर अन्तमा परलोकमा सूर्यलोकमा गएर आनन्दसित रहन्छ । ती पाँच दिनसम्म जो जन अटल ब्रह्मचर्यपूर्वक रहन्छ, त्यो जन मरेपछि स्वर्गमा गएर स्वर्गका अप्सराहरूका साथ हर्षपूर्वक रहन पाउँछ । हे साध्वि ! हे सज्जन सुशीला ! हे कल्याणी ! तिमी पनि आफ्ना पतिका साथ यस्ता प्रकारको विधिपूर्वकको यो व्रत र स्वस्थानी देवीको पूजा गर, तब तिमी यस लोकमा धन-धान्यले युक्त भएर अनेक सुख-भोग भोगी हे सुव्रते ! पतिव्रते ! मरेपछि स्वर्ग जानेछ्यौ ।' यति भन्दै

खाईवरीसकी उठी बाहिर आई सुमेधाले करुवाले धारो लाएको पानीले हात-मुख धोई चुठचाठ गरी टक्न्याइएको स्वच्छ तौलियाले हात-मुख पुछी, बस्न ठीक पारिएको आसनमा बसी, एकछिन गफगाफले मन बहलाई अनि उठी अल्खा पहिरी, झोली भिरी, कमण्डलु हातमा झुन्ड्याई, खराउ लगाई तब पवित्राले पादस्पर्श गरिएका तथा सुमेधाले परसम्म पुऱ्याई चरणमा ढोगिएका ऋषि कौडिन्यले 'जाऊँ है त' भन्दै आफ्नू बाटो लागे।

हे अगस्त्य मुनि ! तब त्यसरी कौडिन्यले भनिएकी उनले; ती कौडिन्यले जसरी-जसरी बताउनुभएको थियो, त्यसै-त्यसै गरी पौषशुक्ल दशमीदेखि मकरमा सूर्य रहेसम्म प्रयागको त्रिवेणीको तटमा दम्पती साथै भै कल्पवास बसी आफ्ना पतिका साथमा श्रद्धा-भक्तिपर्वूक त्यो व्रत पूरा गरिन्।

त्यो साल असौजमा मलमास परेकोले फागुन लागेपछि परेको माघशुक्ल एकादशीदेखि थालेको पूर्ण उपवासपूर्वकको त्यो पञ्चरात्रे व्रत पूरा भएपछि माघशुक्ल पूर्णिमाका दिन आफ्ना पतिका साथै रहेकी उनले उहीँ स्वस्थानी देवीको उद्यापन पूजा गरिरहेकै ठाउँमा राजभवनबाट आफूतिर आइरहेको राजाको छोरो युवराजलाई देख्ती भइन्। अनि

उहाँ आएको उस युवराजले पवित्रा दम्पतीलाई भव्य-भव्य वस्तुहरूले भरिभराउ भएको नयाँ घर दिएर, स्वस्थानी देवीको व्रत-पूजा र त्रिवेणीमा गरेको पञ्चरात्रव्रतपूर्वकको तीनवर्षे मकरस्नानको संयुक्त पुण्यले प्रेरणा गरिएको त्यस युवराजले आफ्नै इच्छाले विधिपूर्वक ती दम्पतीलाई लगेर त्यस घरमा बसायो र ती ब्राह्मण सुमेधालाई जीविकाका लागि यौटा गाउँको नजीकै एक हजार बङ्की बिघा जमीन कुशे दान दिएर, उनको त्यों तीनवर्षे तपस्याले प्रसन्न भएका राजपुत्रले ती दम्पतीको स्तुति गरेर आफ्नू घर गए ।

त्यसपछि सुमेधाकी आफ्नी पत्नी पवित्राले गरेका पञ्चरात्रे व्रतपूर्वकको स्वस्थानी देवीको व्रतपूजा-का प्रभावले र ती दुवै दम्पतीले मिलेर गरेका त्रिवेणीका तितीसदिने माघस्नानका प्रभावले ती सुमेधा दम्पती पहिलेका सारा पापबाट छुटेका र, सारा सुखका औलादौला साधनले युक्त भएका छँदा यस लोकमा पति-पत्नीका साथमा मिल्ने अनेक सोख-भोग भोगेर अन्तमा विष्णुको पुर वैकुण्ठमा ती पति-पत्नी दुवै जाँदा भए ।

त्यस्ता प्रकारले जो-जो मनुष्यहरू पञ्चरात्र व्रतपूर्वक श्रीस्वस्थानी देवीको अत्यन्त उत्तम व्रत-पूजाका साथ महीनैभरि प्रतिवर्ष त्रिवेणीमा मकर-

स्नान गर्दछन्, तिनको पुण्य र त्यो पञ्चरात्र व्रतबाट प्राप्त भएको पुण्यको बखान गर्न त मबाट पनि पार लाग्दैन अर्थात् त्यस पुण्यको बखान गर्न म सक्तिनँ । पुष्कर आदि गरिएका तीर्थहरू, त्यस्तै गङ्गा आदि गरिएका पुण्यनदीहरू अनि दुहुनी गाईदान जस्ता मुख्य-मुख्य दानहरू त्यसले सबै गरी भन्ने ठाने हुन्छ, जसले पञ्चरात्र व्रतको विधि-पूर्वक स्वस्थानीको व्रत-पूजा गरी । जसले पञ्च-रात्रको व्रत विधिपूर्वक गरी उसले व्रतखण्डमा बताइएका सारा व्रत गरिसिध्यो भन्ने ठाने हुन्छ । जस्तो दुइखुट्टेहरूमा ब्राह्मण श्रेष्ठ हुन्छ, जस्तो चारखुट्टेहरूमा गाई श्रेष्ठ हुन्छ, जस्तो देवताहरूमा इन्द्र श्रेष्ठ छन्, त्यसै गरी महीनाहरूमा चान्द्र र सौर दुवै माघ महीना श्रेष्ठ छन् । माघकृष्ण परेवा-देखि माघशुक्ल पूर्णिमासम्मका तिथिहरूलाई चान्द्र माघ महीना भनिन्छ र मकरराशिमा सूर्य सरेको दिन माघे संक्रान्तिदेखि तीस दिनसम्मको समयलाई सौर माघ महीना भनिन्छ । जुन नर-नारीले जन्म पाएर, जीवनमा एकपल्ट पनि प्रयागको त्रिवेणीमा गएर, विशेष गरी कुम्भयोग परेको माघे औँसीका दिन एकपल्ट पनि मकरस्नान गरेको छैन, त्यस्ता ती जन निश्चय नै जन्मघाती हुन् । त्यस्ता नर-नारी र प्रतिवर्ष स्वस्थानीको व्रत-पूजा नगर्ने नारी-हरू मरेपछि चौरासी लाख कष्टकारक योनि-

हरूमा जन्मदै मर्दै गर्दै जन्मनु-मर्नुपर्ने फेरोमा भट्किरहन्छन् ।

त्यसकारण, हे अगस्त्य मुनि ! लाखौँ वर्षसम्म अनेक कष्ट सहेर बल्ल-बल्ल पाएको यस मनुष्य जन्ममा त्यो चौरासी लाखको फेरोबाट छुट्नका लागि नारीहरूले पञ्चरात्रे व्रतसहित श्रीस्वस्थानीको व्रत-पूजा र नर-नारी दुवैले प्रयागको त्रिवेणीमा कल्याणकारी मकरस्नान अवश्यै गर्ने गर्नुपर्दछ । जो कोही पनि मनुष्यहरू यस संसारमा जन्मिएर त्रिवेणीहरूमा न्वाहीध्वाई शुद्ध-पवित्र भएर सर्वशुद्ध विधिले अर्थात् असल विधिपूर्वक पवित्रा र सुमेधाले जस्तै गरी स्वस्थानीको व्रत-पूजा र त्रिवेणीमा मकरस्नान गर्ने गर्दछन्, त्यस्ता मनुष्यहरू यस लोकमा सुख-सम्पत्ति भोगेर मरेपछि स्वर्गमा इन्द्रले जस्तै सकल सुख-ऐश्वर्य भोगी त्यसपछि तीनै भुवनले स्तुति गरिने भगवान् विष्णुको धाम वैकुण्ठमा जान्छन्।।

*।।इति श्रीस्कन्दपुराणे केदारखण्डे माघमाहात्म्ये कुमाराऽगस्त्यसंवादे श्रीस्वस्थानी-परमेश्वर्या व्रतकथायां पवित्रा पुण्यफलप्राप्तिर्नाम एकत्रिंशोऽध्यायः।।३१।।*

ॐ जय श्रीस्वस्थानी माता

आरती/पुष्पाञ्जलिः

अगस्त्यमुनिशिष्येण तुलसीरामशर्मणा ।
स्नानदानाऽर्चनं प्रोक्तं माघे यत् क्रियते जनैः ।।

*।। इति श्रीस्वस्थानी व्रतकथा समाप्ता ।।*

अब

कथा सुन्ने सबै श्रोताहरूले नित्य कथा सुनिसकेपछि चन्दन अक्षता फूल लिएर उभिई हात जोर्नू अनि वक्ता पण्डितले तल लेखिएका श्लोकहरू पढ्नू-

---

उपनयतु मंगलं वः सकल-जगन्मंगलालयः श्रीमान् ।
दिनकर-किरण-निबोधित-नवनलिनदलनिभेक्षणः कृष्णः ।।
काले वर्षतु पर्जन्यः पृथिवी शस्यशालिनी ।
देशोऽयं क्षोभरहितो ब्राह्मणाः सन्तु निर्भयाः ।।
अपुत्राः पुत्रिणः सन्तु पुत्रिणः सन्तु पौत्रिणः ।
निर्धनाः सधनाः सन्तु जीवन्तु शरदां शतम् ।।
तत्रैव गंगा यमुना च तत्र, गोदावरी सिन्धु सरस्वती च ।
तीर्थानि सर्वाणि वसन्ति तत्र, यत्राऽच्युतोदार-कथा-प्रसंगः ।।
या कुन्देन्दुतुषारहारधवला या शुभ्रवस्त्राऽऽवृता
या वीणा-वरदण्डमण्डितकरा या श्वेतपद्मासना ।
या ब्रह्माऽच्युतशंकरप्रभृतिभिर्देवैः सदा वन्दिता
सा मां पातु सरस्वती भगवती निःशेषजाड्याऽपहा ।।
कायेन वाचा मनसेन्द्रियैर्वा, बुद्ध्यात्मना वा प्रकृतिस्वभावात् ।
करोमि यद्यत् सकलं परस्मै, नारायणायेति समर्पये तत् ।।

श्रीस्वस्थानी देव्यार्पणमस्तु ।

•

यति भनिसकेर कथा सुन्ने जति समस्त श्रोताहरूले पुस्तकको बासामाथि पुष्पाञ्जलि चढाई पुस्तकलाई ढोग गर्नू र आफाप्ना मनको इच्छित वरदान माँग्नू ।

•

# पार्वतीले गरेकी स्वस्थानी देवीको आरती

जय स्वस्थानी देवी ! जय स्वस्थानी माता ! आफ्ना सेवक जनमा सुख–सम्पति दाता ।।
जय स्वस्थानी माता !

कमल फूलमा विराजिएकी, चार मनोहर हात भएकी । चक्र-त्रिशूल-कमल-तरवारहरू हात हातमा लिएकी ॥
जय स्वस्थानी माता !

गुँरास सरिको रातो रङ्गिलो मुखपद्म भएकी । तीनै भुवनका जनको मन हरने हाँसो मन्द लिएकी ।।
जय स्वस्थानी माता !

सुन्दर–सुन्दर वस्त्र लगाई चमर–हवाले खुशिएकी। धूप–दीप–मीठा मसला मनभोगहरू रुचिएकी ।।
जय स्वस्थानी माता !

केरा मेवा सेब पुरेनी अतिशय मन पर्ने । स्वस्थानी देवी कहलाई भक्तहरूको दिल भर्ने ।।
जय स्वस्थानी माता !

मावे पूर्ण अति प्रिय मान्ने आज छ दिन सोही। मेरो इच्छा पूर्ण हओस् प्रभु! वर दिनुहोस् मन फोई।।
जय स्वस्थानी माता !

पूजास्थल यो जगमग गरने, मङ्गल ध्वनि गुंजने । भित्री मेरो इच्छाकन जानी दया गरनोस् मनले ।।
जय स्वस्थानी माता !

भक्ति भावमय यो पूजा प्रभुले अङ्गीकार गरनोस् । मेरो मनमा विराज भई इच्छा-फल दिनुहोस् ।।
जय स्वस्थानी माता !

हरघडि हरपल मेरो ध्यान प्रभुमा नै लागोस् । मनको इच्छा पूर्ण हओस् प्रभु ! भाग्य सधैंभरि जागोस् ।।
जय स्वस्थानी माता !

प्रभुका भक्त सबैले मनवाञ्छित फल पाऊन् । पूजा कथा–श्रवणको फल पाई सब दिन खूब रमाऊन् ।।
जय स्वस्थानी माता !

शरण छु माता ! म सधैं, दया राख जगदम्बे । बाधा–विघ्न सबै हरिद्यौ दयामयि अम्बे ।।
जय स्वस्थानी माता !

माताको यो आरती जो कोही जन गाओस् । ऋद्धि–सिद्धि–सम्पति सब नै चाहे जति पाओस् ।।
जय स्वस्थानी माता !!!

*।। इति ।।*

# शिव आरती

ॐ जय शिव शङ्कर शम्भो, जय गिरिजाधीश,[२] शिव ।
जय जय करूणासागर—२ पशुपति जगदीश ॐ हर० ॥
गिरि कैलाश निवास छ, गण छन् सहचारी[२] शिव ।
मुण्डमाला छ गलामा—२ रूप छ भयहारी ॐ हर० ॥
डमरू त्रिशूल सूशोभित, प्रभुका दुइ करमा,[२] शिव ।
भूषण नाग विराजित—२ बाघाम्वर तनमा ॐ हर० ॥
तीन नयनमा थरि थरि, ज्योति छ दिव्य सदा[२] शिव ।
वाहन वृषभ मनोरह—२ संगमा छन् गिरिजा ॐ हर० ॥
भस्म विलेपन सुन्दर, शिरमा चन्द्रकला[२] शिव ।
कल कल बग्छिन् हर्दम—२ गङ्गा पुण्यजला ॐ हर० ॥
ब्रम्हा, विष्णु, महेश्वर, प्रभुका रूप सबै[२] शिव ।
सृष्टि स्थिति लय सब हुन्—२ शिवलीला प्रभु कै ॐ हर० ॥
वेद पुराण थकित छन्, प्रभुको वर्णनमा,[२] शिव ।
कण कण व्यापक प्रभुको—२ महिमा त्रिभुवनमा ॐ हर० ॥
सुर नर मुनि सब प्रभुकै, निशिदिन ध्यान गरी[२] शिव ।
परमानन्द मगन भै—२ जान्छन् पार तरी ॐ हर० ॥
सच्चिदानन्द परात्पर, सज्जन हितकारी[२] शिव ।
जय जय साम्ब सदाशिव— जय जय त्रिपुरारी ॐ हर० ॥

ॐ हर हर हर महादेव !

•

## भौतिक विज्ञानको परिणाम

गाईले दूध झैं नै किसिम-किसिमका वस्तु दिन्छिन् धराले
गाईको हाड-बोसो-अँतडि यदि झिके दिन्छ के दूध उस्ले ।
त्यस्तै गोरूपधारी धरणि जननिका भित्रका वस्तु झिक्ता
बिग्रेमा सन्तुलन उनको सोच के हाल होला ।।

तान्दैन पानी गिरिले पानी पुग्छ रसातल ।
सुक्छन् छाङा-नदी-ताल, रुखिन्छन् उब्जाने स्थल ।।
आँधी-हुरी-हुण्डरीले उर्लन्छन् छाल सिन्धुमा ।
पस्छन् नगर बस्तीमा सोतरिन्छन् सबै जना ।।
किकौलिन्छन् गेडि जाती, पवटिन्छन् जनाज ती ।
निर्गन्धिन्छन् फूलहरू, निकम्मिन्छन् जडी-बुटी ।।
चराचुरुङ्गी नाशिन्छन्, विरलिन्छन् जनावर ।
निर्मत्स्यिन्छन् नदी नाला, निःसर्पिन्छन् पयस् सब ।।
नाशिन्छ आर्य त्यो धर्म, दूषिन्छ अबला जन ।
संकरिन्छ प्रजावर्ग, पापिन्छ जगतै सब ।।
भौतिकोन्नतिले विश्व निश्चयै नाश गर्दछ ।
सुखको भ्रान्तिले शान्ति-हित-आनन्द हर्दछ ।।
तसर्थ जनले त्यस्तो पिजडामा नकोचिनू ।
स्वावलम्बी बनी आफ्नू धर्म-कर्म नछोडनू ।
योगीका डरले कोही शत्रु पस्तैन देशमा ।
अनिमात्रै प्रजा सारा सक्छन् रहन मोजमा ।।

।। इति ।।